# रामायणका केही आदर्श पात्रहरू

## नेपाली अनुवाद







त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

लेखक—जयदयाल गोयन्दका

सं० २०७३ प्रथम संस्करण ३,०००

❖ मूल्य—

भारतीय—रु० १५ ( पंद्रह रुपये )

नेपाली—रु० २५ ( पचीस रुपये )

प्रकाशक एवं मुद्रक—

**गीताप्रेस, गोरखपुर—२७३००५**

( गोबिन्दभवन-कार्यालय, कोलकाता का संस्थान )

फोन : ( ०५५१ ) २३३४७२१, २३३१२५० ; फैक्स : ( ०५५१ ) २३३६९९७

web : gitapress.org e-mail : booksales@gitapress.org

गीताप्रेस प्रकाशन gitapressbookshop. in से online खरीदें।

2055 Ramayan key Aadrash Patra (Nepali)_Section_1_Back

॥ श्रीहरिः ॥

# परिचय

यस पुस्तिकामा श्रीजयदयाल गोयन्दका ज्यू द्वारा लिखित भगवान् श्रीराम, श्रीलक्ष्मण, श्रीभरत, श्रीशत्रुघ्न तथा भक्त हनुमान्का चरित्रहरूको संग्रह रहेको छ, यसको साथै 'संक्षिप्त वाल्मीकीय रामायणांक' मा प्रकाशित 'श्रीसीताको आदर्श जीवन' पनि जोडिएको छ। यिनीहरूमा श्री हनुमान्जीको जीवन चरित्रलाई छोडेर अन्य सबै चरित्रहरू केवल वाल्मीकीय रामायणकै आधारमा लेखिएका छन्। केवल हनुमान्जीको चरित्र वाल्मीकीय रामायण, रामचरितमानस, पद्मपुराण आदि ग्रन्थहरूका आधारमा विस्तारसँग चित्रित गरिएको छ।

रामायणका यी छ पात्रहरूका चरित्रहरू अत्यन्तै उदात्त एवं सबैका लागि परम आदर्श हुन्। यसकारण यिनीहरूका पावनचरित्रहरूको मनन एवम् अनुकरण गरेर आफ्नो जीवनलाई शुद्ध र सफल बनाउनको लागि यो पुस्तिका अत्यन्तै उपादेय छ।

—प्रकाशक

॥ श्रीहरिः ॥

# विषय-सूची

ॐ

श्रीपरमात्मने नमः

# मर्यादा-पुरुषोत्तम श्रीराम

## आदर्श गुण

रघुकुलभूषण भगवान् श्रीरामचन्द्रजीको समान मर्यादारक्षक आजसम्म अर्को कोही पनि भएन—यस्तो भन्नु अत्युक्ति हुँदैन। श्रीराम साक्षात् पूर्ण ब्रह्म परमात्मा हुनुहुन्थ्यो। वहाँ धर्मको रक्षा र मनुष्यहरूको उद्धारको लागि नै अवतीर्ण हुनुभयो। तर वहाँले सधैं सबैको सामुन्नेमा आफूलाई एक सदाचारी आदर्श मनुष्य नै सिद्ध गर्ने चेष्टा गर्नुभयो। वहाँका आदर्श लीला-चरित्रहरू पढ्ने, सुन्ने र स्मरण गर्ने गर्नाले हृदयमा अत्यन्त पवित्र भावहरूका लहरहरू उठ्न थाल्दछन् र मन मुग्ध हुन जान्छ। वहाँका प्रत्येक कर्महरू अनुकरण गर्न योग्य छन्। श्रीराम सद्गुणहरूका समुद्र हुनुहुन्थ्यो। सत्य, सौहार्द, दया, क्षमा, मृदुता, धीरता, वीरता, गम्भीरता, अस्त्र-शस्त्रहरूको ज्ञान, पराक्रम, निर्भयता, विनय, शान्ति, तितिक्षा, उपरति, संयम, निःस्पृहता, नीतिज्ञता, तेज, प्रेम, त्याग, मर्यादासंरक्षण, एकपत्नीव्रत, प्रजारञ्जकता, ब्राह्मण भक्ति, मातृ-पितृ-भक्ति, गुरुभक्ति, भ्रातृ-प्रेम, मैत्री, शरणागत-वत्सलता, सरलता, व्यवहारकुशलता, प्रतिज्ञापालन, साधुरक्षण, दुष्टदलन, निर्वैरता, लोकप्रियता, अपिशुनता, बहुज्ञता, धर्मपरायणता, पवित्रता आदि सबै गुणहरूको मर्यादा पुरुषोत्तम श्रीराममा पूर्ण विकास भएको थियो। संसारमा यति धेरै महान् गुणहरू एक व्यक्तिमा कहीं पनि पाइँदैनन्। वाल्मीकीय रामायणका बाल र अयोध्याकाण्डहरूको आरम्भमा भगवान् रामका गुणहरूको निकै नै राम्रो वर्णन पाइन्छ, त्यसलाई अवश्य पढ्नुपर्दछ।

माता–पिता, बन्धु–मित्र, स्त्री–पुत्र, सेवक–प्रजा आदिको साथमा उनीहरूको जस्तो असाधारण आदर्श व्यवहार थियो त्यसलाई स्मरण गर्दा नै मन आनन्दमग्न हुनजान्छ। श्रीरामको जस्तो लोकप्रियता कहीं पनि देख्न पाइँदैन। वहाँको लीलाको समयमा यस्तो कुनै प्राणी थिएन, जो श्रीरामको प्रेमपूर्ण मधुर व्यवहारबाट मुग्ध भएको नहोस्।

कैकेयीको श्रीरामसंग अप्रिय र कठोर व्यवहार भगवान्को इच्छा र देवताहरूको प्रेरणाले लोकहितको लागि भएको थियो। यसबाट यो कुरा सिद्ध हुँदैन कि कैकेयीका श्रीराम प्रिय हुनुहुन्नथ्यो, किनभने जुन समयमा मन्थराले रानी कैकेयीलाई रामको विरूद्ध उक्साउने चेष्टा गरेकी थिई त्यतिखेर स्वयं कैकेयीले नै उसलाई यो उत्तर दिएकी थिइन्—

**धर्मज्ञो गुणवान् दान्तः कृतज्ञः सत्यवाञ्छुचिः।**
**रामो राजसुतो ज्येष्ठो यौवराज्यमतोऽर्हति॥**
**भ्रातॄन् भृत्यांश्च दीर्घायुः पितृवत् पालयिष्यति।**
**संतप्यसे कथं कुब्जे श्रुत्वा रामाभिषेचनम्॥**

× × ×

**यथा वै भरतो मान्यस्तथा भूयोऽपि राघवः।**
**कौसल्यातोऽतिरिक्तं च मम शुश्रूषते बहु॥**
**राज्यं यदि हि रामस्य भरतस्यापि तत्तदा।**
**मन्यते हि यथाऽऽत्मानं तथा भ्रातॄंस्तु राघवः॥**

( वा० रा० २। ८। १४–१५, १८–१९)

'हे कुब्जा! राम धर्मका ज्ञाता, गुणवान्, जितेन्द्रिय, कृतज्ञ, सत्यवादी र पवित्र हुनुको साथै महाराज दशरथका जेठा सुपुत्र हुन्, यसकारण युवराज बन्ने अधिकार रामचन्द्रकै हो अर्थात् रामचन्द्र नै युवराज़ बन्न योग्य छन्। पिताले पुत्रहरूलाई पालन गरे झैं उनले

दीर्घजीवी भएर आफ्ना भाइहरू र नोकरहरूको पालन गर्नेछन्। उनको अभिषेकको कुरो सुनेर तिमी किन यति जलिरहेकी छ्यौ? मेरो लागि जसरी भरत आदरका पात्र छन्, त्यसैगरी अझ त्यसभन्दा बढी राम आदरका पात्र छन्। उनी कौसल्याको भन्दा पनि धेरै नै मेरो सेवा गर्ने गर्दछन्। यदि रामलाई राज्य मिलिरहेको छ भने त्यो भरतलाई नै मिलेको सम्झ, किनभने रामचन्द्रजी आफ्ना भाइहरूलाई आफूसमान नै सम्झने गर्दछन्।

कस्तो सुन्दर वात्सल्य प्रेम हो। श्रीराममा कैकेयीको कतिधेरै प्रेम, विश्वास र भरोसा थियो। यसबाट यो कुरा स्पष्ट सम्झन सकिन्छ कि कैकेयीको कठोर व्यवहार उनको स्वभावबाट भएको थिएन, भगवान्‌को इच्छाले नै भएको थियो।

## श्रीरामको मातृ-भक्ति

श्रीरामको मातृभक्ति निकै ठूलो आदर्श थियो। त्यसको ठीक-ठीक वर्णन गर्न असम्भव छ, यसकारण यहाँ सङ्केत मात्र नै लेखिन्छ—

माता कौसल्या र अन्य माताहरूको त कुरै के गर्नु, माता कैकेयी द्वारा कठोर भन्दा कठोर व्यवहार गर्दा पनि माता कैकेयी प्रति श्रीरामको व्यवहार त सधैँ भक्ति र सम्मानले परिपूर्ण नै रहेको थियो। माता कौसल्याको महलबाट फर्किंदाखेरि कुपित भएका भाइ लक्ष्मणसंग वहाँले आफैं यस्तो भन्नुभएको छ—

**यस्या मदभिषेकार्थे मानसं परितप्यते।**
**माता नः सा यथा न स्यात् सविशङ्का तथा कुरु॥**
**तस्याः शङ्कामयं दुःखं मुहूर्तमपि नोत्सहे।**
**मनसि प्रतिसंजातं सौमित्रेऽहमुपेक्षितुम्॥**

**न बुद्धिपूर्वं नाबुद्धं स्मरामीह कदाचन।**
**मातॄणां वा पितुर्वाहं कृतमल्पं च विप्रियम्॥**

(वा० रा० २। २२। ६—८)

'हे लक्ष्मण! मेरो राज्याभिषेकको कारणले जसको चित्तमा सन्ताप भइरहेको छ, यस्ती हाम्री आमा कैकेयीलाई ममाथि कुनै सन्देह नहोस्, त्यस्तो काम गर। वहाँको मनमा सन्देहको कारणले उत्पन्न भएको दुःखको त म एक मुहूर्तको लागि पनि उपेक्षा गर्न सक्दिनँ। मैले कहिल्यै पनि जानेर बुझेर अथवा न जानिकन आमाहरूको अथवा पिता ज्यूको कहिल्यै अलिकति पनि अप्रिय कार्य गरेको छु—यस्तो सम्झना मलाई आउँदैन।'

यस भन्दा अरु पनि थुप्रै उदाहरणहरू श्रीरामको मातृभक्तिका विषयमा पाइन्छन्। चित्रकूटबाट फर्किने बेलामा भरतसँग श्रीरामले भन्नुभएको थियो—'हे भाइ भरत! आमा कैकेयीले तिम्रो लागि कामनाले अथवा राज्य–लोभले यो जुन काम गर्नुभयो त्यसलाई मनमा न ल्याउनू। वहाँसँग सधैं त्यस्तो व्यवहार गर्नू, जस्तो आफ्नी पूजनीय आमाको साथमा व्यवहार गर्नुपर्दछ। त्यतिखेर शत्रुघ्नसंग पनि भन्नुभएको थियो—भाइ शत्रुघ्न! म तिमीलाई आफ्नो र सीताको कसम खाएर भन्दछु कि तिमीले कहिल्यै पनि माता कैकेयी प्रति क्रोध न गर्नू, सधैं वहाँको सेना नै गरिरहनू।' वनमा रहँदाखेरि एकपटक लक्ष्मणले कैकेयीको निन्दा गर्नुभएको थियो त्यस विषयमा रामले यही भन्नुभएको थियो—'भाइ लक्ष्मण! तिमीले माता कैकेयीको निन्दा गर्नुहुँदैन'–इत्यादि। यसबाट यो कुरा थाहा पाइन्छ कि श्रीरामको आफ्ना अन्य आमाहरू प्रति कस्तो श्रद्धा र भक्ति रहेको थियो होला। राजा दशरथका अन्य रानीहरूले राम वन जाँदाखेरि विलाप गर्दै भनेका थिए—

**कृत्येष्वचोदितः पित्रा सर्वस्यान्तःपुरस्य च।**
**गतिश्च शरणं चासीत् स रामोऽद्य प्रवत्स्यति॥**
**कौसल्यायां यथा युक्तो जनन्यां वर्तते सदा।**
**तथैव वर्ततेऽस्मासु जन्मप्रभृति राघवः॥**

( वा० रा० २। २०। २-३)

'जुन राम कुनै काम-काजको विषयमा पिताले केही न भन्दा पनि सारा अन्तःपुरका गति र आश्रय थिए, उनै राम आज वनमा जाँदै छन्। उनी जन्मदेखि नै जसरी आफ्नी आमा कौसल्यासँग व्यवहार गर्थे, त्यसैगरी हामी सबैसँग पनि राम्रो व्यवहार गर्दथे।'

यसभन्दा बढी श्रीरामको मातृभक्तिको प्रमाण अरू के होला?

## पितृ-भक्ति

यसै प्रकारले श्रीरामको पितृ-भक्ति पनि बड़ा अद्भुत थियो। रामायण पढ्ने-व्यक्तिहरूबाट यो कुरो लुकेको छैन कि पिताको आज्ञा पालन गर्नको लागि श्रीरामको वनमा कति उत्साह, साहस र दृढनिश्चय थियो। माता कैकेयीसँग कुराकानी गर्दाखेरि श्रीराम भन्नुहुन्छ—

**अहं हि वचनाद् राज्ञः पतेयमपि पावके।**
**भक्षयेयं विषं तीक्ष्णं पतेयमपि चार्णवे॥**

( वा० रा० २। १८। २८-२९)

**न ह्यतो धर्मचरणं किञ्चिदस्ति महत्तरम्।**
**यथा पितरि शुश्रूषा तस्य वा वचनक्रिया॥**

( वा० रा० २। १९। २२)

'म महाराज दशरथको वचन अनुसार आगोमा पनि कुद्न सक्तछु, तीव्र विषको पान गर्न सक्दछु र समुद्रमा पनि खस्न सक्दछु,

किनभने जस्तो पिताको सेवा र वहाँको आज्ञा पालन गर्नु हो, त्यसभन्दा ठूलो संसारमा अर्को कुनै धर्म छैन।'

यसै प्रकारले त्यहाँ अरू पनि धेरै नै वचनहरू पाइन्छन्। त्यसपछि माता कौसल्यासँग पनि वहाँले भन्नुभएको छ—

**नास्ति शक्तिः पितुर्वाक्यं समतिक्रमितुं मम।**
**प्रसादये त्वां शिरसा गन्तुमिच्छाम्यहं वनम्॥**

( वा० रा० २। २१। ३०)

'म चरणहरूमा शिर राखेर हजुरसँग प्रसन्न हुनको लागि प्रार्थना गर्दछु। ममा पिताको वचन टार्ने शक्ति छैन। यसकारण म वनतिर नै जान चाहन्छु।'

यसको अतिरिक्त लक्ष्मण, भरत र ऋषिमुनिहरूसँग कुराकानी गर्दा पनि रामले पितृ-भक्तिका विषयमा धेरै कुरा भन्नुभएको छ। श्रीरामचन्द्रको बालचरित्रको सङ्क्षेपमा वर्णन गर्दा पनि यो कुरा भनिएको छ कि श्रीराम सधैं आफ्ना पिताको सेवामा लागिरहनुहुन्थ्यो।

## एकपत्नीव्रत

श्रीरामको एकपत्नीव्रत पनि ठूलो आदर्श थियो। श्रीरामले सपनामा पनि कहिल्यै श्रीजानकीजीलाई छोडेर अर्की स्त्रीको वरण गर्नु भएन। सीतालाई वनवास दिएपछि यज्ञमा स्त्रीको आवश्यकता हुँदा पनि वहाँले सीताको नै स्वर्णमयी मूर्तिबाट काम चलाउनुभयो। यदि वहाँले चाहनुहुन्थ्यो भने त कम्तीमा त्यतिखेर त अर्को विवाह गर्न सक्नुहुन्थ्यो। त्यसबाट संसारमा पनि वहाँको कुनै अपकीर्ति हुँदैनथ्यो। तर भगवान् त मर्यादापुरुषोत्तम हुनुहुन्थ्यो। वहाँलाई त यो कुरा चरितार्थ गरेर देखाउनु थियो कि जसरी स्त्रीको लागि पातिव्रत्यको विधान छ, त्यसैगरी पुरुषको

लागि पनि एकपत्नीव्रत परमावश्यक छ। स्त्री-पुरुषको सम्बन्ध भोग भोग्नको लागि होइन, अपितु धर्माचरणको लागि हो।

भगवान् श्रीरामको सीतासँग कति प्रेम थियो, यसको केही दिग्दर्शन सीता-हरण भन्दा पछिको प्रसङ्ग पढ्नाले हुनसक्छ। श्रीराम परमवीर, धीर र सहिष्णु भएर पनि त्यतिखेर एउटा साधारण विरहोन्मत्त बौलाहाको जस्तो गरी पशु-पक्षी, वृक्ष-लहरा र पर्वतहरूसँग सीताको ठेगाना सोध्दै र अनेक प्रकारको विलाप गर्दै एउटा वनबाट अर्को वनमा भौंतारिंदै हिंड्नुहुन्छ। कहीं-कहीं त शोकले विह्वल र मूर्च्छित भएर भुईमा पछारिनुहुन्छ र 'हा सीते! हा सीते!' भन्दै उठ्नुहुन्छ। त्यस समयको वर्णन निकै नै करुणापूर्ण र हृदयविदारक छ।

## भ्रातृ-प्रेम

श्रीरामको भ्रातृ-प्रेम पनि अतुलनीय थियो। केटाकेटीपनादेखि नै श्रीराम आफ्ना भाइहरूको साथमा बडो प्रेम गर्नुहुन्थ्यो। सधैं उनीहरूको रक्षा गर्नुहुन्थ्यो र उनीहरूलाई प्रसन्न राख्ने चेष्टा गर्नुहुन्थ्यो। चारै भाइहरू एकै साथ घोडाहरूमा चढेर विचरण गर्नुहुन्थ्यो। रामचन्द्रजीलाई जुन कुनै उत्तम भोजन अथवा वस्तु मिल्दथ्यो, वहाँले त्यो आफ्ना भाइहरूलाई दिएर पछि आफैं खाने अथवा उपयोगमा ल्याउने गर्नुहुन्थ्यो। यद्यपि श्रीरामको सबै भाइहरूको साथ समान भावले नै पूर्ण प्रेम थियो वहाँको मनमा कुनै भेद थिएन, तैपनि लक्ष्मणको श्रीराम प्रति विशेष स्नेह थियो। वहाँ केही बेरको लागि पनि श्रीरामबाट अलग्ग रहन चाहनुहुन्नथ्यो। श्रीरामको वियोग वहाँको लागि असह्य थियो, यसैकारणले लक्ष्मणजी विश्वामित्रको यज्ञको रक्षाको लागि पनि श्रीरामको साथमै वनमा जानुभयो। त्यहाँ राक्षसहरूको विनाश गरेर दुवै भाइहरू जनकपुरमा पुग्नु भयो। धनुष टुक्रा टुक्रा भयो। त्यसपछि विवाहको तयारी भयो र चारै

भाइहरूको विवाह संगसंगै भयो। विवाहपछि चारै भाइहरू अयोध्यामा आएर प्रेमपूर्वक रहन थाल्नुभयो।

केही दिनपछि आफ्ना मामासँग भरत र शत्रुघ्न मावल जानुभयो। श्रीराम र लक्ष्मण पिताको आज्ञानुसार प्रजाको कार्य गर्नुहुन्थ्यो। श्रीरामको प्रेमपूर्व व्यवहारले वहाँको गुण र स्वभावले सबै नगरनिवासी र बाहिर बस्ने ब्राह्मणादि वर्णका मनुष्यहरू मुग्ध भए। त्यसपछि राजा दशरथले मुनि वसिष्ठको आज्ञा र प्रजाहरूको सम्मतिले श्रीरामको राज्याभिषेकको निश्चय गर्नुभयो। राजा दशरथको मुखबाट आफ्नो राज्याभिषेकको कुरा सुनेर श्रीराम माता कौसल्याको महलमा आउनुभयो। माता सुमित्रा र भाइ लक्ष्मण पनि त्यहीं हुनुहुन्थ्यो। त्यतिखेर श्रीराम आफ्ना भाइ लक्ष्मणसँग भन्नुहुन्छ—

**लक्ष्मणेमां मया सार्धं प्रशाधि त्वं वसुंधराम्।**
**द्वितीयं मेऽन्तरात्मानं त्वामियं श्रीरुपस्थिता॥**
**सौमित्रे भुङ्क्ष्व भोगांस्त्वमिष्टान् राज्यफलानि च।**
**जीवितं चापि राज्यं च त्वदर्थमभिकामये॥**

( वा० रा० २। ४। ४३-४४)

'लक्ष्मण! तिमी मेरो साथमा यस पृथिवीको शासन गर। तिमी मेरो अर्को अन्तरात्मा हौ। यो राज्यलक्ष्मी तिमीलाई नै प्राप्त भएको हो। हे सुमित्रानन्दन! तिमी मनोवाञ्छित भोग र राज्यफलको उपभोग गर। म जीवन र राज्य पनि तिम्रो लागि नै चाहन्छु।'

यसपछि यस लीला-नाटकको पर्दा बदलियो। माता कैकेयीको इच्छानुसार राज्याभिषेक त वन-गमनको रूपमा परिणत हुनगयो। सुमन्त्रद्वारा बोलाइएपछि जब श्रीराम महलमा जानुभयो र माता कैकेयीसँग कुराकानी गर्दा वहाँलाई वरदानको कुरा थाहा भयो, तब

श्रीरामले ठूलो प्रसन्नता प्रकट गर्नुभयो। त्यसपछि वहाँ माता कौसल्यासँग विदा माँग्न जानुभयो, त्यहाँ पनि धेरै कुराकानीहरू भए, तर श्रीरामले एउटा शब्द पनि भरत अथवा कैकेयीको विरुद्ध बोल्नुभएन बरु भरतको बढाइँ गर्दै आमालाई धैर्य दिलाउनुभयो र भन्नुभयो कि— 'भरतले मेरो समान तपाईंको सेवा गर्नेछन्।' त्यतिखेर सीतालाई घरमा बस्नको लागि सम्झाउँदै भन्नुहुन्छ—

**भ्रातृपुत्रसमौ चापि द्रष्टव्यौ च विशेषतः।**
**त्वया भरतशत्रुघ्नौ प्राणैः प्रियतरौ मम॥**

(वा० रा० २। २६। ३३)

'हे सीता! मेरा भाइ भरत र शत्रुघ्न मलाई प्राणभन्दा पनि बढी प्यारा छन्। यसकारण तिमीले उनीहरूलाई आफ्ना भाइ र पुत्रको समान अथवा त्योभन्दा पनि बढी प्रिय सम्झनुपर्दछ।'

वन-गमनको समाचार सुनेर लक्ष्मणको मनमा ठूलो दुःख र क्रोध भयो। वहाँलाई पनि श्रीरामले नीति र धर्मले परिपूर्ण थुप्रै मधुर र कोमल वचनहरूले शान्त पार्नुभयो। फेरि जब लक्ष्मणले साथै हिँड्नका लागि प्रार्थना गर्नुभयो, त्यतिखेर वहाँलाई त्यहीं रहनको लागि सम्झाउँदै श्रीरामले भन्नुभएको छ—

**स्निग्धो धर्मरतो धीरः सततं सत्पथे स्थितः।**
**प्रियः प्राणसमो वश्यो विजेयश्च सखा च मे॥**

(वा० रा० २। ३१। १०)

'लक्ष्मण! तिमी मेरा स्नेही, धर्मपरायण, धीर र सधैं सन्मार्गमा स्थित रहनेवाला हौ। मेरो लागि प्राणसमान प्यारा, मेरो वशमा रहनेवाला, आज्ञापालक र सखा हौ।'

धेरै सम्झाउँदा पनि जब लक्ष्मणले आफ्नो प्रेमाग्रह छोड्नुभएन तब

भगवान् श्रीरामले वहाँलाई सन्तुष्ट गर्नको लागि आफूसँग लैजान स्वीकार गर्नुभयो। वनमा रहँदाखेरि पनि श्रीरामचन्द्रजी हरेक प्रकारले लक्ष्मण र सीतालाई सुख पुऱ्याउने र प्रसन्न राख्ने चेष्टा गर्नुहुन्थ्यो।

सेनासहित भरतजी चित्रकूट आएको खबर पाएर जब श्रीराम-प्रेमको कारणले लक्ष्मणले क्षुब्ध भएर भरतप्रति भन्न नहुने खालको शब्द भन्नुभयो, तब श्रीरामले भरतको प्रशंसा गर्दै भन्नुभयो—

**धर्ममर्थं च कामं च पृथिवीं चापि लक्ष्मण।**
**इच्छामि भवतामर्थे एतत् प्रतिशृणोमि ते॥**
**भ्रातॄणां संग्रहार्थं च सुखार्थं चापि लक्ष्मण।**
**राज्यमप्यहमिच्छामि सत्येनायुधमालभे॥**
**यद् विना भरतं त्वां च शत्रुघ्नं वापि मानद।**
**भवेन्मम सुखं किञ्चिद् भस्म तत् कुरुतां शिखी॥**
**स्नेहेनाक्रान्तहृदयः शोकेनाकुलितेन्द्रियः।**
**द्रष्टुमभ्यागतो ह्येष भरतो नान्यथाऽऽगतः॥**

(वा० रा० २। ९७। ५-६,८,११)

'हे लक्ष्मण! म सत्यतापूर्वक आफ्ना आयुधको कसम खाएर भन्दछु कि म धर्म, अर्थ, काम र सारा पृथ्वी सबै कुरा तिमीहरूकै लागि चाहन्छु। लक्ष्मण! म राज्य पनि भाइहरूको भोग्य सामग्री र उनीहरूको सुखको लागि नै चाहन्छु। त्यसैगरी हे मेरा विनयी भाइ! भरत, तिमी र शत्रुघ्नलाई छोडेर यदि मलाई कुनै सुख हुन्छ भने त्यसमा आगो लागोस्। म सम्झन्छु कि म वनमा आउने कुरा कानमा पर्दा नै भरतको हृदय स्नेहले भरिएको छ, शोकले इन्द्रियहरू व्याकुल भएका छन्, यसकारण उनी मलाई दर्शन गर्न आउँदै छन्। उनले आउनको कुनै अर्को कारण छैन।'

यसको अतिरिक्त त्यहाँ यो पनि भनिएको छ कि 'भरतले मनले पनि मेरो विपरीत आचरण गर्न सक्दैनन्। यदि तिमीलाई राज्यको इच्छा छ भने त म भरतलाई भनेर तिमीलाई राज्य दिलाइदिनेछु।'

लक्ष्मणको भरतका प्रति जो सन्देह थियो, त्यो माथि भनिएका कुरा सुन्दाखेरि नै नष्ट भयो।

त्यसपछि जब भरत आश्रममा पुगेर श्रीरामचन्द्रजीका चरणमा पर्नु भयो, तब श्रीरामले भरतलाई देख्नुभयो। आफ्ना हातहरूले उठाएर हृदयले भरतको आलिङ्गन गर्नुभयो। भरतलाई काखमा बसालेर र वहाँको शिर सुँघेर आदरपूर्वक सबै समाचार सोध्नुभयो र भन्नुभयो—'भाइ! तिमी चीर र जटा धारण गरेर यहाँ किन आयौ?' यस विषयमा भरतले श्रीरामलाई अयोध्या फर्काउने धेरै चेष्टा गर्नुभयो। भरत र रामको प्रेम र व्यवहारलाई देखेर सारा समाज चकित भयो। अन्तमा जब भरतले यो कुरा सम्झिनुभयो कि श्रीरामले आफ्नो प्रतिज्ञा छोड्नुहुन्न, तब भरतले श्रीरामसँग वहाँका चरणपादुकाहरू माँग्नुभयो। भरतको प्रार्थना स्वीकार गरेर श्रीरामले आफ्ना पादुका दिएर भरतलाई विदा गर्नुभयो। वहाँ ती पादुकाहरूलाई आदरपूर्वक शिरमा धारण गरेर अयोध्या फर्कनुभयो। ती पादुकाहरूको राज्याभिषेक गरेर तिनीहरूको आज्ञानुसार भरतजी राज्यको शासन गर्न थाल्नुभयो र आफैं श्रीरामकै जस्तो मुनिवेष धारण गरेर नन्दिग्राममा बस्नुभयो।

त्यसपछि सीता-हरण भयो। लङ्कामाथि आक्रमण गरियो। रावणसँग भयानक युद्ध शुरू भयो। त्यहाँ एक दिन रावणको शक्तिबाणले लक्ष्मण मूर्च्छित भएपछि श्रीरामले जस्तो विलाप लीला गर्नुभयो, त्यसबाट भाइलक्ष्मणमाथि वहाँको कति प्रेम थियो, यसको पत्तो लाग्दछ। त्यहाँ श्रीरामले भन्नुभएको छ—

**यथैव मां वनं यान्तमनुयाति महाद्युतिः।**
**अहमप्यनुयास्यामि तथैवैनं यमक्षयम्॥**
**इष्टबन्धुजनो नित्यं मां स नित्यमनुव्रतः।**
**इमामवस्थां गमितो राक्षसैः कूटयोधिभिः॥**

( वा० रा० ६। १०१। १३-१४)

'महातेजस्वी लक्ष्मणले वनतिर आउँदाखेरि जसरी मेरो अनुसरण गरेका थिए, त्यसैगरी अब म पनि इनीसँग यमलोक जानेछु। यिनी सदा-सर्वदा नै मेरा प्रिय बन्धु र अनुयायी बनेका छन्। हाय! कपट युद्ध गर्नेवाला राक्षसहरूले आज यिनलाई यस अवस्थामा पुऱ्याइदिए।'

जुन भाइ आफ्नो लागि सबै कुरा छोडेर मर्न र सबैप्रकारको कष्ट सहन गर्न तत्पर छन्, उनको लागि चिन्ता र विलाप गर्नु त उचित नै हो, तर श्रीरामले त यस प्रसङ्गमा विलापको पराकाष्ठा देखाएर भ्रातृप्रेमको निकै नै राम्रो शिक्षा दिनुभएको छ।

श्रीहनुमान्जीद्वारा संजीवनी-बूटी मँगाएर सुषेणले लक्ष्मणलाई स्वस्थ बनाइदिए। युद्धमा रावणको मृत्यु भयो। लङ्कामाथि विजय प्राप्त भयो। भगवान् राम अयोध्या फर्कन तयार हुनुभयो। त्यतिखेर विभीषणले श्रीरामलाई बड़ा आदर र प्रेमले नम्रतापूर्वक केही दिन बस्नको लागि भने। तब श्रीरामजीले उत्तर दिनुभयो—

**न खल्वेतन्न कुर्यां ते वचनं राक्षसेश्वर।**
**तं तु मे भ्रातरं द्रष्टुं भरतं त्वरते मनः॥**
**मां निवर्तयितुं योऽसौ चित्रकूटमुपागतः।**
**शिरसा याचतो यस्य वचनं न कृतं मया॥**

( वा० रा० ६। १२१। १८-१९)

'हे राक्षसेश्वर! म तिम्रो कुरो न मानूँ यस्तो कहिल्यै सम्भव छैन,

तर मेरो मन ती भाइ भरतलाई भेट्नको लागि छटपटाइएरहेको छ। जसले चित्रकूटसम्म आएर मलाई फर्काएर लैजानको लागि शिर झुकाएर प्रार्थना गरेका थिए र मैले जसका वचनहरूलाई स्वीकार गरेको थिइनँ। [त्यस्ता प्राण भन्दा प्यारा भाइ भरतसँग भेट गर्न म अब कसरी विलम्ब गर्न सक्छु?]'—इत्यादि।

यसपछि विमानमा बसेर सीता, लक्ष्मण र सबै मित्रहरूको साथमा श्रीराम अयोध्या पुग्नुभयो। त्यहाँ पनि भरतसँग भेट हुँदाखेरि वहाँले अद्भुत भ्रातृप्रेम देखाउनुभएको छ।

राज्य गर्दाखेरि पनि श्रीराम प्रत्येक कार्यमा आफ्ना भाइहरूको परामर्श लिने गर्नुहुन्थ्यो। जुनसुकै प्रकारले उनीहरूलाई सुख पुऱ्याउने र प्रसन्न राख्ने चेष्टा गर्नुहुन्थ्यो।

एक समय लवणासुरका अत्याचारहरूले आत्तिएका ऋषिहरूले लवणासुरलाई मार्नको लागि भगवान्सँग प्रार्थना गरे। भगवान्ले सभामा प्रश्न गर्नुभयो कि 'लवणासुरलाई कसले मार्नेछ? कसको जिम्मामा यो काम राख्ने?' तुरून्त नै भरतले लवणासुरलाई मार्नको लागि उत्साह प्रकट गर्नुभयो। यस विषयमा शत्रुघ्नले भन्नुभयो कि 'भरतजीले त अरू पनि धेरै काम गर्नुभएको छ, हजुरको लागि ठूलोभन्दा ठूलो कष्ट सहन गर्नुभएको छ, फेरि भरतजी ठूला पनि हुनुहुन्छ। म सेवक हुँदाहुँदै यो परिश्रम वहाँलाई दिनुहुँदैन। यस कार्यको लागि त मलाई नै आज्ञा मिल्नुपर्दछ।' त्यसपछि श्रीरामले शत्रुघ्नको प्रार्थना स्वीकार गरेर भन्नुभयो कि त्यहाँको राज्य पनि तिमीले नै भोग्नुपर्नेछ, मेरो आज्ञाको प्रतिवाद न गर्नू।' शत्रुघ्नलाई राज्याभिषेकको कुरा धेरै नराम्रो लाग्यो। वहाँले धेरै पश्चात्ताप गर्नुभयो। तर रामको आज्ञा सम्झेर त्यसलाई स्वीकार गर्नुपऱ्यो। यस प्रकार वचनहरूमा बाँधेर वहाँको इच्छा न हुँदा पनि सानो भाइलाई राज्यसुख दिनु रामजस्ता दाजुको नै काम थियो।

यसपछि प्रतिज्ञामा बाँधिएको कारणले जब भाइ लक्ष्मणको त्याग गर्नुपर्‍यो, त्यस समय श्रीरामको लागि लक्ष्मणको वियोग असह्य भयो। त्यहाँ कविले भनेका छन्—

**विसृज्य लक्ष्मणं रामो दुःखशोकसमन्वितः।**
**पुरोधसं मन्त्रिणश्च नैगमांश्चेदमब्रवीत्॥**
**अद्य राज्येऽभिषेक्ष्यामि भरतं धर्मवत्सलम्।**
**अयोध्यायाः पतिं वीरं ततो यास्याम्यहं वनम्॥**
**प्रवेशयत सम्भारान् मा भूत् कालात्ययो यथा।**
**अद्यैवाहं गमिष्यामि लक्ष्मणेन गतां गतिम्॥**

( वा० रा० ७। १०७। १—३)

'लक्ष्मणको त्याग गरेर श्रीराम दुःख र शोकमा निमग्न हुनुभयो तथा पुरोहित मन्त्री र शास्त्रज्ञहरूलाई बोलाएर उनीहरूलाई भन्न थाल्नु भयो—'म आज नै धर्ममा प्रेम गर्ने वीर भरतको अयोध्याको राज्यमा अभिषेक गर्नेछु र त्यसपछि वनमा जानेछु। चाँडै नै सम्पूर्ण सामग्रीहरू एकत्रित गरियून्। ढीलो नहोस्, किनभने म आज नै जुन ठाउँमा लक्ष्मण गएका छन्, त्यहाँ जान चाहन्छु।'

यस विषयमा भरतले राज्यको निन्दा गर्दै भन्नुभयो—'म हजुर विना पृथ्वीको राज्य त के, केही पनि चाहन्न, यसकारण मलाई पनि साथै हिँड्नको लागि आज्ञा दिनुहोस्।' यसपछि भरतको भनाइ अनुसार शत्रुघ्नलाई पनि मथुराबाट बोलाइयो र मनुष्य-लीलाको नाटक समाप्त गरेर आफ्ना भाइहरू सहित श्रीराम परमधाम जानुभयो।

श्रीरामको भ्रातृ-प्रेमको यो केवल दिग्दर्शन मात्र हो। भाइहरूको लागि नै राज्य ग्रहण गर्नु, भाइ भरतको राज्याभिषेकको प्रस्तावबाट परमानन्दित भएर आफ्नो हक छोडिदिनु, जसको कारण राज्याभिषेक

रोकियो, त्यस्ता भाइकी आमा कैकेयीमाथि पहिलेको झैं भक्ति गर्नु, मुक्त कण्ठले भरतको गुणगान गर्नु, भरतमाथि शङ्का र क्रोध गर्दा लक्ष्मणलाई सम्झाउनु, लक्ष्मणलाई शक्ति-बाण लाग्दाखेरि प्राणत्याग गर्नको लागि तयार हुनु, समय-समयमा भाइहरूलाई पवित्र शिक्षा दिनु, स्वार्थ छोडेर सबैमाथि प्रेम गर्नु, शत्रुघ्नबाट जबर्जस्ती राज्य गराउनु, लक्ष्मणको वियोगलाई सहन न सकेर परमधाममा जानु इत्यादि श्रीरामका आदर्श भ्रातृप्रेमपूर्ण कार्यबाट हामी सबैले यथायोग्य शिक्षा लिनुपर्दछ।

## सख्य-प्रेम

श्रीरामको आफ्ना मित्रहरूसँग पनि अतुलनीय प्रेमको व्यवहार थियो। वहाँ आफ्ना मित्रहरूको लागि जे पनि गर्नुहुन्थ्यो, त्यसलाई केही सम्झिनुहुन्नथ्यो। तर मित्रहरूका सानाभन्दा साना कार्यको पनि भूरि-भूरि प्रशंसा गर्नुहुन्थ्यो। यसको एउटा सानो उदाहरण यहाँ लेखिन्छ। अयोध्यामा भगवान्को राज्याभिषेक भइसकेपछि बाँदरहरूलाई बिदा गर्दाखेरि मुख्य मुख्य बाँदरहरूलाई आफ्नो नजिकै बोलाएर प्रेमपूर्ण दृष्टिले हेर्दै श्रीरामचन्द्रजीले बड़ा सुन्दर र मधुर वाणीमा भन्नथाल्नुभयो—

**सुहृदो मे भवन्तश्च शरीरं भ्रातरस्तथा॥**
**युष्माभिरुद्धृतश्चाहं व्यसनात् काननौकसः।**
**धन्यो राजा च सुग्रीवो भवद्भिः सुहृदां वरैः॥**

(वा० रा० ७। ३९। २३-२४)

'वनवासी बाँदरहरू हो! तपाईंहरू मेरा मित्र हुनुहुन्छ, भाइ हुनुहुन्छ र शरीर हुनुहुन्छ। तपाईंहरूले मलाई संकटबाट बचाउनु भएको छ, यसकारण तपाईंहरू जस्ता श्रेष्ठ मित्रहरूको साथ राजा सुग्रीव धन्य हुनुहुन्छ।' यसको अतिरिक्त अरू पनि धेरै ठाउँमा श्रीरामले

आफ्ना मित्रहरूको साथमा प्रेमको भाव देखाउनुभएको छ। सुग्रीवादि मित्रहरूले पनि भगवान्‌को सख्य प्रेमको बारंबार प्रशंसा गरेका छन्। उनीहरू वहाँको व्यवहारले यति मुग्ध हुन्थे कि उनीहरूलाई धन, जन र भोगहरूको स्मृति पनि हुँदैनथ्यो। उनीहरू हरबखत श्रीरामचन्द्रको लागि आफ्नो प्राण समर्पण गर्नको लागि प्रस्तुत रहन्थे। श्रीराम र वहाँका मित्रहरू धन्य हुनुहुन्छ। मित्रता होस् त यस्तो होस्।

## शरणागतवत्सलता

हुन त श्रीरामको शरणागतवत्सलताको वर्णन वाल्मीकीय रामायणमा ठाउँ-ठाउँमा आएको छ, तर जुन बेला रावणबाट अपमानित भएर विभीषण भगवान् रामको शरणमा आएका छन्, त्यो प्रसंगले त भक्तहरूको हृदयमा उत्साह र आनन्दका लहरहरू उत्पन्न गरिदिन्छ।

धर्मयुक्त र न्यायसंगत कुराभन्दा पनि जब रावणले विभीषणको कुरा मानेनन्, बरू ठूलो सभाको बीचमा उनलाई अपमानित गरिदिए, तब विभीषण त्यहाँबाट निराश र दुःखी भएर श्रीरामको शरणमा आए। उनलाई आकाश मार्गबाट आउँदै गरेको देखेर सुग्रीवले सबै बाँदरहरूलाई सावधान हुनको लागि भने। यत्तिकैमा विभीषणले त्यहाँ आएर आकाशमा नै उभिएरै पुकार्न थाले कि 'म दुरात्मा पापी रावणको भाइ हुँ। मेरो नाम विभीषण हो। म रावणबाट अपमानित भएर भगवान् श्रीरामको शरणमा आएको हुँ। तपाईहरू समस्त प्राणीहरूलाई शरण दिनेवाला श्रीरामलाई म आएको सूचना दिनुहोस्।'

यो कुरा सुनेर सुग्रीव तुरून्त नै भगवान् रामको नजिकै पुगे र राक्षस स्वभावको वर्णन गरेर श्रीरामलाई सावधान गराउँदै रावणका भाइ विभीषण आएको सूचना दिए। साथै यो पनि भने कि राम्ररी परीक्षा गरेर, अघि-पछिको कुरा सोचेर जस्तो उचित सम्झनुहुन्छ, त्यस्तो

गर्नुहोस्।' यस प्रकार त्यहाँ बसेका अन्य बाँदरहरूले पनि आफ्ना-आफ्ना सम्मति दिए। सबैले विभीषणमाथि सन्देह प्रकट गरे, तर श्रीहनुमान्जीले बड़ो नम्रताको साथ धेरै युक्तिहरूद्वारा विभीषणलाई निर्दोष र साँच्चिकै शरणागत सम्झने सल्लाह दिनुभयो। यसप्रकार सबैका कुराहरू सुनिसकेपछि भगवान् श्रीरामले भन्नुभयो—

**मित्रभावेन सम्प्राप्तं न त्यजेयं कथञ्चन।**
**दोषो यद्यपि तस्य स्यात् सतामेतदगर्हितम्॥**

(वा० रा० ६। १८। ३)

'मित्रभावले आएका विभीषणको म कहिल्यै त्याग गर्न सक्दिनँ। यदि उनमा कुनै दोष छ भने पनि उनलाई आश्रय दिनु सज्जनहरूको लागि निन्दित छैन।' यसमा पनि सुग्रीवलाई सन्तोष भएन। उनले शङ्का र भय उत्पन्न गर्ने खालका थुप्रै कुरा भने। तब श्रीरामले सुग्रीवलाई फेरि सम्झाउनुभयो—

**पिशाचान् दानवान् यक्षान् पृथिव्यां चैव राक्षसान्।**
**अङ्गुल्यग्रेण तान् हन्यामिच्छन् हरिगणेश्वर॥**

× × × ×

**बद्धाञ्जलिपुटं दीनं याचन्तं शरणागतम्।**
**न हन्यादानृशंस्यार्थमपि शत्रुं परंतप॥**

× × × ×

**सकृदेव प्रपन्नाय तवास्मीति च याचते।**
**अभयं सर्वभूतेभ्यो ददाम्येतद् व्रतं मम॥**
**आनयैनं हरिश्रेष्ठ दत्तमस्याभयं मया।**
**विभीषणो वा सुग्रीव यदि वा रावणः स्वयम्॥**

(वा० रा० ६। १८। २३,२७,३३-३४)

'हे वानरगणाधीश! यदि म चाहन्छु भने पृथ्वीभरिका ती पिशाच, दानव, यक्ष र राक्षसहरूलाई औंलाको अग्रभागले नै मार्न सक्दछु (यसकारण डराउने कुनै कुरा छैन।) हे परन्तप! यदि कुनै शत्रु पनि हात जोडेर दीन भावले शरणमा आएर अभय याचना गर्दछ भने दया-धर्मको पालन गर्नको लागि उसलाई मार्नुहुँदैन। मेरो त यस्तो व्रत रहेको छ कि जो व्यक्ति एकपल्ट पनि 'म हजुरको हुँ' यस्तो भन्दै शरणमा आएर मबाट रक्षा चाहन्छ भने, उसलाई म समस्त प्राणीहरूबाट निर्भय गरिदिन्छु। (अभय प्रदान गर्दछु)। वानरश्रेष्ठ सुग्रीव! (उपर्युक्त नीति अनुसार) मैले यिनलाई अभय दिइसकें, यसकारण तिमी यिनलाई लिएर आऊ-चाहे यिनी विभीषण हुन् अथवा स्वयं रावण नै किन न हुन्।'

फेरि के थियो र? भगवान्को कुरो सुनेर सबै मुग्ध भए अनि भगवान्को आज्ञानुसार तुरुन्त नै विभीषणलाई लिएर आए। विभीषण आफ्ना मन्त्रीहरूसहित आएर श्रीरामका चरणहरूमा पछारिए र भन्न थाले—'भगवन्? म सबै कुरा छोडेर हजुरको शरणमा आएको छु। अब मेरो राज्य, सुख र जीवन-सबै कुरा हजुरकै अधीनमा छ।' यस पछि श्रीरामले प्रेमपूर्ण दृष्टि र वाणीले उनलाई धैर्य प्रदान गर्नुभयो र लक्ष्मणले समुद्रको जल मँगाएर विभीषणको त्यहीं लङ्काको राज्यमा अभिषेक गरिदिनुभयो।

## कृतज्ञता

वास्तवमा हेर्ने हो भने त भगवान् श्रीरामचन्द्रजी साक्षात् परब्रह्म परमेश्वर हुनुहुन्थ्यो। वहाँको अपार शक्ति थियो, वहाँ स्वयं सबै कुरा गर्न सक्नुहुन्थ्यो र गर्नुहुन्थ्यो, वहाँको कसैले के उपकार गर्न सक्थ्यो? तैपनि आफ्ना आश्रितजनहरूको प्रेमको वृद्धिको लागि उनीहरूको

साधारण सेवालाई पनि ठूलोभन्दा ठूलो रूप दिएर वहाँले आफ्नो कृतज्ञता प्रकट गर्नुभएको छ।

सीतालाई खोज्दा खोज्दा जब श्रीरामले रावणद्वारा युद्धमा मारेर खसाइएका जटायुको दशा देख्नुहुन्छ, त्यस समयको वर्णन छ—

**निकृत्तपक्षं रुधिरावसिक्तं तं गृध्रराजं परिगृह्य राघवः।**
**क्व मैथिली प्राणसमा गतेति विमुच्य वाचं निपपात भूमौ॥**

(वा० रा० ३। ६७। २९)

'जसका प्वाँख काटिएका थिए, सम्पूर्ण शरीर रक्त-रञ्जित (रगताम्मे) भइरहेको थियो, यस्ता गृधराज जटायुलाई हृदयमा लगाएर श्रीरघुनाथजी 'प्राणप्रिया जानकी कहाँ गइन्?' यति भनेर पृथ्वीमा लड्नु भयो।'

फेरि रावणको परिचय दिँदा र सीताजीलाई लिएर गएको कुरा भन्दा-भन्दै नै जब जटायुका प्राणहरू उड्दछन् तब भगवान् श्रीराम आफ्ना हातहरूले जटायुको दाह संस्कार गर्नुहुन्छ। कस्तो अद्भुत कृतज्ञता हो।

यस्तै प्रकारका अरू पनि धेरै प्रसङ्गहरू छन्। वानरहरू, राजाहरू, ऋषिहरू र देवताहरूसंग कुरा गर्दाखेरि वहाँले ठाउँ-ठाउँमा भन्नु भएको छ कि-'तपाईंहरूको सहायता र अनुग्रहले नै मैंले रावणमाथि विजय प्राप्त गरेको हुँ।' जब श्रीहनुमान्‌जीले सीताजीको पत्ता लगाएर भगवान् रामसँग भेट गर्नुभयो, त्यतिखेर उनको कार्यको बार-बार प्रशंसा गरेर अन्तमा रघुनाथ जीले यहाँ सम्म भन्नुभयो कि 'हनुमान्! जानकीको पत्ता लगाएर तिमीले मलाई, समस्त रघुवंशलाई र लक्ष्मणलाई पनि बचाइदियौ। यस प्रिय कार्यको बदलामा केही दिन सकूँ, यस्तो कुनै वस्तु मैंले देखेको छैन।' यसकारण आफ्नो सर्वस्व मानिएको यो

आलिङ्गन नै म तिमीलाई प्रदान गर्दछु।' यति भनेर हर्षले रोमाञ्चित भएका श्रीरामले हनुमान्‌लाई हृदयमा लगाउनुभयो। राज्याभिषेक भइसकेपछि हनुमान्‌लाई बिदा गर्दाखेरि हनुमान्‌को सेवा र कार्यहरूको स्मरण गरेर भगवान् राम भन्नुहुन्छ—

**एकैकस्योपकारस्य प्राणान् दास्यामि ते कपे।**
**शेषस्येहोपकाराणां भवाम ऋणिनो वयम्॥**
**मदङ्गे जीर्णतां यातु यत्त्वयोपकृतं कपे।**
**नरः प्रत्युपकाराणामापत्स्वायाति पात्रताम्॥**

(वा० रा० ७। ४०। २३-२४)

'हनुमान्! तिम्रा एक-एक उपकारहरूका बदलामा म आफ्ना प्राण दिऊँ भने पनि यस विषयमा शेष उपकारहरूको लागि त म तिम्रो ऋणी नै बनिरहनेछु। तिमीद्वारा गरिएका उपकारहरू मेरो शरीरमा नै विलीन होऊन्—तिनीहरूको बदला चुकाउने अवसर मलाई कहिल्यै न मिलोस्, किनभने आपत्तिहरू आउँदाखेरि नै मनुष्य प्रत्युपकारहरूको पात्र हुन्छ।' यसबाट थाहा पाइन्छ कि भगवान् श्रीरामको कृतज्ञताको भाव कति आदर्शमय थियो।

## प्रजारंजकता

श्रीरामचन्द्रजीमा प्रजालाई हरेक प्रकारले प्रसन्न राख्ने गुण पनि ठूलो नै आदर्श थियो। वहाँ आफ्ना प्रजाको पुत्रभन्दा पनि बढी वात्सल्य प्रेमले पालन गर्नुहुन्थ्यो। सदा-सर्वदा उनीहरूको हितमा संलग्न रहनुहुन्थ्यो। यही कारण थियो कि अयोध्यावासीहरूको वहाँमाथि अद्भुत प्रेम थियो।

श्रीरामको वनगमनको, चित्रकूटमा भरतका साथ प्रजासँगको भेटघाटको र परमधाममा जाँदा बखतको वर्णन पढ्नाले थाहा पाइन्छ

कि आरम्भबाट अन्तसम्म प्रजाहरूमा साना ठूला सबै स्त्री-पुरुषहरूको श्रीराममा निकै नै अद्भुत प्रेम थियो। उनीहरू हरेक अवस्थामा श्रीरामको लागि प्राण समर्पण गर्न तयार रहन्थे। उनीहरूलाई भगवान् रामको वियोग असह्य भैसकेको थियो।

जब श्रीरामचन्द्रजी वनमा जानलाग्नुभयो, तब प्रजामध्ये अधिकांश व्यक्तिहरू प्रेममा पागल भएर वहाँकै साथमा लागे। भगवान् श्रीरामले धेरै नै अनुनय-विनय गर्नुभयो, तर अनेक चेष्टा गर्दा पनि वहाँले प्रजालाई फर्काउन सक्नुभएन। आखिर उनीहरूलाई सुतेको अवस्थामा छोडेर नै श्रीरामले वनमा जानुपर्‍यो। त्यस समयको वर्णनमा यो पनि भनिएको छ कि पशु-पक्षीहरू पनि वहाँको प्रेममा मुग्ध थिए। उनीहरूको लागि श्रीरामको वियोग असह्य थियो। परमधाममा जाँदा खेरिको वर्णन पनि यस्तै अद्भुत छ।

यसको अतिरिक्त जुन सीताको वियोगमा श्रीरामले एउटा साधारण विरह व्याकुल कामीपुरुष झैं पागल भएर विलाप गर्नुभएको थियो, यस्ती सीतालाई यद्यपि वहाँ निर्दोष र पति-परायणा हुनुहुन्थ्यो तर पनि, प्रजाको प्रसन्नताको लागि त्यागिदिनुभयो। यसबाट पनि वहाँको प्रजारञ्जकताको आदर्श भाव व्यक्त हुन्छ।

## श्रीरामको महत्त्व

श्रीरामचन्द्रजी साक्षात् पूर्ण ब्रह्म परमात्मा भगवान् विष्णुको अवतार हुनुहुन्थ्यो, यो कुरा वाल्मीकीय रामायणमा ठाउँ-ठाउँमा भनिएको छ। जब संसारमा रावणको उपद्रव (उपद्रो) धेरै बढ्दै गयो, देवता र ऋषिहरू धेरै दुःखी भए, तब उनीहरूले गएर ब्रह्मासँग प्रार्थना गरे। पितामह ब्रह्माले देवताहरूलाई धैर्य धारण गराइरहनुभएको थियो, त्यतिखेर नै भगवान् विष्णु प्रकट हुनुभएको वर्णन यस प्रकार आउँछ—

**एतस्मिन्नन्तरे विष्णुरुपयातो महाद्युतिः।**
**शङ्खचक्रगदापाणिः पीतवासा जगत्पतिः॥**
**वैनतेयं समारुह्य भास्करस्तोयदं यथा।**
**तप्तहाटककेयूरो वन्द्यमानः सुरोत्तमैः॥**

( वा० रा० १। १५। १६-१७)

'यसै बीचमा नै महान् तेजस्वी उत्तम देवताहरूद्वारा वन्दनीय जगत्पति भगवान् विष्णु मेघमाथि चढेका सूर्य झैं गरुडमाथि सवार भई त्यहाँ आइपुग्नुभयो। वहाँको शरीरमा पीताम्बर र हातहरूमा शंख, चक्र र गदा आदि आयुध र चम्किला स्वर्णका बाजूबन्द शोभा पाइरहेका थिए।'

यसपछि देवताहरूको प्रार्थना सुनेर भगवान्ले राजा दशरथको घरमा मनुष्यरूपमा अवतार लिन स्वीकार गर्नुभयो। फेरि त्यहीं अन्तर्धान हुनुभयो।

श्रीरामचन्द्रजीको विवाह भैसकेपछि जब वहाँ अयोध्यातिर फर्किंदै हुनुहुन्थ्यो, त्यतिखेर बाटामा परशुरामजी भेटिनुभयो। श्रीराम विष्णुको अवतार हुनुहुन्छ अथवा हुनुहुन्न- यसको परीक्षा गर्नको लागि वहाँले श्रीरामसँग भगवान् विष्णुको धनुषमा बाण चढाउनको लागि भन्नुभयो, तब श्रीरामचन्द्रजीले तुरुन्त नै परशुरामको हातबाट दिव्य धनुष लिएर त्यसमाथि बाण चढाइदिनुभयो र भन्नुभयो—'यो दिव्य वैष्णव बाण हो। यसलाई कहाँ छोडूँ?' यो देखेर सुनेर परशुरामजी चकित हुनुभयो। वहाँको तेज श्रीराममा गएर मिल्यो। त्यतिखेर श्रीरामको स्तुति गर्दै परशुरामजी भन्नुहुन्छ—

**अक्षय्यं मधुहन्तारं जानामि त्वां सुरेश्वरम्।**
**धनुषोऽस्य परामर्शात् स्वस्ति तेऽस्तु परंतप॥**

( वा० रा० १। ७६। १७)

'शत्रुलाई सन्तप्त गर्ने हे राम! हजुरको कल्याण होस्। यस धनुषमा ताँदो चढाउँनाले मैंले जानें कि हजुर मधुदैत्यलाई मार्नेवाला, देवताहरूका स्वामी, साक्षात् अविनाशी विष्णु हुनुहुन्छ।' यस प्रकार श्रीरामको प्रभावको वर्णन गरेर अनि वहाँको परिक्रमा गरेर परशुरामजी जानुभयो।

रावणको वध भइसकेपछि जब ब्रह्मासहित देवताहरू श्रीरामचन्द्रको नजिकै आए अनि उनीहरूसित कुराकानी गर्दै श्रीरामले यो भन्नुभयो कि—'म त आफूलाई दशरथजीको पुत्र राम नामको मनुष्य नै सम्झन्छु। म जो हुँ, जहाँबाट आएको हुँ।—यो कुरा तपाईंहरू नै बताउनुहोस्।' यसमाथि ब्रह्माजीले सबैको सामुन्ने सम्पूर्ण रहस्य खोलिदिनुभयो। त्यहाँ रामको महत्त्वको वर्णन गर्दै ब्रह्माजी भन्नुहुन्छ—

**भवान्नारायणो देवः श्रीमांश्चक्रायुधः प्रभुः।**
**एकशृंगो वराहस्त्वं भूतभव्यसपत्नजित्॥**
**अक्षरं ब्रह्म सत्यं च मध्ये चान्ते च राघव।**
**लोकानां त्वं परो धर्मो विष्वक्सेनश्चतुर्भुजः॥**
**शार्ङ्गधन्वा हृषीकेशः पुरुषः पुरुषोत्तमः।**
**अजितः खड्गधृग् विष्णुः कृष्णश्चैव बृहद्बलः॥**

(वा० रा० ६। ११७। १३—१५)

'तपाईं साक्षात् चक्रपाणि लक्ष्मीपति प्रभु श्रीनारायणदेव हुनुहुन्छ। तपाईं नै भूत र भविष्यका शत्रुहरूलाई जित्नेवाला र एक शृंगधारी वराह भगवान् हुनुहुन्छ। हे राघव! तपाईं आदि मध्य र अन्तमा सत्यस्वरूप अविनाशी ब्रह्म हुनुहुन्छ। तपाईं सम्पूर्ण लोकहरूका परम धर्म चतुर्भुज विष्णु हुनुहुन्छ। तपाईं नै अजित, पुरुष, पुरुषोत्तम, हृषीकेश तथा शार्ङ्ग धनुषवाला, खड्गधारी विष्णु हुनुहुन्छ र तपाईं नै महाबलवान् कृष्ण हुनुहुन्छ।'

यसैगरी अरू पनि धेरै कुरा भन्नुभयो। त्यहीं राजा दशरथ पनि लक्ष्मणसंग कुराकानी गर्दाखेरि श्रीरामको सेवाको महत्त्व बताएर भन्नुहुन्छ—

**एतत्तदुक्तमव्यक्तमक्षरं ब्रह्मसम्मितम्।**
**देवानां हृदयं सौम्य गुह्यं रामः परंतपः॥**
**अवाप्तधर्माचरणं यशश्च विपुलं त्वया।**
**एवं शुश्रूषताव्यग्रं वैदेह्या सह सीतया॥**

(वा० रा० ६। ११९। ३२-३३)

'सौम्य! यी परन्तप राम साक्षात् वेदवर्णित अविनाशी अव्यक्त ब्रह्म हुन्। यिनी देवताहरूका हृदय र परम रहस्यमय छन्। जनकनन्दिनी सीताको साथमा यिनको सावधानीपूर्वक सेवा गरेर तिमीले पवित्र धर्मको आचरण र ठूलो यशलाई प्राप्त गरेका छौ।'

यसको अतिरिक्त अरू पनि धेरै पटक ब्रह्माजी, देवता र महर्षिहरूले श्रीरामको अमित प्रभावको यथासाध्य वर्णन गरेका छन्। मनुष्य-लीला समाप्त गरेर परमधाममा जाने प्रसंगमा यो कुरा स्पष्ट गरिएको छ कि श्रीराम साक्षात् पूर्णब्रह्म परमेश्वर हुनुहुन्थ्यो। अतः वाल्मीकीय रामायणलाई प्रामाणिक ग्रन्थ मान्नेवाला कुनै पनि मनुष्यले श्रीराम ईश्वर हुन् भन्ने विषयमा शंका गरोस्, यस्तो सम्भव छैन।

## पराक्रम

भगवान् श्रीरामचन्द्रजीको बल पराक्रम, वीरता र शस्त्र कौशलको विषयमा त भन्नु नै के छ र? सम्पूर्ण रामायणमा यसको वर्णन भरिएको छ। कहींबाट पनि युद्धको प्रसङ्ग निकालेर हेर्न सकिन्छ। विश्वामित्रको यज्ञको रक्षा गर्ने बेलामा वहाँले कुरै कुरामा ताड़का र

सुबाहुलाई मारेर मारीचलाई मानवास्त्रद्वारा सय योजन टाढा समुद्रको बीचमा खसाइदिनुभयो।

जनकपुरमा जुन धनुषलाई ठूला–ठूला वीर र महाबली राजाहरूले अत्यन्त परिश्रम गरेर पनि हल्लाउन सकेनन्, त्यसलाई श्रीरामले सजिलैसंग नै उठाएर भाँचिदिनुभयो। विष्णुको धनुषमाथि बाण चढाएर परशुरामजीको तेज हरण गर्नुभयो। पञ्चवटीमा चौध हजार राक्षसहरूलाई थोरै बेरमा कसैको सहायता न लिई मारेर खसाल्नुभयो। बालीजस्तो महायोद्धालाई एउटै बाणले मार्नुभयो। धनुषमाथि बाण चढाउनाले मात्र नै समुद्रमा खलबली मच्चियो र उनी (समुद्रदेव) भयभीत भएर शरणमा आए। श्रीरामले लंकामा गएर भयङ्कर युद्धमा राक्षसहरूसहित कुम्भकर्ण र रावणको वध गरेर सम्पूर्ण संसारमा विजयको डंका बजाइदिनुभयो।

## क्षमा

यस्ता ठूला पराक्रमी भएर पनि श्रीरघुनाथजी यति क्षमाशील हुनुहुन्थ्यो कि वहाँ आफू प्रति गरिएको कसैको अपराधलाई पनि अपराध मान्नुहुन्नथ्यो। वहाँले जहाँ पनि क्रोध र युद्धको लीला गर्नुभयो, त्यो आफ्ना आश्रित र साधु पुरुषहरू प्रति गरिएका अपराधहरूको लागि दण्ड दिन र यसै बहानाले दुष्टहरूलाई निर्दोष बनाउनको लागि नै गर्नुभएको हो। मन्थराजस्ती दासीको अपराधको वहाँले कहीं पनि वास्तै गर्नुभएन।

## उपसंहार

श्रीरामका महत्त्वपूर्ण असङ्ख्य आदर्श गुणहरूको लेखनीद्वारा वर्णन गर्नु असम्भव नै छ। आदिकवि श्रीवाल्मीकिजीदेखि लिएर

आजसम्म सबै मुख्य मुख्य कविहरूले श्रीरामचरितको वर्णन गरेर आफ्नो वाणीलाई सफल बनाउने चेष्टा गरेका छन्, तर श्रीरामका अनन्त गुणहरूको पार पाउन कसैले सकेका छैनन्। मैले त जे जति पनि लेखेको छु, त्यो केवल श्रीवाल्मीकीय रामायणको आधारमा धेरै नै सङ्क्षेपमा लेखेको छु। त्यो पनि मेरो केवल साहस मात्र नै हो। किनभने न त मलाई संस्कृत भाषाको विशेष ज्ञान छ र न त हिन्दी को नै ज्ञान छ। अतः विज्ञ पाठक जनहरूले त्रुटिहरूको लागि क्षमा गर्नु हुनेछ। यसलाई पढेर सुनेर यदि कुनै भगवत्प्रेमी भाइले कुनै अंशमा लाभ उठाउन सक्नुहुनेछ भने त मेरो लागि त्यो बडा सौभाग्यको कुरा हुनेछ र म उनको आभारी रहनेछु।

# सीताजीको आदर्श जीवन

## उपक्रम

संसारका पतिव्रता स्त्रीहरूमा पति-परायणा सीताको स्थान धेरै उच्च छ। रामायणमा वर्णित समस्त स्त्री-चरित्रहरूमा सीताजीको चरित्र सर्वोत्तम, सर्वथा आदर्श र अनुकरण गर्न योग्य छ—यस विषयमा त भन्नु नै के छ र? हिन्दू समाजका सबै स्त्रीहरूको लागि प्रत्येक परिस्थितिमा सीताजीको जीवन पथप्रदर्शक छ। सीताजीको जस्तै असाधारण पातिव्रत्य, त्याग, शील, निर्भयता, शान्ति, क्षमा, सौहार्द, सहनशीलता, धर्म परायणता, नम्रता, संयम, सेवा, सदाचार, व्यवहार, पटुता, साहस, शौर्य आदि गुणहरू एकै साथ संसारकी अर्की कुनै स्त्रीमा शायद नै भेटिएलान्। श्रीसीताजीको समान पवित्र जीवन र अनुपम पतिभक्तिको उदाहरण जगत्को इतिहासमा भेटिन कठिन छ। आरम्भदेखि लिएर अन्तसम्म सीताजीका सबै कुराहरू पवित्र र आदर्श छन्। वहाँको जीवनको कुनै पनि घटना यस्तो छैन, जसबाट हाम्रा आमाहरू, बुहारीहरू, बहिनीहरू र छोरीहरूलाई उत्तम शिक्षा न मिलोस्। संसारमा आजसम्म जति स्त्रीहरू भए, उनीहरूमा सीताजीलाई सर्वशिरोमणि पतिव्रता भन्नुमा कुनै अत्युक्ति न होला।

माया-मृगलाई समात्नको लागि श्रीराम गइसकेपछि रामको समानस्वरमा मारीचद्वारा भनिएका 'हा सीते! हा लक्ष्मण!' आदि शोकयुक्त वचन सुनेर आत्तिएकी सीताजीले लक्ष्मण प्रति जुन कठोर वचन भन्नुभयो, ती वचनहरूमा पनि प्रचुर पति-प्रेमको आदर्श भरिएको थियो, तर श्रीलक्ष्मणजीको सीताजी प्रति जस्तो पवित्र मातृ-भाव थियो, त्यसलाई हेर्दा सीताजीको त्यो व्यवहार अनुचित प्रतीत हुन्छ, यसकारण स्वयं सीताजीले नै अगाडि गएर यसमा पश्चात्ताप गर्नु

भएको छ। हाम्रा आमा–बहिनीहरूले यसबाट यही शिक्षा लिनुपर्दछ कि स्वामी संकटापन्न हुने आशङ्का भएमा वहाँको सहायताको लागि त प्राण समेत दिने चेष्टा गर्नु स्त्रीको कर्तव्य हो, तर आफ्नो कुनै पवित्र अनुयायी अथवा कुटुम्बीलाई तान छेड्नु (व्यङ्ग्यवचन बोल्नु) अथवा कटुवचन बोल्नु उचित होइन।

अघि–पछिका वर्णनहरूबाट यस कुराको अनुमान लगाइन्छ कि माइतमा पनि सीताजीको सबैसंग निकै नै प्रेमको व्यवहार थियो, साना–ठूला सबै स्त्री पुरुषहरू सीताजीलाई हृदयबाट नै चाहन्थे तर वाल्मीकीय रामायणमा श्रीसीताजीको बाल–चरित्रको वर्णन छैन। वन–गमनको समयमा भनिएका सीताजीका नै वचनहरूबाट यो कुरा थाहा हुन्छ कि माता–पिता द्वारा वहाँलाई माइतमा नै धेरै उपयोगी शिक्षा मिलिसकेको थियो, वहाँले त्यहीं नै सदाचार र संयमको अभ्यास गरिसक्नुभएको थियो तथा सुख–दुःखलाई समान सम्झेर हरेक परिस्थितिमा प्रसन्न रहने शक्ति प्राप्त गर्नुभएको थियो। यो कुरा लीलाको दृष्टिले भन्ने गरिन्छ। त्यसो त जानकी जी साक्षात् जगदम्बा नै हुनुहुन्थ्यो।

## सेवाको लागि प्रेमाग्रह

वनको लागि प्रस्थान गर्ने बेलामा जब श्रीरामचन्द्रजी सीताजीसँग भेटघाट गर्नका लागि महलमा जानुभयो र वहाँले एकाएक सीताजीसँग आफ्नो वन–गमनको कुरा बताउनुभयो, त्यतिखेर तुरुन्त नै सीताजीले आफ्नो कर्तव्य निश्चित गरिहाल्नुभयो। वहाँ भन्नुहुन्छ—

**न पिता नात्मजो वाऽऽत्मा न माता न सखीजनः।**
**इह प्रेत्य च नारीणां पतिरेको गतिः सदा॥**
**यदि त्वं प्रस्थितो दुर्गं वनमद्यैव राघव।**

**अग्रतस्ते गमिष्यामि मृद्नन्ती कुशकण्टकान्॥**

× × × ×

**प्रासादाग्रे विमानैर्वा वैहायसगतेन वा।**
**सर्वावस्थागता भर्तुः पादच्छाया विशिष्यते॥**

× × × ×

**सुखं वने निवत्स्यामि यथैव भवने पितुः।**
**अचिन्तयन्ती त्रीँल्लोकांश्चिन्तयन्ती पतिव्रतम्॥**
**शुश्रूषमाणा ते नित्यं नियता ब्रह्मचारिणी।**
**सह रंस्ये त्वया वीर वनेषु मधुगन्धिषु॥**

× × × ×

**अनन्यभावामनुरक्तचेतसं**
**त्वया वियुक्तां मरणाय निश्चिताम्।**
**नयस्व मां साधु कुरुष्व याचनां**
**नातो मया ते गुरुता भविष्यति॥**

( वा० रा० २। २७। ६-७, ९, १२-१३, २३)

'नारीको लागि यस लोक र परलोकमा पति नै आश्रयदिनेवाला हुन्। पिता, पुत्र, माता, सखीहरू तथा आफ्नो यो शरीर पनि नारीको लागि साँच्चिकै सहायक हुँदैनन्। यदि तपाईं आज नै दुर्गम वनतिर प्रस्थान गर्दै हुनुहुन्छ भने म बाटाका कुश-काँढाहरूलाई कुल्चिँदै तपाईंको अघि-अघि हिंड्नेछु। ······ अग्ला अग्ला महलहरूमा रहनु, विमानहरूमा चढेर घुम्नु अथवा अणिमादि सिद्धिहरूद्वारा आकाशमा विचरण गर्नु-यी सबैभन्दा स्त्रीको लागि कुनै पनि अवस्थामा पतिका चरणहरूको छायाँमा रहनु विशेष महत्त्व राख्दछ। ······ यसकारण म वनमा त्यसैगरी निवास गर्नेछु, जसरी आफ्ना पिताको घरमा रहन्थें। वीरशिरोमणे! त्यहाँ मलाई त्रिलोकीको कुनै पनि विषयको चिन्तन हुने

छैन, सधैं पतिव्रता-धर्मको स्मरण गर्दै तपाईंको सेवामा लागिरहने छु।……… नियमपूर्वक रहेर ब्रह्मचर्य व्रतको पालन गर्नेछु र तपाईसँग मीठा-मीठा सुगन्धले भरिएका वनहरूमा विचरण गर्नेछु।……… मेरो हृदयको सम्पूर्ण प्रेम एकमात्र तपाईंलाई नै अर्पित छ, तपाईंलाई छोडेर मेरो मन अन्यत्र कहीं पनि जाँदैन। यदि तपाईंबाट मेरो वियोग भयो भने निश्चय नै मेरो मृत्यु हुनेछ। यसकारण तपाईं मेरो याचनालाई सफल बनाइदिनुहोस्, मलाई सँगै लिएर हिंड्नुहोस्। मेरो साथमा रहनाले तपाईंमाथि कुनै भार पर्ने छैन।'

यस प्रकारका अरू पनि प्रेम र धर्मले भरिएका वचनहरू सीताले त्यस समयमा भन्नुभएको थियो। भगवान् रामको मुखबाट वनका अनेक प्रकारका कष्टहरूलाई सुनेर पनि सीताजी आफ्नो निश्चयबाट अलिकति पनि विचलित हुनुभएन। वहाँ पतिसेवाको सामुन्ने संसारको सुख र वैभवलाई कति तुच्छ सम्झनुहुन्थ्यो, पतिका चरणहरूमा वहाँको कति प्रगाढ प्रेम थियो, वहाँ कसरी तन-मनले श्रीरामको सेवा गर्न चाहनुहुन्थ्यो। यी सबै कुराहरू वहाँका प्रसङ्गहरू पढ्नाले नै ठीकसंग सम्झन सकिन्छन्। भगवान्बाट वन-गमनको आज्ञा प्राप्त गर्नको लागि सीताले हठपूर्वक पूरा कोशिश गर्नुभयो। वहाँले साम, दान, नीति आदि सबै उपायहरूको सहारा लिनुभयो।

अन्तमा सीताजीको प्रेमको विजय भयो। श्रीरामले प्रेमपूर्वक सीतालाई साथैमा लिएर जान स्वीकार गर्नुभयो। यस कथाबाट यो सिद्ध हुन्छ कि—आफ्नो सुखको लागि होइन कि—पति-सेवाको लागि आग्रहपूर्वक पतिको आज्ञालाई दोहोऱ्याउने (सच्याउने) अधिकार स्त्रीलाई रहेको छ। पत्नीले प्रेमले पति सुखको लागि यस्तो आग्रह गर्न सक्दछिन्। सीताजीको यस प्रेमाग्रहलाई सबै प्रशंसा गर्दछन्, कसैले निन्दा गर्दैनन्। किनभने सीताजी केवल पति-प्रेम र पतिसेवाको लागि

नै समस्त सुखहरूलाई तिलाञ्जलि दिएर वनमा जानुभएको थियो, कुनै इन्द्रिय सुखरूप स्वार्थको लागि होइन। यसकारण सीताको यो व्यवहार पतिव्रता-धर्मको दृष्टिले आदर्श मानिएको छ। यसबाट पुरुषहरूले पनि यो शिक्षा ग्रहण गर्नुपर्दछ कि सहधर्मिणी पत्नीको इच्छा न भई उनलाई छोडेर अन्यत्र जानु उचित होइन। यदि पति स्त्रीको सुविधाको लागि उनलाई आफूसँग राख्न चाहँदैनन् भने पनि स्त्रीले कष्ट र आपत्तिको समयमा पतिलाई सुख पुऱ्याउनको लागि उनको सेवा गर्ने उद्देश्यले पतिको साथमा रहनुपर्दछ। यो कुरा अवश्य हो कि सर्वदा सबैको लागि एउटै प्रकारको व्यवस्था हुन सक्दैन, यसकारण समय र परिस्थिति हेरेर नै कार्य गर्नुपर्दछ।

## सहिष्णुता

सीताले वनमा बसेर त ठूला-ठूला कष्टहरूलाई सहर्ष सहन गर्नु भएकै थियो, यसको अतिरिक्त वहाँको सहिष्णुताको एउटा अर्को उदाहरण प्राप्त हुन्छ। वनगमनको बेलामा जब कैकेयीले सीतालाई वनवासको योग्य वस्त्र लगाउन दिनुभयो, त्यतिखेर रनिवासका अन्य स्त्रीहरूको र राजा दशरथको दुःखको त कुरै के गर्नु, वसिष्ठ जस्ता तपोनिष्ठ महर्षिको मन पनि क्षुब्ध भएको थियो र वहाँले बड़ा कठोर शब्दहरूमा कैकेयीको भर्त्सना गर्नुभयो तथा सीतालाई वल्कल वस्त्र (रूखका बोक्रा) लगाउनबाट रोक्नुभयो, तर यस्तो घटनाको समयमा पनि सीताको मनमा कुनै विकार उत्पन्न भएन। सीताजीले त कैकेयी प्रति गरिएको वसिष्ठजीको आलोचनालाई केवल चुपचाप सुनिरहनुभयो। यति मात्र होइन, अपितु सासुको आज्ञानुसार ती वस्त्रहरूलाई धारण पनि गर्नुभयो र सीताजीले वसिष्ठको आज्ञा हुँदा पनि आफ्नो निश्चयलाई फेर्नुभएन। यस प्रसंगमा कविले भनेका छन्—

तस्मिंस्तथा जल्पति विप्रमुख्ये
गुरौ नृपस्याप्रतिमप्रभावे।
नैव स्म सीता विनिवृत्तभावा
प्रियस्य भर्तुः प्रतिकारकामा॥
(वा० रा० २। ३७। ३७)

अर्थात् राजसभामा राजगुरु ऋषिशिरोमणि वसिष्ठजीले यस प्रकार भनिरहँदा पनि प्रिय पतिको अनुकरण गर्ने इच्छा राख्नेवाली अनुपम प्रभावशाली सीताले आफ्नो विचार फेर्नुभएन।

यस प्रसंगबाट पनि यो शिक्षा पाइन्छ कि सासु अथवा उनकै समान बुढी-पाकी कुनै पनि स्त्रीले कुनै कठोर कुरो भनून् अथवा प्रतिकूल व्यवहार गरून् त्यस स्थितिमा त्यसकुरालाई खुशीको साथ सहन गर्नुपर्दछ र विपत्तिको समयमा पति-सेवाको लागि कहीं पतिकै साथ जान्छिन् भने उनकै जस्तो गरी साधारण (सादा) प्रकारले रहनु पर्दछ, शृङ्गार आदिको मोहमा पर्नुहुँदैन।

## वनमा सीताको पति-सेवा

पति-सेवामा नै सधैं प्रसन्न रहने खालकी सीता वनमा गएर आफ्ना समस्त भौतिक सुखहरूलाई बिर्सिनुहुन्छ। वहाँलाई राज-पाट, महल, बगैंचा, धन-दौलत र दास-दासीहरूको केही पनि स्मृति हुँदैन। वहाँ निरन्तर भगवान् श्रीरामको नै सेवामा तत्पर रहनुहुन्थ्यो र वहाँको आज्ञानुसार अर्घ्य, पाद्य आदिद्वारा वनवासी ऋषिहरूको यथायोग्य सत्कार गर्नुहुन्थ्यो। वहाँ निर्जन वनमा घरमा झैं नै निर्भय रहनुहुन्थ्यो। वहाँको मन सधैं श्रीराममा नै संलग्न रहन्थ्यो र वनमा वहाँ श्रीरामको साथ बडा प्रसन्नताले रहनुहुन्थ्यो। चित्रकूटबाट पञ्चवटी जाँदाखेरि जब श्रीरामचन्द्रजी अत्रिको आश्रममा बस्नुभयो त्यतिखेर अनसूयाले

सीतालाई निकै नै सुन्दर पतिव्रताधर्मको उपदेश दिनुभयो। त्यो सुनेर सीताले अनसूयाको उपदेशको समर्थन गर्दै भन्नुभयो—

**यद्यप्येष भवेद्भर्ता अनार्यो वृत्तिवर्जितः।**
**अद्वैधमत्र वर्तव्यं तथाप्येष मया भवेत्॥**
**किं पुनर्यो गुणश्लाघ्यः सानुक्रोशो जितेन्द्रियः।**
**स्थिरानुरागो धर्मात्मा मातृवत्पितृवत्प्रियः॥**

( वा० रा० २। ११८। ३-४)

'यदि मेरा पतिदेव अनार्य र जीविकारहित भएको भए पनि म कुनै दुविधा विना नै यहाँको सेवामा संलग्न रहन्थें। तर जब यहाँ आफ्ना गुणहरूको कारणले नै सबैको प्रशंसाको पात्र बन्नुभएको छ तथा दयालु, जितेन्द्रिय, धर्मात्मा, स्थायी प्रेम गर्नेवाला र माता-पिताकै समान हितैषी हुनुहुन्छ, तब यहाँको सेवाको विषयमा भन्नु नै के छ र?

यसबाहेक त्यही प्रसंगमा सीताले श्रीरामको बल र गुणहरूको बखान गर्दै यो पनि भन्नुभएको छ कि 'जब म पतिको साथमा निर्जन वनमा आउन थालें, त्यसबेला मेरी सासू कौसल्याले मलाई जुन कर्तव्यको उपदेश दिनुभएको थियो, त्यो मेरो हृदयमा जस्ताको त्यस्तै अङ्कित छ। त्योभन्दा पहिले मेरो विवाहकालमा अग्निको नजिकै आमाले मलाई जुन शिक्षा दिनुभएको थियो, त्यो पनि राम्रैसंग कण्ठस्थ छ। म जान्दछु कि स्त्रीको लागि पति नै गुरु र सर्वस्व हुन्छन्। स्त्रीको लागि पति-सेवा भन्दा ठूलो अर्को कुनै तपस्या छैन इत्यादि।

यस प्रसङ्गबाट थाहा पाइन्छ कि सीताका पति-सेवाविषयक भावहरू कति उच्च थिए। माता-पिता र सासूको शिक्षालाई वहाँ कति आदर गर्नुहुन्थ्यो।

# निर्भयता

सीताको तेज र निर्भयताको नमूना पनि हेर्नुहोस्। जुन अतुल पराक्रमी रावणको नाम सुनेर देवताहरू पनि आत्तिने गर्दथे, त्यस्तो रावणलाई सीताजी निर्भयतासंग कस्तो उत्तर दिनुहुन्छ। वहाँ रावणको चंगुलमा परेकी भएर पनि अत्यन्त क्रोधले रावणलाई तिरस्कार गर्दै भन्नुहुन्छ—

**त्वं पुनर्जम्बुकः सिंहीं मामिहेच्छसि दुर्लभाम्।**
**नाहं शक्या त्वया स्प्रष्टुमादित्यस्य प्रभा यथा॥**

× × × ×

**सूर्याचन्द्रमसौ चोभौ पाणिभ्यां हर्तुमिच्छसि॥**
**यो रामस्य प्रियां भार्यां प्रधर्षयितुमिच्छसि।**
**अग्निं प्रज्वलितं दृष्ट्वा वस्त्रेणाहर्तुमिच्छसि॥**
**कल्याणवृत्तां यो भार्यां रामस्याहर्तुमिच्छसि।**
**अयोमुखानां शूलानामग्रे चरितुमिच्छसि।**
**रामस्य सदृशीं भार्यां योऽधिगन्तुं त्वमिच्छसि॥**

( वा० रा० ३। ४७। ३७, ४२—४४)

'तिमी स्याल हौ र म सिंहिनी हुँ, म तिम्रो लागि सर्वथा दुर्लभ छु। तैपनि के तिमी मलाई पाउने इच्छा राख्दछौ?' जसरी कसैले सूर्यको प्रभालाई छुन सक्दैन। त्यसैगरी तिमी मलाई छुन पनि सक्दैनौ। तिम्रो एत्रो आँट छ कि तिमी श्रीरामकी प्यारी स्त्रीको अपहरण गर्न चाहन्छौ? अवश्य पनि तिमी सूर्य र चन्द्रमालाई हातले समात्ने इच्छा गर्दछौ। यदि तिमी श्रीरामकी प्यारी पत्नीमाथि जबर्जस्ती गर्न चाहन्छौ भने त निश्चय पनि बलिरहेको आगोलाई देखेर पनि त्यसलाई कपडामा बाँधेर लैजाने इच्छा गर्दछौ र फलामका तीखा शूलहरूको धारिलो टुप्पामा विचरण गर्न चाहन्छौ।

यसको अतिरिक्त वहाँले यो पनि भन्नुभयो कि तिमीमा र श्रीरामचन्द्रजीमा त्यति नै अन्तर छ जति सिंह र स्यालमा, समुद्र र नालीमा, अमृत र तिउनको झोलमा, सुन र फलाममा, चन्दन र हिलोमा, हात्ती र बिरालोमा, गरुड र कागमा'—इत्यादि।

यसबाट यो सिक्नुपर्छ कि आफ्नो पतिव्रता-धर्म र परमात्माको बलमा कुनै पनि अवस्थामा स्त्रीले डराउनु उचित होइन। अन्यायको प्रतिवाद निर्भयताले गर्नुपर्दछ। परमात्माको बलमा साँच्चिकै विश्वास भयो भने त भगवान्‌ले अवश्य नै सहयोग गर्नुहुनेछ।

## धर्म-पालनमा दृढ़ता

कुनै प्रकारको प्रलोभनले, भयले अथवा निकै ठूलो विपत्ति आउँदा पनि धर्मको त्याग गर्नुहुँदैन—यस कुराको शिक्षा पनि हामीलाई सीताजीको जीवनबाट प्राप्त हुन्छ। लंकाको अशोक वाटिकामा सीताको धर्म नष्ट गर्नको लागि दुष्ट रावणले थोरै चेष्टा गरेनन्। उनी स्वयं आफ्ना स्त्रीहरूको साथमा अशोक वाटिकामा गए, सीतालाई आफ्नो वैभव देखाएर वहाँको मनलाई विचलित गर्नको लागि ठूला-ठूला प्रलोभन दिए, बारम्बार अनुनय-विनय गरे। यसमा पनि सीता आफ्नो धर्ममा अटल रहेर दुष्ट रावणको नीतियुक्त शब्दहरूमा सधैं तिरस्कार नै गर्नुहुन्थ्यो।

जब रावणले पटक-पटक श्रीराम प्रति कठोर शब्द भने र सीताजीलाई अनेक प्रकारको भय देखाए, यहाँसम्म कि मायाले बनेको श्रीरामको शिर पनि ल्याएर सीताको सामुन्ने राखिदिए, त्यतिखेर यी सबै कुराहरूबाट महान् दुःखी भएर सीता मर्नको लागि तयार हुनुभयो तर धर्मबाट डगमगाउने भावना कहिल्यै सपनामा पनि वहाँको मनमा उठेन। वहाँको मन दिन-रात श्रीरामका चरणहरूमा नै

लागिरहन्थ्यो। राक्षसीहरूले पनि सीतालाई भय र प्रलोभन देखाएर धेरै नै कष्ट दिए तर सीता त सीता नै ठहरिनुभयो, धर्मत्यागको कुरा नै के गर्नु, वहाँले विपत्तिबाट बच्नको लागि छलले पनि कहिल्यै आफ्नो बाहिरी व्यवहारमा पनि कुनै दोष आउन दिनुभएन। वहाँको निर्मल र धर्मले परिपूर्ण मनमा कहिल्यै कुनै नराम्रो विचार पनि आएन। सुन्दरकाण्डमा यो प्रसङ्ग ध्यानपूर्वक पढ्न योग्य छ। अशोक वाटिकामा बसेर सीता कसरी जीवन बिताउनुहुन्छ—यसको सुन्दरकाण्डमा अत्यन्तै हृदयस्पर्शी वर्णन छ। वहाँ विलाप गर्दै भन्नुहुन्छ—

**न हि मे जीवितेनार्थो नैवार्थैर्न च भूषणैः।**
**वसन्त्या राक्षसीमध्ये विना रामं महारथम्॥**

× × × ×

**धिङ् मामनार्यामसतीं याहं तेन विना कृता।**
**मुहूर्तमपि जीवामि जीवितं पापजीविका॥**
**चरणेनापि सव्येन न स्पृशेयं निशाचरम्।**
**रावणं किं पुनरहं कामयेयं विगर्हितम्॥**

(वा० रा० ५। २६। ५, ७-८)

'महारथी श्रीरामजी विना यी राक्षसीहरूको बीचमा रहेर मलाई जीवनबाट, धनबाट र आभूषणहरूबाट कुनै प्रयोजन छैन। म धेरै अनार्या र असती हुँ। मलाई धिक्कार छ, जो रामबाट अलगग भएर म एक मुहूर्त पनि यस पापी जीवनलाई धारण गरिरहेकी छु। राक्षस रावणलाई त म बायाँ गोडाले पनि छुन सक्दिनँ। फेरि उनैलाई रुचाउने त कुरो नै के छ र'— इत्यादि।

यसबाट स्त्रीहरूले यो शिक्षा ग्रहण गर्नुपर्दछ कि पतिको वियोगमा भयंकर आपत्ति आउँदा पनि पतिका नै चरणहरूको ध्यान रहोस्। मनमा

भगवान् र धर्मको बलमा पूरा वीरता, धीरता र साहस रहोस्। स्वधर्मपालनको लागि प्राणहरूको पनि आहुति दिनका लागि सधैं तयार रहोस्।

## सावधानी

सीताजीको सावधानी पनि अनुकरण गर्न योग्य छ। जब हनुमान्जी वाटिकामा जानुभयो, तब सीताले आफ्नो बुद्धि कौशलले हरेक प्रकारले वहाँको परीक्षा गर्नुभयो। जबसम्म वहाँलाई यो विश्वास थिएन कि हनुमान् साँच्चै नै श्रीरामका दूत हुन् र मलाई खोज्नको लागि नै यहाँ आएका हुन् तबसम्म वहाँले हनुमान्संग खुल्ला दिलले कुरा पनि गर्नुभएन। हनुमान्संग धेरै कुराकानी भइसकेपछि कवि भन्दछन्—

**एवं विश्वासिता सीता हेतुभिः शोककर्शिता।**
**उपपन्नैरभिज्ञानैर्दूतं तमधिगच्छति॥**

(वा० रा० ५। ३५। ८५)

अर्थात् यस प्रकार विश्वसनीय कारणहरू तथा श्रीराम र लक्ष्मणका शारीरिक चिह्नहरूको वर्णन गरेर हनुमान्जीले शोकले दुर्बल भएकी सीतालाई आफ्नो विश्वास दिलाउनुभयो, तब वहाँले हनुमान्लाई रामको दूत सम्झनुभयो।

यसपछि जब हनुमान्ले राम-नामाङ्कित मुद्रिका (औंठी) प्रदान गरेर विश्वासलाई अझै दृढ बनाइदिनुभयो, तब सीताजीले वहाँलाई आफूसँग कुराकानी गर्ने आज्ञा दिनुभयो।

**अर्हसे च कपिश्रेष्ठ मया समभिभाषितुम्।**
**यद्यसि प्रेषितस्तेन रामेण विदितात्मना॥**

(वा० रा० ५। ३६। १०)

'हनुमान्! यदि तिमी आत्मज्ञानी रामद्वारा पठाइएका हौ भने मसंग कुराकानी गर्न सक्दछौ।'

## प्रेम

सीताको श्रीराममा अलौकिक प्रेम थियो। हनुमान्‌जीबाट श्रीरामचन्द्रजीको सन्देश पाएर वहाँको आनन्दको सीमा नै रहँदैन। कुराकानी शुरू हुँदा नै वहाँ हनुमान्‌सँग पहिले आफ्ना स्वामी र देवरको कुशल-समाचार नै सोध्नुहुन्छ। आफैं पनि वहाँका गुणहरूको पटक-पटक वर्णन गर्नुहुन्छ। कुरा गर्दा गर्दै प्रेममा विह्वल भएर रुन थाल्नुहुन्छ।

पहिले जब हनुमान् प्रत्यक्ष हुनुभएको थिएन, त्यतिखेर वहाँको मुखबाट श्रीरामचन्द्रजीको चरित्रको वर्णन सुनेर कैयौं प्रकारको कल्पना गर्दै सीता स्वयं नै आफ्नो स्थितिको वर्णन यस प्रकार गर्नुहुन्छ—

**रामेति रामेति सदैव बुद्ध्या विचिन्त्य वाचा ब्रुवती तमेव।**
**तस्यानुरूपं च कथां तदर्थामेवं प्रपश्यामि तथा शृणोमि॥**
**अहं हि तस्याद्य मनोभवेन सम्पीडिता तद्‌गतसर्वभावा।**
**विचिन्तयन्ती सततं तमेव तथैव पश्यामि तथा शृणोमि॥**

( वा० रा० ५। ३२। ११-१२)

'म बुद्धिले निरन्तर श्रीरामको नै चिन्तन गरिरहन्छु। वाणीले वहाँके वर्णन गर्दछु। त्यस अनुसार वहाँका विषयका कुराहरू म सुनिरहन्छु र त्यस्तै नै घटना म देखिरहन्छु। मेरा समस्त भावहरू वहाँमा समर्पित छन्, वहाँको अभिलाषाले सन्तप्त भएर म निरन्तर वहाँको नै चिन्तन गरिरहन्छु। यसकारण त्यस्तै नै सुन्दछु र देख्दछु।'

भगवान् श्रीराममा सीताको कति प्रेम थियो, आफ्ना प्रियतमसंग भेटघाट गर्नको लागि वहाँको हृदयमा कति व्याकुलता थियो- यो कुरा रावणद्वारा सीतालाई हरण गरेदेखि लङ्का विजयसम्मका वहाँका

विविध वचनहरूबाट थाहा पाइन्छ। त्यस प्रसङ्गलाई पढ्दा-पढ्दा कठोर हृदयको मनुष्य पनि रुन थाल्दछ! फेरि भावुकहृदयको विषयमा त भन्नु नै के छ र? भगवान् श्रीरामले सीताजीको प्रेमको बारम्बार प्रशंसा गर्नुभएको छ। वहाँले स्वयं साधारणभन्दा साधारण विषयी मनुष्यको झैं सीताको लागि विलाप गरेर सीताको प्रेमलाई प्रमाणित गर्नुभएको छ। वहाँ सीताको वियोगमा व्याकुल भएर रूँदै र विलाप गर्दै ऋषिकुमारहरू, सूर्य, पवन, पशु-पक्षी र वृक्ष लहराहरूसँग पनि सीताको ठेगाना सोध्दै डुल्नुभएको छ।

यसबाट यो सम्झनुहुँदैन कि भगवान् श्रीराम अत्यन्त कामी हुनुहुन्थ्यो। कुरा यो थियो कि सीताजीको श्रीराममा यति गाढ़ा प्रेम थियो र सीताजी रामको लागि यति व्याकुल हुनुहुन्थ्यो कि त्यसको कारणले सर्वथा निःस्पृह श्रीरामले त्यस्तै नै व्यवहार गर्नुपर्‍यो। भगवान्को त यो व्रत नै ठहर्‍यो—

**'ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।'**

—अतएव महाविरही र अतिकामी साधारण मनुष्यको जस्तै लीला गरेर वहाँले उपर्युक्त सिद्धान्तलाई चरितार्थ गरिदिनुभयो। यसबाट हामीले यो शिक्षा ग्रहण गर्नुपर्दछ कि यदि हामी भगवान्लाई पाउनको लागि वहाँको विरहमा व्याकुल हुनेछौं भने त भगवान्ले पनि हामीलाई भेट्नको लागि त्यति नै व्याकुल हुनुपर्नेछ। यसकारण हामी सबै वहाँमा यस्तै प्रेम बढाउने चेष्टा गरौं।

## पर-पुरुषबाट बचावट

हनुमान्जीसंग कुराकानी गर्दा-गर्दा जब भगवान् श्रीरामका गुण, प्रभाव र पराक्रमलाई सम्झँदै सीता वहाँको वियोग-दुःखले व्याकुल हुनु भयो, वहाँको मुखमा आँशुहरूको धारा बग्न थाल्यो, त्यस बेला हनुमान्ले वहाँलाई आश्वासन दिंदै भन्नुभयो—

श्रुत्वैव च वचो मह्यं क्षिप्रमेष्यति राघवः।
चमूं प्रकर्षन्महतीं हर्यृक्षगणसंकुलाम्॥
अथवा मोचयिष्यामि त्वामद्यैव सराक्षसात्।
अस्माद् दुःखादुपारोह मम पृष्ठमनिन्दिते॥

× × × ×

द्रक्ष्यस्यद्यैव वैदेहि राघवं सहलक्ष्मणम्।
व्यवसायसमायुक्तं विष्णुं दैत्यवधे यथा॥

(५। ३७। २०-२१, २४)

'मेरो वचन सुन्ने बित्तिकै रघुनाथजी बाँदर र भालुहरूको विशाल सेना लिएर तुरुन्त यहाँको लागि हिंड्नुहुनेछ। अथवा तपाईं मेरो पिठ्यूँमा बसिहाल्नोस् म आज नै तपाईंलाई राक्षसको दुःखबाट मुक्त गरिदिनेछु।

.......यस्तो गर्नाले तपाईं आज नै दैत्य-वधको लागि प्रयत्न गर्नु हुने भगवान् विष्णुकै समान राक्षसवधको उद्योगमा लाग्नुभएको लक्ष्मण सहित श्रीरघुनाथजीलाई देख्न सक्नुहुनेछ।

हनुमान्जीले सीताजीसंग यो पनि भन्नुभयो कि 'ममा रावणसहित सम्पूर्ण लङ्कालाई पनि उठाएर लैजाने शक्ति छ। जब म तपाईंलाई लिएर यहाँबाट हिँड्नेछु त्यतिखेर सम्पूर्ण लङ्कानिवासीहरू मिलेर पनि मलाई पछ्याउन सक्नेछैनन्। म चाँडै नै तपाईंलाई श्रीरघुनाथको नजिकै पुऱ्याइदिनेछु।'

हनुमान्जीका यी वचनहरूलाई सुनेर सीता मनमनै धेरै प्रसन्न हुनुभयो र भन्न थाल्नुभयो—

भर्तुर्भक्तिं पुरस्कृत्य रामादन्यस्य वानर।
नाहं स्प्रष्टुं स्वतो गात्रमिच्छेयं वानरोत्तम॥

**यदहं गात्रसंस्पर्शं रावणस्य गता बलात्।**
**अनीशा किं करिष्यामि विनाथा विवशा सती॥**
**यदि रामो दशग्रीवमिह हत्वा सराक्षसम्।**
**मामितो गृह्य गच्छेत तत्तस्य सदृशं भवेत्॥**

(वा० रा० ५। ३७। ६२—६४)

'हे वानरश्रेष्ठ! पति-भक्तितिर दृष्टि राखेर म भगवान् श्रीरामलाई छोडेर अर्को कुनै पुरुषको शरीरको स्वेच्छाले स्पर्श गर्न चाँहदिनँ। रावणको शरीरबाट जुन मेरो स्पर्श भयो, त्यो त रावणको जबर्जस्तीले भएको हो। त्यस समयमा म असमर्थ, असहाय र विवश थिएँ, के गर्न सक्थें र? अब त यदि श्रीरघुनाथजीले राक्षसहरू सहित रावणलाई मारेर मलाई यहाँबाट लैजानुहुन्छ भने, यही वहाँको योग्य पराक्रम हुनेछ।'

राम्ररी विचार गर्नुहोस्-हनुमान् जस्ता सेवक, जो सीताजीमा साँचो हृदयले मातृ-भाव राख्नुहुन्छ र जसले श्रीराम-सीताको सेवा गर्नु नै आफ्नो जीवनको परम ध्येय मान्नु भएको छ, पतिव्रता-धर्मको रक्षाको दृष्टिले सीताले वहाँको पनि स्पर्श गर्न चाहनुहुन्न-यद्यपि वहाँ घोर विपत्तिमा पर्नुभएको छ, वहाँलाई आफ्ना स्वामीसंग भेटघाट गर्ने अतिशय उत्कण्ठा छ र वहाँको नजिकै जानको लागि वहाँलाई यस्तो स्वर्ण-संयोग प्राप्त भएको हो। धर्ममा कस्तो दृढ आस्था हो। यसमा यो सिक्नुपर्ने कुरो छ कि ठूलो आपत्तिको समयमा पनि स्त्रीले यथासाध्य पर-पुरुषको स्पर्श गर्नुहुँदैन।

## क्षमा

रावणको वध र भगवान् श्रीरामको विजय भइसकेपछि विजयको खबर दिनका लागि जब हनुमान्जी सीताजीको नजिकै जानुभयो, त्यति खेर भगवान् श्रीरामको सन्देश दिएर वहाँले सीतासंग यो पनि भन्नु

भएको थियो कि—'जुन दुष्ट राक्षसीहरूले हजुरलाई पहिले धेरै धम्काएका डर देखाएका र दुःख दिएका छन् ती सबैलाई म मार्न चाहन्छु', मलाई आज्ञा दिनुहोस्।' त्यतिखेर सीताजीले चाहेको भए हनुमान्जीलाई सङ्केत गरेर ती सबैसंग आफ्नो बदला लिन सक्नुहुन्थ्यो, तर सीता त परम दयालु साक्षात् भगवान् श्रीरामकी अर्धाङ्गिनी ठहरिनु भयो, वहाँले यस्तो किन गर्नुहुन्थ्यो र? दीन–दुःखीहरूमा प्रेम राख्नुहुने तपस्विनी सीताले भन्नुभयो—

**विधेयानां च दासीनां कः कुप्येद्वानरोत्तम।**
**भाग्यवैषम्यदोषेण पुरस्ताद्दुष्कृतेन च॥**
**मयैतत्प्राप्यते सर्वं स्वकृतं ह्युपभुज्यते।**
**मैवं वद महाबाहो दैवी ह्येषा परा गतिः॥**

× × × ×

**पापानां वा शुभानां वा वधार्हाणामथापि वा।**
**कार्यं कारुण्यमार्येण न कश्चिन्नापराध्यति॥**

( वा० रा० ६। ११३। ३९–४०,४५)

'हे वानरश्रेष्ठ! यस्तो को मूर्ख छ, जसले अर्काको आज्ञाको पालन गर्ने दासीहरूमा क्रोध गर्ला। किनभने मनुष्यले आफूले गरेका कर्महरूको फल भोग्दछ। भाग्यको विषमता र पूर्वकृत पापहरूको कारणले नै मलाई यो सबै दुःख प्राप्त भएको छ। यो सबै भाग्यको नै लीला हो, यसमा अन्यव्यक्तिहरूको कुनै दोष छैन। यसकारण तिमी राक्षसीहरूलाई मार्ने कुरा न गर। ............ कुनै पापी, धर्मात्मा अथवा वधको योग्य अपराध गर्ने वाला नै किन नहोस् साधुले त सबैमाथि दया नै गर्नुपर्दछ, किनभने अपराध सबै व्यक्तिहरूबाट हुनसक्दछ। इत्यादि। (अर्थात् कसबाट अपराध हुँदैन र?)

# अग्नि-परीक्षा

जब हनुमान्‌ले अशोकवाटिकाबाट फर्केर श्रीरामसँग यो भन्नु भयो कि—'सीता तपाईंको दर्शन गर्नको लागि आतुर भइरहनु भएको छ,' तब श्रीरामचन्द्रजीको आज्ञानुसार विभीषणले सीतालाई स्नान गराएर वस्त्राभूषणहरूले सुसज्जित पारेर वहाँको नजिकै लिएर आउनु भयो। धेरै दिनहरूपछि प्यारा पति श्रीरामचन्द्रजीको पूर्णचन्द्रसमान मुखलाई देखेर सीताको सारा दुःख नष्ट भयो र वहाँको मुख निर्मल चन्द्रमा समान चम्कियो। तर त्यसै समयमा धेरै कुराहरू पछि श्रीरामचन्द्रजीले भन्नु भयो—

**यत्कर्तव्यं मनुष्येण धर्षणां प्रतिमार्जता।**
**तत्कृतं रावणं हत्वा मयेदं मानकाङ्क्षिणा॥**

× × × ×

**कः पुमांस्तु कुले जातः स्त्रियं परगृहोषिताम्।**
**तेजस्वी पुनरादद्यात् सुहृल्लोभेन चेतसा॥**

× × × ×

**यदर्थं निर्जिता मे त्वं सोऽयमासादितो मया।**
**नास्ति मे त्वय्यभिष्वङ्गो यथेष्टं गम्यतामिति॥**

(वा० रा० ६। ११५। १३, १९, २१)

'अपमानलाई मार्जन गर्नको लागि मनुष्यको जे कर्तव्य हुन्छ, त्यो मैंले आफ्नो मानको रक्षाको लागि रावणलाई मारेर पूरा गरिदिएँ। जुन उद्देश्यले मैले तिमीलाई रावणको चंगुलबाट छुटाएको छु, त्यो पूरा भइसक्यो। अब मेरो तिमीमा आसक्ति छैन किनभने कुनै पनि कुलीन र तेजस्वी पुरुषले अर्काको घरमा बसेकी स्त्रीलाई प्रेमको लोभमा स्वीकार गर्न सक्दैन। यसकारण तिम्रो जहाँ जान मन छ, तिमी त्यहीं जाऊ।

श्रीरामका यस्ता कठोर र भयङ्कर वचनहरूलाई सुनेर त्यतिखेर सती सीताको जुन अवस्था भयो त्यसको वर्णन गर्न सकिंदैन। स्वामीका वाग्बाणहरूद्वारा सीताको मनमा डरलाग्दो घाउ भयो। वहाँ डाँको छोडेर रून थाल्नुभयो। फेरि वहाँले हृदयस्पर्शी शब्दहरूमा गद्‌गदवाणीले भन्नुभयो—

स्वामी! तपाईं साधारण पुरुषको जस्तो यस्तो कठोर र अनुचित वचन मलाई किन भनिरहनुभएको छ? म आफ्नो शील (सच्चरित्र) को कसम खाएर भन्दछु, तपाईं ममा विश्वास गर्नुहोस्। प्राणनाथ! हरण गरेर ल्याउने बेला रावणले मेरो शरीरको अवश्य स्पर्श गरेका थिए, तर त्यतिखेर म पराधीन थिएँ। यसको लागि त मलाई दोषी ठहऱ्याउन सकिंदैन। मेरो हृदय मेरो अधीन छ र मेरो हृदयमा स्वप्नमा पनि कुनै अर्काको अधिकार भएको छैन। फेरि पनि यदि तपाईंलाई यही गर्नु थियो भने त जब हनुमान्‌लाई मेरो नजिकै पठाउनुभएको थियो, त्यतिखेर मेरो त्याग गरिदिएको भए हुन्थ्यो र यतिखेरसम्म म आफ्ना प्राणहरूको नै त्याग गरिसक्ने थिएँ।

यस प्रकार सीताले अरू पनि धेरै कुरा भन्नुभयो, तर श्रीरामले वहाँका कुराहरूको कुनै उत्तर दिनुभएन। तब सीताजीले दीनभावले ध्यानमग्न लक्ष्मणलाई सम्बोधित गरी दीनतापूर्वक रूँदै भन्नुभयो— 'लक्ष्मणजी! यस मिथ्यापवादबाट कलङ्कित भएर म बाँच्न चाहन्नँ। मेरो दुःखको निवृत्तिको लागि तपाईं यहाँ चिता तयार गरिदिनुहोस्। मेरा प्रिय पतिले मेरा गुणहरूबाट अप्रसन्न भएर जनसमुदायमा मेरो त्याग गर्नुभएको छ। अब म यस जीवनको अन्त गर्नको लागि अग्निमा प्रवेश गर्नेछु।' विदेहनन्दिनी सीताको वचन सुनेर लक्ष्मणजी पहिले त खिन्न हुनुभयो, तर पछि आएर अरु सङ्केतबाट श्रीरामको कठोरता सम्झेर तुरुन्त नै चिता तयार पारिदिनुभयो। सीताले पहिले श्रीरामलाई परिक्रमा

गर्नुभयो, त्यसपछि देवता र ब्राह्मणहरूलाई प्रणाम गरेर प्रज्वलित अग्निको नजिकै गएर हात जोडेर भन्नुभयो—

**यथा मे हृदयं नित्यं नापसर्पति राघवात्।**
**तथा लोकस्य साक्षी मां सर्वतः पातु पावकः॥**
**यथा मां शुद्धचारित्रां दुष्टां जानाति राघवः।**
**तथा लोकस्य साक्षी मां सर्वतः पातु पावकः॥**

( वा० रा० ६। ११६। २५-२६)

'हे लोकसाक्षी अग्निदेव! यदि मेरो मन कहिल्यै श्रीरघुनाथजीबाट न हटेको भए तपाईं सबै प्रकारले मेरो रक्षा गर्नुहोस्। यदि म शुद्धचरित्र भएकी छु र मलाई भ्रमवश श्री रघुनाथजीले दुष्टा सम्झिरहनुभएको छ भने तपाईं मेरो सब प्रकारले रक्षा गर्नुहोस्।'

यति भनेर अग्निको परिक्रमा गरेर सीताले निर्भयतापूर्वक बलि रहेको प्रचण्ड अग्निमा प्रवेश गर्नुभयो। सबैतिर हाहाकार मच्चियो। ब्रह्मा, शिव, कुबेर, इन्द्र, यमराज र वरुण आदि ठूला-ठूला देवता त्यहाँ उपस्थित भए। त्यसबेला ब्रह्माजीले श्रीराम र सीताका रहस्यका धेरै प्रकारका कुराहरू बताउनुभयो।

यत्तिकैमा भगवान् अग्निदेव सीतालाई लिएर अकस्मात् आफ्नो देवरूपले प्रकट हुनुभयो र जनकात्मजा सीतालाई श्रीराम प्रति अर्पण गर्दै भन्नुभयो—

**''''एषा ते राम वैदेही पापमस्यां न विद्यते॥**
**नैव वाचा न मनसा नैव बुद्ध्या न चक्षुषा।**
**सुवृत्ता वृत्तशौटीर्यं न त्वामत्यचरच्छुभा॥**
**रावणेनापनीतैषा वीर्योत्सिक्तेन रक्षसा।**
**त्वया विरहिता दीना विवशा निर्जने सती॥**

**रुद्धा चान्तःपुरे गुप्ता त्वच्चित्ता त्वत्परायणा।**
**रक्षिता राक्षसीभिश्च घोराभिर्घोरबुद्धिभिः॥**
**प्रलोभ्यमाना विविधं तर्ज्यमाना च मैथिली।**
**नाचिन्तयत तद्रक्षस्त्वद्‌गतेनान्तरात्मना॥**
**विशुद्धभावां निष्पापां प्रतिगृह्णीष्व मैथिलीम्।**
**न किंचिदभिधातव्या अहमाज्ञापयामि ते॥**

( वा० रा० ६। ११८। ५—१० )

‘राम! यिनी तपाईंकी सीता हुन्। यिनमा कुनै प्रकारको पाप छैन। पतिव्रता सीताले मन, बुद्धि, वचन अथवा नेत्रहरूद्वारा कहिल्यै तपाईंको विपरीत कुनै आचरण गरिनन्। राक्षस रावण बलको कारणले उन्मत्त थिए। उनले तपाईंको अनुपस्थितिमा यिनी बिचारीलाई बलपूर्वक शून्य आश्रमबाट लिएर गए। उनले यिनीलाई आफ्नो अन्तःपुरमा बन्द गरेर राखे र क्रूर स्वभावभएका डरलाग्दा राक्षसीहरूको पहरा लगाइदिए, तैपनि यिनको चित्त तपाईंमा लागिरह्यो र यिनले तपाईंको नै चिन्तन गरिरहिन्। यिनलाई विभिन्न प्रकारका लोभहरू दिइए र धेरै हप्काइ पनि पर्नगयो, तर तपाईंमा चित्त लागिरहेको हुनाले सीताले राक्षस रावणको त चिन्तन पनि गरिनन्। यिनको भाव विशुद्ध छ र यिनी सर्वथा निर्दोष छिन् तपाईं यिनलाई स्वीकार गर्नुहोस्। अब यस विषयमा केही अरू न भन्नू–यही मेरो आज्ञा रहेको छ।’

अग्निदेवको वचन सुनेर मर्यादापुरुषोत्तम भगवान् श्रीराम धेरै प्रसन्न हुनुभयो। वहाँका आँखाहरू हर्षले भरिए र वहाँले भन्नुभयो—

**अवश्यं चापि लोकेषु सीता पावनमर्हति।**
**दीर्घकालोषिता हीयं रावणान्तःपुरे शुभा॥**
**बालिशो बत कामात्मा रामो दशरथात्मजः।**
**इति वक्ष्यति मां लोको जानकीमविशोध्य हि॥**

अनन्यहृदयां सीतां मच्चित्तपरिरक्षिणीम्।
अहमप्यवगच्छामि मैथिलीं जनकात्मजाम्॥
इमामपि विशालाक्षीं रक्षितां स्वेन तेजसा।
रावणो नातिवर्तेत वेलामिव महोदधिः॥
न हि शक्तः सुदुष्टात्मा मनसापि हि मैथिलीम्।
प्रधर्षयितुमप्राप्यां दीप्तामग्निशिखामिव॥
नेयमर्हति वैक्लव्यं रावणान्तःपुरे सती।
अनन्या हि मया सीता भास्करस्य प्रभा यथा॥
विशुद्धा त्रिषु लोकेषु मैथिली जनकात्मजा।
न विहातुं मया शक्या कीर्तिरात्मवता यथा॥
अवश्यं च मया कार्यं सर्वेषां वो वचो हितम्।
स्निग्धानां लोकनाथानामेवं च वदतां हितम्॥

(वा० रा० ६। ११८। १९—२१)

'लोकदृष्टिमा सीताको पवित्रताको परीक्षा आवश्यक थियो, किन भने सीताजी धेरै समयसम्म रावणको अन्तःपुरमा रहनुभएको हो। यदि मैले जानकीको परीक्षा न गरेको भए मान्छेहरूले यही नै भन्ने थिए कि दशरथका छोरा राम ठूलै मूर्ख र कामी हुन्। जनकनन्दिनी सीताको मन अनन्य भावले ममा नै लागिरहन्छ र यिनी मेरो नै चित्तको अनुसरण गर्ने वाली हुन्—यो कुरा म पनि जान्दछु। यिनी आफ्नो तेजले स्वयं नै सुरक्षित छिन्। यसकारण समुद्रले जसरी आफ्नो मर्यादाको उल्लङ्घन गर्न सक्दैन, त्यसैगरी रावणले यिनको केही बिगार्न सक्दैनथे, जसरी प्रज्वलित अग्निशिखा (आगोको ज्वाला) को कसैले स्पर्श गर्न सक्दैन, त्यसैगरी दुष्ट रावणले आफ्नो मनले पनि यिनीमाथि अधिकार जमाउन सक्दैनथे, यिनी त रावणको लागि सर्वथा अप्राप्य थिइन्। रावणको अन्तःपुरमा

रहँदा पनि यिनको कुनै प्रकारले तिरस्कार हुन सक्दैनथ्यो, किनभने प्रभा जसरी सूर्यबाट अभिन्न छ, त्यसैगरी यिनी सीताको मबाट कुनै भेद छैन। जनकनन्दिनी सीता तीनै लोकहरूमा पवित्र छिन्। यसकारण आत्माभिमानी पुरुष जसरी कीर्तिको लोभलाई छोड्न सक्दैनन्, त्यसरी नै म यिनको त्याग गर्न सक्दिनँ। तपाईंहरू सबै लोकपालगण मेरा प्रेमी हुनुहुन्छ र मेरो हितको नै कुरा गरिरहनुहुन्छ, यसकारण मैंले तपाईंहरूको हितकारक कुरा अवश्य मानिहाल्नुपर्दछ।'

यति भनेर वहाँले अत्यन्त आनन्दपूर्वक सती सीताजीलाई स्वीकार गरिहाल्नुभयो। यस प्रसंगबाट यो सिक्नुपर्छ स्त्रीले कुनै पनि परिस्थितिमा पतिमाथि क्रोध गर्नुहुँदैन, बरू उनलाई सन्तोष दिलाउनको लागि न्यायानुकूल चेष्टा नै गर्नुपर्दछ।

## गृहस्थ-धर्म

जब सीताजी लङ्काबाट अयोध्या फर्किनुहुन्छ, तब वहाँ आउँदा नै बूढापाका स्त्रीहरू र सबै सासूहरूको चरणमा प्रणाम गर्नुहुन्छ, घरमा बसेर देवताहरूको पूजन गर्नुहुन्छ तथा सबै सासूहरूको समान भावले सेवा गर्नुहुन्छ। यसप्रकार सीताजीले घरका सबै कार्य सुचारूरूपले सम्पन्न गरेर सबैलाई मुग्ध पारिदिनुहुन्छ। भरत, लक्ष्मण र शत्रुघ्न यी सबै देवरहरूलाई सीताजी पुत्रवत् सम्झनुहुन्थ्यो र खान-पान आदिमा वहाँहरूको साथमा कुनै प्रकारको भेदभाव राख्नुहुन्नथ्यो। यसबाट यो शिक्षा मिल्दछ कि स्त्रीहरूले विदेशबाट फर्किंदा नै घरमा सबै ज्येष्ठ-वृद्धाहरूलाई प्रणाम गर्नुपर्दछ। सबैको समानभावले सेवा गर्नुपर्दछ, घरको सबै काम सुचारूरूपले गर्नुपर्दछ र आफ्ना देवर आदिको साथमा शुद्ध र समानभावले यथायोग्य व्यवहार गर्नुपर्दछ।

# सीताको परित्याग

सीताको परित्यागको प्रसंग निकै रोमाञ्चकारी छ। यसलाई उत्तरकाण्डमा ध्यानपूर्वक पढ्नुपर्दछ। सीता सबै प्रकारले परम पवित्र हुनुहुन्छ, यस कुरालाई भगवान् श्रीरामचन्द्र पूर्णतया जान्नुहुन्थ्यो। लङ्कामा अग्निपरीक्षाद्वारा सीतालाई सबैको सामुन्ने पनि पवित्र सिद्ध गरिसक्नुभएको थियो। यो सबै हुँदा हुँदै पनि लोकापवादमा ध्यान दिएर प्रजालाई सन्तुष्ट पार्नको लागि वहाँले निर्दोष सीताको परित्याग गरिदिनुभयो। भरत, लक्ष्मण र शत्रुघ्न आदि कुनै पनि भाइलाई यो कुरा राम्रो लागेन, तर वहाँहरूसंग यसको कुनै उपाय थिएन।

यद्यपि लक्ष्मणको इच्छा थिएन, तर पनि वहाँले दाजुको आज्ञा मानेर सीतालाई वनमा पठाउन जानुपऱ्यो। वनमा गएर जब लक्ष्मणले सबै कुरा बताउनुभयो र सीतालाई थाहा भयो कि 'वहाँ निर्दोष भएर पनि त्यागिनुभयो' तब वहाँको दुःखको सीमा नै रहेन। यस्तो सङ्कटको समयमा पनि सीताले आफ्ना पतिमा कुनै प्रकारको दोषारोपण गर्नुभएन। बरू लक्ष्मणसंग सन्देश पठाउँदै यस्तो भन्नुभयो—

**श्वश्रूणामविशेषेण प्राञ्जलिप्रग्रहेण च।**
**शिरसा वन्द्य चरणौ कुशलं ब्रूहि पार्थिवम्॥**
**शिरसाभिनतो ब्रूयाः सर्वासामेव लक्ष्मण।**
**वक्तव्यश्चापि नृपतिर्धर्मेषु सुसमाहितः॥**
**जानासि च यथा शुद्धा सीता तत्त्वेन राघव।**
**भक्त्या च परया युक्ता हिता च तव नित्यशः॥**
**अहं त्यक्ता च ते वीर अयशोभीरुणा जने।**
**यच्च ते वचनीयं स्यादपवादः समुत्थितः॥**
**मया च परिहर्तव्यं त्वं हि मे परमा गतिः।**

**वक्तव्यश्चैव नृपतिर्धर्मेण सुसमाहितः॥**
**यथा भ्रातृषु वर्तेथास्तथा पौरेषु नित्यदा।**
**परमो ह्येष धर्मस्ते तस्मात्कीर्तिरनुत्तमा॥**
**यत्तु पौरजने राजन् धर्मेण समवाप्नुयात्।**
**अहं तु नानुशोचामि स्वशरीरं नरर्षभ॥**
**यथापवादं पौराणां तथैव रघुनन्दन।**
**पतिर्हि देवता नार्याः पतिर्बन्धुः पतिर्गुरुः॥**

(वा० रा० ७। ४८। १०—१७)

'सबै सासूहरूलाई समानरूपले हात जोडेर प्रणाम गर्नू तथा महाराजका चरणहरूमा शिर राखेर मेरो कुशल समाचार भन्नुहोला। यसै प्रकार अरू सबैसंग पनि शिर झुकाएर मेरो कुशल समाचार भन्नुहोला। फेरि आफ्नो धर्ममा सावधान महाराजसंग यस प्रकार भन्नुहोला— 'रघुनाथजी! सीता वास्तवमा शुद्ध हुन् र सधैं तपाईं प्रति अत्यन्त भक्तियुक्त तथा तपाईंको हितमा तत्पर रहनेवाली हुन्—यो कुरा तपाईं जान्नुहुन्छ नै। तपाईंले आफ्नो अपयशबाट डराएर नै मेरो त्याग गर्नुभएको हो। यसकारण तपाईंको जो निन्दा, जो अपकीर्ति भइरहेको छ, त्यसको मैले पनि मार्जन गर्नुपर्दछ, किनभने तपाईं नै मेरा परम आश्रय हुनुहुन्छ।' फेरि तपाईं महाराजसंग यो पनि भन्नुहोला कि तपाईं जस्तो व्यवहार आफ्ना भाइहरूसंग गर्नुहुन्छ त्यस्तै नै सर्वदा नगरवासीहरूको साथमा पनि गर्नुहोला। यो मिथ्या अपवादको कारणले चिढिएर उनीहरूप्रति कुनै प्रकारको दुर्व्यवहार न गर्नुहोला। नगरवासीहरूको साथ धर्मानुकूल आचरण गर्नु नै तपाईंको परम धर्म हो र त्यसबाट तपाईंलाई उत्तम, यशको प्राप्ति हुनेछ। पुरुषोत्तम मलाई आफ्नो शरीरको त केही पनि चिन्ता छैन। नगरवासीहरूको मेरो विषयमा जस्तो अपवाद छ, त्यो त्यसै प्रकारले रहिरहोस्-म यसको वास्ता गर्दिनँ। स्त्रीको लागि त पति नै

देवता हुन्, पति नै बन्धु हुन् र पति नै गुरु हुन्।'

कस्ता मार्मिक शब्दहरू छन्। धन्य सती सीता र धन्य वहाँको धर्मप्रेम। धन्य भारतको सती-धर्म र धन्य भारतीय देवीहरूको अपूर्व त्याग।

यसप्रकार सीतासंग कुराकानी भइसकेपछि लक्ष्मणजी वहाँलाई प्रणाम गरेर रूँदै फर्कनुभयो। यता दुःखको भारले पीडित आदर्श पतिव्रता सीता वनमा रून थाल्नुभयो। वहाँको रोदनको शब्द सुनेर वाल्मीकि ऋषिले वहाँलाई आफ्नो आश्रममा लैजानुभयो। सीता वहाँकै आश्रममा ऋषिपत्नीहरूको साथमा रहनुभयो।

यस प्रसङ्गमा धेरै सिक्नेकुराहरू छन्। सीताका उपर्युक्त शब्दहरू नित्य पाठ गर्न योग्य छन्। वहाँको भाव बुझेर त्यसै अनुसार पतिव्रता स्त्रीहरूले आफ्नो जीवन बनाउनुपर्दछ।

## पाताल-प्रवेश

जुन नारीले प्राणको बाजी लगाएर आफ्नो धर्मको पालन गर्दछिन् उनको अन्तिम परिणाम राम्रो नै हुन्छ। अश्वमेध यज्ञ गर्ने बेलामा कुशलवद्वारा रामायणको गान सुन्दा सुन्दा त्यसमा वर्णित प्रसङ्गबाट श्रीरामचन्द्रलाई यो थाहा भयो कि यी बालक सीताका नै पुत्र हुन्, तब वहाँको आज्ञाले सीताजी त्यहाँ बोलाइनुभयो। सती सीता रामचन्द्रको नै ध्यान गर्दै शिर तल गरेर हात जोडेर वाल्मीकि ऋषिको पछि-पछि रूँदै आउनुभयो। त्यस बखत वाल्मीकि मुनिले सभामा आएर जे कुरा भन्नुभयो, त्यसबाट सारा लोकापवाद मेटियो र सारा सभा सीता-रामको जय-जयकारबाट ध्वनित भयो। वाल्मीकिले सीता निष्पाप भएको कुरा बताउँदै यहाँसम्म भनिदिनुभयो—

**बहुवर्षसहस्त्राणि तपश्चर्या मया कृता।**

नोपाश्नीयां फलं तस्या दुष्टेयं यदि मैथिली॥

× × × ×

इयं शुद्धसमाचारा अपापा पतिदेवता।
लोकापवादभीतस्य प्रत्ययं तव दास्यति॥

(वा० रा० ७। ९६। २०, २३)

'मैंले हजारौंवर्ष सम्म तपस्या गरेको छु। त्यसको कसम खाएर भन्दछु कि यदि सीता दुष्ट आचरणवाली हुन् भने ती सबै तपस्याहरूको फल मलाई न मिलोस्। यी सीता पतिलाई नै देवता मान्नेवाली निष्पाप र पवित्र तथा सुन्दर आचरणहरूले युक्त छिन्। तपाईं लोकापवादबाट डराउनुहुन्छ, यसकारण यिनले तपाईंलाई विश्वास दिलाउनेछिन्।'

वाल्मीकिको कसम सुनेर र सीतालाई सभामा आएको देखेर श्रीराम गद्‌गद हुनुभयो र भन्न थाल्नुभयो—'हे महाभाग! तपाईंको निष्कपट वचनबाट मलाई पूरा विश्वास भैसकेको छ। पहिले लङ्कामा पनि सबै देवताहरूको सामुन्ने यिनले अग्नि-परीक्षा दिएर मलाई विश्वास दिलाएकी थिइन्। म स्वयं पनि जान्दछु कि जानकी सबै प्रकारले शुद्ध छिन् र कुश-लव मेरा नै पुत्र हुन्, तथापि लोकापवाद भैसकेपछि प्रजालाई सन्तुष्ट गर्नको लागि म प्यारी सीतालाई त्यागनको लागि बाध्य भएँ। यसकारण तपाईं क्षमा गर्नुहोस्।'

त्यसबखत सभामा ब्रह्मा आदि सबै देवताहरू पनि आउनुभयो। तब रामले फेरि भन्नुभयो—'मलाई त यो विश्वास भैसकेको छ कि जानकी शुद्ध छिन्। तर जब समस्त जगत्‌को सामुन्ने सीता पवित्र, सिद्ध हुनेछिन्, तब नै म प्रसन्न हुनेछु।'

यतिखेर नै काषाय-वस्त्र धारण गरेकी सती सीताले तल शिर गरेर भूमितर्फ हेर्दै हात जोडेर भन्नुभयो—

यथाहं राघवादन्यं मनसापि न चिन्तये।
तथा मे माधवी देवी विवरं दातुमर्हति॥
मनसा कर्मणा वाचा यथा रामं समर्चये।
तथा मे माधवी देवी विवरं दातुमर्हति॥
यथैतत्सत्यमुक्तं मे वेद्मि रामात्परं न च।
तथा मे माधवी देवी विवरं दातुमर्हति॥

(वा० रा० ७। ९७। १४—१६)

'यदि मैले श्रीरामलाई छोडेर कुनै अर्काको कहिल्यै मनले पनि चिन्तन न गरेकी भए पृथ्वी देवीले मलाई आफूभित्र स्थान दिनुहोस्। यदि मैंले मन, कर्म र वाणीले केवल रामको नै पूजन गरेकी भए पृथ्वी माताले मलाई मार्ग दिनुहोस्। यदि म यो सत्य बोलिरहेकी छु कि राम भन्दा ठूलो म केही पनि (कसैलाई पनि) मान्दिनँ भने माधवी देवीले मलाई स्थान दिनुहोस्।'

सीताले यसप्रकार कसम खाँदा नै अकस्मात् पृथ्वी फाट्यो, त्यसको बीचबाट एउटा उत्तम र दिव्य सिंहासन निस्कियो। त्यसलाई दिव्य वस्त्राभूषणहरूले सुशोभित दिव्य देहधारी नागहरूले धारण गरेका थिए। त्यसमाथि पृथ्वी देवी बस्नुभएको थियो। त्यसमाथि पृथ्वीले सीताको दुवै हातले आलिङ्गन गर्नुभयो तथा वहाँको स्वागत गरेर आफ्नो काखमा बसाल्नुभयो। यत्तिकैमा सबैले हेर्दा-हेर्दै सिंहासन पातालमा पस्यो। आकाशबाट पुष्पवृष्टि हुन थाल्यो र सती सीताको जय-जयकारले आकाशमण्डल गुञ्जियो।

## उपसंहार

सीताले आफ्नो जीवनमा कठोर परीक्षाहरू दिएर स्त्रीमात्रको लागि यो सिद्ध गरेर देखाउनुभयो कि जुन नारी आपत्तिकालमा पनि धर्मको

पालन गर्दछिन् उनी सधैंको लागि परमानन्दमा मग्न रहन्छिन् र उनको कीर्ति संसारमा सधैंको लागि अमर रहन्छ। सीताको पति-भक्ति, सासुहरू प्रतिको सेवा-भाव, सबैको सम्मान गर्ने चेष्टा, सबैसंग यथायोग्य प्रेमको व्यवहार, ऋषिहरूको सेवा, कुश-लव जस्ता वीर पुत्रहरूलाई जन्म दिनु, उनीहरूलाई शिक्षा दिने पटुता, साहस, धैर्य, तपस्या, वीरता, धर्मपरायणता, निर्भयता, क्षमा आदि सबै गुणहरू पूर्ण विकसित र अनुकरणीय छन्। संसारमा जुन कुनै स्त्रीले प्रमाद, मोह र आसक्तिलाई छोडेर सीताको चरित्रको अनुकरण गर्दछिन्, उनको आफ्नो कल्याणमा त भन्नु नै के छ र? उनले आफ्ना पति, पुत्र र अन्यसम्बन्धीहरूको पनि उद्धार गर्दछिन्। यस्ती सतीशिरोमणि पतिव्रता स्त्री त दर्शन र पूजनकै योग्य छिन् र आफ्नो चरित्रले जगत्लाई नै पवित्र गर्नेवाली हुन्।

यद्यपि श्रीसीताजी साक्षात् भगवती हुनुहुन्छ तथापि वहाँले आफ्नो मनुष्यजीवनमा जे-जे चरित्र गर्नुभएको छ, ती सबै यस्ता छन् कि जसको अनुकरण इच्छा गर्ने हो भने हरेक नारीले गर्न सक्दछिन्। वहाँका चरित्र अलौकिक न भएर यस्ता व्यवहारिक छन् कि जसको आचरण गरेर सबै स्त्रीहरू लाभ उठाउन सक्दछन्।



# राम-सेवक श्रीलक्ष्मण

श्रीलक्ष्मणजीको महिमा अपार छ। वाल्मीकीय रामायणमा श्रीलक्ष्मणजी पनि भगवान् विष्णुको नै अंशावतार मानिनुभएको छ, तर अन्य ग्रन्थहरूमा यहाँलाई भगवान् अनन्त (शेषनाग) को अवतार बताइएको छ। यहाँको चरित्रबाट यो स्पष्ट भएको छ कि यहाँको अवतार श्रीरामका चरणहरूमा रहेर वहाँको सेवा गर्नको लागि नै भएको थियो। यही कारण हो कि सबै भाइहरूको श्रीराम प्रति प्रेम हुँदा हुँदै पनि देवालयहरूमा श्रीरामसंग लक्ष्मणको नै प्रतिमा स्थापित गरिन्छ र रामको साथमा लक्ष्मणको नै नाम लिने गरिन्छ। भरत र शत्रुघ्न त स्वेच्छाले पनि श्रीराम भन्दा टाढा मामाघरमा रहनुभयो, तर श्रीलक्ष्मणजीले आफ्नो जीवनमा कुनै पनि परिस्थितिमा श्रीरामको साथ छोड्नुभएन। रामद्वारा त्याग गरिएपछि वहाँ तुरून्त नै परमधाम जानुभयो। श्रीलक्ष्मणजी ब्रह्मचर्य-व्रतको पालन गर्नेवाला धीर, वीर, तेजस्वी, पराक्रमी र इन्द्रिय-विजयी हुनुहुन्थ्यो। यहाँ अत्यन्तै सुन्दर, सरल, तितिक्षु, निर्भय, निष्कपट, त्यागी, पुरुषार्थी, तपस्वी, सेवक, सत्यव्रती, बुद्धिमान् र नीतिनिपुण हुनुहुन्थ्यो। श्रीराममा यहाँको अपूर्ण प्रेम थियो। श्रीरामका चरणहरूमा रहेर वहाँको सेवा गर्नु नै यहाँ आफ्नो मुख्य धर्म र कर्तव्य सम्झनुहुन्थ्यो र श्रीराम-सेवामा स्वयं आफूलाई पनि बिर्सिनुहुन्थ्यो। जसरी भरतजीको विनय र मधुरतायुक्त गम्भीर प्रेम अनुपम छ, त्यसैगरी श्रीलक्ष्मणजीको वीरतायुक्त सेवामूलक प्रेम पनि परम आदर्श छ।

बाल्यावस्थामा पनि श्रीलक्ष्मणजी सर्वदा श्रीरामजीको साथमा नै रहनुहुन्थ्यो, वाल्मीकीयरामायणमा लेखिएको छ-

**बाल्यात् प्रभृति सुस्निग्धो लक्ष्मणो लक्ष्मिवर्धनः॥**
**रामस्य लोकरामस्य भ्रातुर्ज्येष्ठस्य नित्यशः।**

**सर्वप्रियकरस्तस्य रामस्यापि शरीरतः॥**
**लक्ष्मणो लक्ष्मिसम्पन्नो बहिःप्राण इवापरः।**
**न च तेन विना निद्रां लभते पुरुषोत्तमः॥**

(१। १८। २८—३०)

'शोभालाई बढ़ाउने श्रीलक्ष्मणजी बाल्यकालदेखि नै दाजु लोकाभिराम श्रीराममा सधैं नै स्वाभाविक गाढा स्नेह राख्नुहुन्छ। वहाँ रामचन्द्रजीको सेवा र सबै प्रियकार्य सधैं आफ्नो शरीरबाट नै गर्नेहुन्छ। शोभासम्पन्न श्रीलक्ष्मण भगवान् श्रीरामको मानौं अर्को प्राण नै हुनुहुन्छ, किनभने लक्ष्मण विना पुरुषोत्तम श्रीरामचन्द्रलाई निद्रा पनि लाग्दैनथ्यो।

सानो अवस्थामा नै श्रीलक्ष्मणजी आफ्ना दाजु श्रीरामको साथमा विश्वामित्रको यज्ञ–रक्षाको लागि जानुभयो। त्यहाँ लक्ष्मणजी सधैं श्रीरामको सेवामा लागि रहनुहुन्थ्यो, पातहरूको ओछ्यानमा शयन गर्नुहुन्थ्यो र श्रीरामचन्द्रजीसंग बसेर वहाँको आज्ञानुसार राक्षसहरूको वध गरेर मुनिको यज्ञको रक्षा गर्नुहुन्थ्यो।

विश्वामित्रको यज्ञको रक्षा गरेर दुवै भाइ वहाँसंग जनकपुर जानु भयो। त्यहाँ धनुष–भंग पछि सबै भाइहरूको विवाह संस्कार सम्पन्न भयो। सबैजना अयोध्यातर्फ फर्किएर आनन्दले बस्नथाल्नुभयो। भरत र शत्रुघ्न मावल जानुभयो। पछि राजा दशरथको इच्छा र मन्त्रीहरू एवं प्रजाको सम्मतिले रामको राज्याभिषेकको तयारी भयो। यो देखेर लक्ष्मणको आनन्दको सीमा रहेन। श्रीरामलाई राजासिंहासनमा विराजमान देख्नकालागि लक्ष्मण कति लालायित हुनुहुन्थ्यो, यसको पत्तो चाहिँ राजसिंहासनको बदला वनवासको आज्ञा हुँदा वहाँको प्रकट भएको क्रोधलाई देखेर लाग्दछ (थाहा पाइन्छ)। जुन कुरा मनको जति प्रतिकूल हुन्छ, त्यसमा त्यति नै बढी क्रोध आउँछ।

मन्थरा पनि कैकेयीलाई उक्साउँदै श्रीलक्ष्मणको प्रेमको बढाइँ यसप्रकार गर्दछे—

**गोप्ता हि रामं सौमित्रिर्लक्ष्मणं चापि राघवः।**
**अश्विनोरिव सौभ्रात्रं तयोर्लोकेषु विश्रुतम्॥**

(वा० रा० २। ८। ३१)

'लक्ष्मण सदा श्रीरामको रक्षा गर्नुहुन्छ र राम सधैं लक्ष्मणको रक्षा गर्नुहुन्छ। वहाँहरू दुवै जनाको भ्रातृ-प्रेम अश्विनीकुमारहरूको जस्तै जगत्मा प्रसिद्ध छ।'

यसपछि जब श्रीराम वन जान स्वीकार गरेर आमा कौसल्यासंग आज्ञा लिन जानुभयो, त्यस बेला लक्ष्मण पनि संगै हुनुहुन्थ्यो। वहां प्रत्येक अवस्थामा श्रीरामको पछाडि नै रहनुहुन्थ्यो। श्रीरामले माता कौसल्यालाई सारा कथा सुनाउनुभयो। माताको दुःखको सीमा रहेन। माताले रामलाई रोक्ने चेष्टा गर्नुभयो, तर श्रीरामले मान्नुभएन। श्रीरामको यो कार्य लक्ष्मणलाई राम्रो लागेन। वहाँ रामको पूर्ण अनुयायी हुनुहुन्थ्यो, तर श्रीरामले आफ्नो हक छोडेको देखेर लक्ष्मण शान्त रहन सक्नुभएन। माता कौसल्यालाई विलाप गरेको देखेर श्रीलक्ष्मणजी भन्नुहुन्छ—

**अनुरक्तोऽस्मि भावेन भ्रातरं देवि तत्त्वतः।**
**सत्येन धनुषा चैव दत्तेनेष्टेन ते शपे॥**
**दीप्तमग्निमरण्यं वा यदि रामः प्रवेक्ष्यति।**
**प्रविष्टं तत्र मां देवि त्वं पूर्वमवधारय॥**
**हरामि वीर्याद् दुःखं ते तमः सूर्य इवोदितः।**
**देवी पश्यतु मे वीर्यं राघवश्चैव पश्यतु॥**

(वा० रा० २। २१। १६—१८)

'देवि! म तपाईंलाई सत्य, धनुष, दान तथा यज्ञ आदिको कसम

खाएर भन्छु कि पूज्य दाजु राममा मेरो हार्दिक दृढ अनुराग छ। यदि श्रीराम बल्दो आगोमा अथवा घोर जङ्गलमा प्रवेश गर्नुहुन्छ भने तपाईं मलाई वहाँभन्दा पहिले नै आगोमा पसेको सम्झनुहोला। जसरी सूर्य उदाएर अन्धकारको नाश गर्दछन्, त्यसैगरी म आफ्नो पराक्रमले तपाईंको दुःखलाई हटाउनेछु। देवी (तपाईं) र श्रीरामचन्द्रजीले पनि मेरो पराक्रम हेर्नुहोला।'

लक्ष्मणले वीर रसको आवेशमा तथा श्रीरामजीको प्रेमले विवश भएर अरूपनि धेरै नै साहसपूर्ण कुराहरू भन्नुभयो। माता कौसल्यालाई सम्झाइसकेपछि श्रीरामले लक्ष्मणलाई सान्त्वना दिंदै भन्नुभयो—

**तव लक्ष्मण जानामि मयि स्नेहमनुत्तमम्।**
**विक्रमं चैव सत्त्वं च तेजश्च सुदुरासदम्॥**
**मम मातुर्महद् दुःखमतुलं शुभलक्षण।**
**अभिप्रायं न विज्ञाय सत्यस्य च शमस्य च॥**
**धर्मो हि परमो लोके धर्मे सत्यं प्रतिष्ठितम्।**

× × × ×

**सोऽहं न शक्ष्यामि पुनर्नियोगमतिवर्तितुम्।**
**पितुर्हि वचनाद्वीर कैकेय्याहं प्रचोदितः॥**
**तदेतां विसृजानार्यां क्षत्रधर्माश्रितां मतिम्।**
**धर्ममाश्रय मा तैक्ष्ण्यं मद्बुद्धिरनुगम्यताम्॥**

(वा० रा० २। २१। ३९—४१,४३-४४)

'लक्ष्मण! म प्रति जो तिम्रो अत्यन्त नै उत्तम प्रेम छ, त्यसलाई म जान्दछु तथा तिम्रो पराक्रम, धैर्य र दुर्धर्ष तेजबाट पनि म अपरिचित छैन। हे शुभलक्षण मेरी आमालाई जो महान् अतुलनीय दुःख भइरहेको छ, त्यो सत्य र रामको विषयमा मेरो अभिप्राय न सम्झनाले भएको हो। संसारमा धर्म नै सर्वश्रेष्ठ हो, धर्ममा नै सत्य-तत्त्व प्रतिष्ठित छ।.........

अतः यस्तो म पिताजीको आज्ञाको उल्लंघन गर्न सक्दिनँ। वीर! पिताजीको आज्ञाले नै माता कैकेयीले मलाई वन जानको लागि भन्नु भएको हो। यसकारण केवल क्षात्रधर्मको अवलम्बन गर्ने यस तुच्छ बुद्धिको त्याग गर। धर्मको आश्रय लेऊ, तीक्ष्ण भावलाई छोड र मेरो विचार अनुसार हिंड।'

लक्ष्मणजीको स्वभावमा यो विशेषता थियो कि जो कुरा वहाँको मनमा जँच्दथ्यो, त्यसलाई वहाँ बडा जोडदार शब्दहरूमा श्रीरामको सामुन्ने राखिदिनुहुन्थ्यो तथा आफ्नो मनको प्रतिकूल हुँदा पनि श्रीरामको कुरा मानिदिनुहुन्थ्यो। वहाँको स्वभावमा पुरुषार्थ र वीरत्व आदि झल्किन्थे। यसकारण जब श्रीरामले प्रारब्धलाई बलवान् बताएर लक्ष्मणलाई सम्झाउने चेष्टा गर्नुभयो, तब वहाँले भन्नुभयो—

**विक्लवो वीर्यहीनो यः स दैवमनुवर्तते।**
**वीराः सम्भावितात्मानो न दैवं पर्युपासते॥**
**दैवं पुरुषकारेण यः समर्थः प्रबाधितुम्।**
**न दैवेन विपन्नार्थः पुरुषः सोऽवसीदति॥**

× × × ×

**अद्य मे पौरुषहतं दैवं द्रक्ष्यन्ति वै जनाः।**
**यैर्दैवादाहतं तेऽद्य दृष्टं राज्याभिषेचनम्॥**

× × × ×

**अहमेको महीपालानलं वारयितुं बलात्॥**
**न शोभार्थाविमौ बाहू न धनुर्भूषणाय मे।**
**नासिराबन्धनार्थाय न शराः स्तम्भहेतवः॥**

(वा० रा० २। २३। १६-१७, १९, २९-३०)

'जो कातर छ, जसमा पराक्रमको नाम छैन, त्यसैले प्रारब्धको भरोसा गर्दछ। सारा संसारले जसलाई आदरको दृष्टिले हेर्दछ, ती वीर

पुरुषहरू दैवको उपासना गर्दैनन्। जसले आफ्नो पुरुषार्थले दैवलाई दबाउने शक्ति राख्दछ, त्यसले दैवद्वारा कुनै कार्यमा बाधा उपस्थित गरिएमा खेद प्रकट गर्दैन।............ जुन व्यक्तिहरूले दैवको बलले तपाईंको राज्याभिषेकलाई नष्ट भएको देखेका छन्, उनीहरू नै आज मेरो पुरुषार्थले दैवको पनि विनाश भएको देख्नेछन्। ............ म एक्लै नै समस्त विरोधी राजाहरूलाई बलपूर्वक परास्त गर्नमा समर्थ छु। मेरा यी दुई भुजाहरू शोभाको लागि होइनन्। यो धनुष आभूषणको ठाउँमा राखिएको होइन, यो तरवार केवल बाँधिनको लागि होइन। यी बाणहरू सहारा लिनकालागि डण्डाजस्ता होइनन्।'

यसपछि माता कौसल्या र सीतासंग कुराकानी हुँदा जब लक्ष्मणलाई श्रीरामको अन्तिम निर्णय थाहा भयो, तब वहाँ आफ्नो सारा पक्ष सर्वथा छोडेर सबै प्रकारले श्रीरामको अनुकरण गर्नको लागि तयार हुनुभयो। श्रीरामलाई वनमा जानको लागि तयार देखेर वहाँसंग जान लक्ष्मण व्याकुल हुनुभयो। दाजुको विरहको दुःख वहाँको लागि असह्य भयो। वहाँका आँखाहरूबाट आँसुको धारा बग्यो र वहाँ दुवै हातहरूले दाजुका चरणहरूलाई समातेर यशस्विनी सीता र कठिन नियमको पालन गर्ने श्रीरामचन्द्रजीसंग बोल्नुभयो—

**यदि गन्तुं कृता बुद्धिर्वनं मृगगजायुतम्।**
**अहं त्वानुगमिष्यामि वनमग्रे धनुर्धरः॥**

× × × ×

**न देवलोकाक्रमणं नामरत्वमहं वृणे।**
**ऐश्वर्यं चापि लोकानां कामये न त्वया विना॥**

(वा० रा० २। ३१। ३, ५)

'प्रभो! यदि तपाईंले हजारौं जंगली पशुहरू र हात्तीहरूले भरिएको वनमा जाने निश्चय गरिसक्नुभएको छ भने म पनि धनुष लिएर तपाईंको

संगसंगै अघि-अघि हिंड्नेछु। तपाईं बिना म देवलोकमा जान, अमर हुन चाहन्नँ र न त समस्त लोकहरूको ऐश्वर्य नै प्राप्त गर्न चाहन्छु।'

यो कुरा सुनेर श्रीरामले सान्त्वनापूर्ण वचनहरूले लक्ष्मणलाई वनमा न गएर अयोध्यामा नै रहनको लागि सम्झाउनुभयो तब लक्ष्मणले फेरि भन्नुभयो—

**अनुज्ञातस्तु भवता पूर्वमेव यदस्म्यहम्।**
**किमिदानीं पुनरपि क्रियते मे निवारणम्॥**

(वा० रा० २। ३१। ७)

'तपाईंले त मलाई पहिलेदेखि नै साथमा रहने आज्ञा दिनुभएको छ, फेरि यसबखत मलाई किन रोक्नुहुन्छ?' यसमा श्रीरामले भन्नुभयो—

**स्निग्धो धर्मरतो धीरः सततं सत्पथे स्थितः।**
**प्रियः प्राणसमो वश्यो विजेयश्च सखा च मे॥**
**मयाद्य सह सौमित्रे त्वयि गच्छति तद्वनम्।**
**को भजिष्यति कौसल्यां सुमित्रां वा यशस्विनीम्॥**

(वा० रा० २। ३१। १०-११)

'लक्ष्मण! तिमी मेरा परम स्नेही, धर्मपरायण, धीर र सदा श्रेष्ठमार्गमा आरूढ रहनेवाला हौ। मलाई प्राण समान प्रिय छौ तथा मेरो वशमा रहनेवाला, आज्ञापालक र सखा हौ। यदि आज मेरो साथमा तिमी पनि वनतर्फ हिंड्यौ भने परम यशस्विनी माता सुमित्रा र कौशल्याको सेवा कसले गर्ला?

यस विषयमा लक्ष्मणले भन्नुभयो—

**तदात्मभरणे चैव मम मातुस्तथैव च।**
**पर्याप्ता मद्विधानां च भरणाय मनस्विनी॥**

कुरुष्व मामनुचरं वैधर्म्यं नेह विद्यते।
कृतार्थोऽहं भविष्यामि तव चार्थः प्रकल्प्यते॥

× × × ×

आहरिष्यामि ते नित्यं मूलानि च फलानि च।
वन्यानि च तथान्यानि स्वाहार्हाणि तपस्विनाम्॥
भवांस्तु सह वैदेह्या गिरिसानुषु रंस्यसे।
अहं सर्वं करिष्यामि जाग्रतः स्वपतश्च ते॥

(वा० रा० २। ३१। २३-२४,२६-२७)

'मनस्विनी माता कौसल्या स्वयं नै आफ्नो र मेरी आमाको तथा मजस्ता अरू पनि धेरै मनुष्यहरूको भरण-पोषण गर्नमा समर्थ हुनुहुन्छ। यसकारण तपाईं मलाई आफ्नो अनुचर बनाउनुहोस्। यसमा केही पनि धर्म-विरूद्ध कुरा छैन। यस्तो गर्नाले म कृतार्थ हुनेछु र तपाईंको पनि सेवा भइरहनेछ। ..... म तपाईंको लागि सदा फल-मूल र वनमा हुने अन्य आवश्यक वस्तुहरू तथा तपस्वीहरूको लागि हवनको सामग्री जुटाउँदै रहनेछु। तपाईं सीतासंग पर्वतहरूका शिखरहरूमा विचरण गर्नुहोला। म तपाईं जाग्दा र शयन गर्दा पनि सबै आवश्यक कार्य गरि नै रहनेछु।' कस्तो सुन्दर सेवा भाव हो! आफ्नो सुखको अलिकति पनि वास्ता छैन!

फेरि के थियो र? लक्ष्मणको यस्तो दृढ प्रेमाग्रह देखेर भगवान् श्रीरामले वहाँको प्रार्थना स्वीकार गर्न बाध्य हुनुपर्‍यो। जब श्रीरामले वहाँसंग भन्नुभयो कि 'माता सुमित्रासंग विदा मागेर आऊ,' तब वहाँ तुरून्त नै आफ्नी आमाकहाँ गएर वहाँसंग विदा भएर फर्केर आउनु भयो। त्यसपछि वन जानेबेलामा जब राम, लक्ष्मण र सीता सबैले माता सुमित्राका चरणहरूमा प्रणाम गर्नु भयो, त्यस बेला माता सुमित्रा लक्ष्मणको शिर सुँघेर भन्नुहुन्छ—

**सृष्टस्त्वं वनवासाय स्वनुरक्तः सुहृज्जने।**
**रामे प्रमादं मा कार्षीः पुत्र भ्रातरि गच्छति॥**
**व्यसनी वा समृद्धो वा गतिरेष तवानघ।**
**एष लोके सतां धर्मो यज्ज्येष्ठवशगो भवेत्॥**

× × × ×

**रामं दशरथं विद्धि मां विद्धि जनकात्मजाम्।**
**अयोध्यामटवीं विद्धि गच्छ तात यथासुखम्॥**

(वा० रा० २।४०।५-६, ९)

'छोरा! तिमी आफ्ना सुहृद् रामका परम अनुरागी छौ, यसकारण म तिमीलाई वनवासको आज्ञा दिन्छु। तिम्रा दाजु श्रीराम वनमा जान्छन्, तिमी यिनको सेवामा कहिल्यै पनि लापरवाही न गर्नु। निष्पाप लक्ष्मण! यिनी संकटमा रहून् अथवा समृद्धिको अवस्थामा, प्रत्येक दशामा यिनी नै तिम्रा परम गति हुन्। संसारमा सत्पुरुषहरूको यही धर्म हो कि सदा आफ्ना दाजुको अधीन भएर रहनू। .......... तिमी रामलाई नै साक्षात् पिता दशरथ सम्झ, सीतालाई मेरो स्थानमा सम्झ र वनलाई नै अयोध्या सम्झ। (म तिमीलाई आज्ञा दिन्छु) तिमी सुखपूर्वक जाऊ।'

कस्तो सुन्दर उपदेश हो! आमा होऊन् त यस्ती होऊन्। लक्ष्मणले पनि आमाको आज्ञालाई प्राणको बाजी लगाएर पालन गर्नुभयो।

यसपछि श्रीराम, सीता, र लक्ष्मणले सुमन्त्रद्वारा ल्याइएको रथमा बसेर वनतिर प्रस्थान गर्नुभयो। त्यतिखेर प्रजाहरू पनि प्रेमविह्वल भएर वहाँहरूसंग नै हिंड्न थाले। जब धेरै सम्झाउँदा पनि प्रजाहरू अयोध्यातर्फ फर्किएनन्, तब लक्ष्मण र सीतासहित श्रीराम जी सबैलाई तमसाको तटमा सुतेकै अवस्थामा छोडेर शृंगवेरपुरतिर जानुभयो। त्यहाँ श्रीरामले निषादराज गुहसंग भेट गर्नुभयो। उनलाई सबै कुरा सम्झाउनु भयो। सन्ध्यावन्दन गरिसकेपछि लक्ष्मणले गङ्गाजल ल्याउनुभयो। त्यही जल पीएर श्रीराम र सीता लक्ष्मणद्वारा तयार पारिएको घाँस र पातहरूको

शय्यामा सुत्नुभयो। त्यतिखेर लक्ष्मणले वहाँका चरणहरूलाई धुनुभयो, फेरि वहाँ केही पर गएर नजिकै अर्को रूखमुन्तिर बस्नुभयो। यसप्रकार दाजुको स्वाभाविक अनुरागले लक्ष्मणलाई जागिरहेको देखेर गुहले भने—'भाइलक्ष्मण! तपाईंको लागि शय्या तयार छ। तपाईं सुखपूर्वक सुत्नुहोस्। म आफ्ना बान्धवहरू सहित हातमा धनुष लिएर पहरा दिइरहन्छु।' यो सुनेर लक्ष्मणले उनको प्रशंसा गर्दै भन्नुभयो—

**कथं दाशरथौ भूमौ शयाने सह सीतया।**
**शक्या निद्रा मया लब्धुं जीवितं वा सुखानि वा॥**
**यो न देवासुरैः सर्वैः शक्यः प्रसहितुं युधि।**
**तं पश्य सुखसंसुप्तं तृणेषु सह सीतया॥**

(वा० रा० २। ५१। ९-१०)

'निषादराज! जब दशरथनन्दन श्रीराम सीतासंग भूमिमा शयन गरिरहनुभएको छ, तब म कसरी निद्रा लिनसक्छु? र कसरी मेरो लागि जीवन र सुखका सामग्रीहरूलाई स्वीकार गर्न सम्भव छ? हेर्नुहोस् सम्पूर्ण देवता र असुरहरू मिलेर पनि युद्धमा जसको वेगलाई सहन गर्न सक्दैनन् त्यस्ता श्रीराम आज सीतासंग झार-पातहरूमा सुखपूर्वक सुति रहनुभएको छ।'

यसपछि बिहान हुने बित्तिकै गंगातटमा पुगेर श्रीरामले सुमन्त्रलाई विदा गर्नुभयो। फेरि डुङ्गामा बसेर तीनै जना गंगाको पारि जानुभयो। त्यहाँबाट हिंडेर रात्रिमा वरदा नदीपारि एउटा रूखमुन्तिर बस्नुभयो। लक्ष्मणले त्यहाँको भुईं सफा गरेर कोमल पातहरू ओछ्याइदिनुभयो। श्रीराम र सीता त्यसमाथि बस्नुभयो। त्यहाँ माता-पिताको लागि शोक गर्दै श्रीरामले लक्ष्मणसंग भन्नुभयो—'भाइ लक्ष्मण! तिमी अयोध्यातर्फ फर्क, त्यहाँ गएर माताहरूको सेवा गर। सीताको साथमा मलाई एक्लै नै वनमा जानदेऊ। यत्तिकैमा लक्ष्मणले बड़ा हृदयग्राही वचन भन्नुभयो—

**न च सीता त्वया हीना न चाहमपि राघव।**
**मुहूर्तमपि जीवावो जलान्मत्स्याविवोद्धृतौ॥**
**नहि तातं न शत्रुघ्नं न सुमित्रां परंतप।**
**द्रष्टुमिच्छेयमद्याहं स्वर्गं चापि त्वया विना॥**

(वा० रा० २। ५३। ३१-३२)

'रघुनन्दन ! तपाईं विना न त सीताजी नै र न त म नै पानीबाट अलग्ग राखिएका माछाहरू झैं मुहूर्त भरि पनि बाँच्न सक्छौं। (अर्थात् बाँच्न सक्दैनौं।) परन्तप ! यस समय म तपाईंलाई छोडेर न त माता सुमित्रालाई, न पितालाई तथा न भाइ शत्रुघ्नलाई र न स्वर्गलाई नै देख्न चाहन्छु।'

यसपछि बिहानीपख भएपछि त्यहाँबाट हिंडेर तीनैजनाले भरद्वाज मुनिसंग भेटघाट गर्नुभयो र एक दिन वहाँको आश्रममा विश्राम गर्नुभयो। अर्को दिन वहाँले देखाएको बाटोबाट चित्रकूटतिर हिंड्नुभयो। यमुनातटमा पुगेर त्यहाँबाट पारि पुग्न लक्ष्मणले एउटा डुंगा तयार पार्नुभयो। त्यसमा सीताजीलाई बस्नको लागि एउटा सुन्दर बेतको सिंहासन बनाउनुभयो। सीता केही लज्जित भएर त्यसमा बस्नुभयो। श्रीरामसहित लक्ष्मणले आफैं त्यो डुंगा ख्याएर यमुनापारि पुऱ्याउनुभयो। त्यो डुंगाबाट ओर्लेर अघि-अघि लक्ष्मण, पछि सीता र वहाँहरूको पछाडि दुवैको रक्षा गर्दै श्रीराम हिंड्नुभयो। यसप्रकार जाँदा-जाँदा वहाँहरू चित्रकूट पुग्नुभयो। त्यहाँ मुनि वाल्मीकिसंग भेटघाट गर्नुभयो। फेरि श्रीरामको आज्ञा लिएर लक्ष्मणले आफैं नै एउटा सुन्दर पर्णशाला तयार गर्नुभयो। त्यसैमा सबै जना सुखपूर्वक बस्न थाल्नुभयो। वनमा रहँदाखेरि फल-मूल तथा हवनको सामग्री जुटाउनु, सीताका वस्त्राभूषणहरूको बाकस र हतियारहरूलाई एक ठाउँबाट अर्को ठाउँमा लैजानु र तिनीहरूलाई सम्हालेर राख्नु, जाडाका रातहरूमा खेतहरूका बीचबाट हिंड्दै नदीबाट पानी ल्याउनु, बाटो चिन्नको लागि रूख र ढुंगाहरूमा पुराना कपड़ा बेर्नु, कुचो लगाउनु, चुलो पोत्नु, बस्नको लागि चौतारो तयार पार्नु, बाल्नको लागि

इन्धन (दाउराहरू) एकत्रित गर्नु र रातभरि जागै बसेर पहरा दिइरहनु यी सबै काम लक्ष्मण बड़ा हर्षपूर्वक सुचारुरूपले गर्नुहुन्थ्यो।

यसपछि जब भरतजी रामलाई फर्काएर लैजानको लागि सेनासहित चित्रकूटको नजिकै पुग्नुभयो, त्यतिखेर लक्ष्मणजीलाई भरतमाथि सन्देह भयो, अतः श्रीरामको प्रेमले विवश भएर वहाँले भरत प्रति केही कड़ा शब्द भनिदिनुभयो। तर फ़ेरि रामचन्द्रको मुखबाट भरतको प्रशंसा सुनेर वहाँ चुपचाप हुनुभयो। भरतजी सबैसंग भेटघाट गरी श्रीरामको चरणपादुका प्राप्त गरेर अयोध्या फर्कनुभयो। यता श्रीरामचन्द्रजी पनि सीता र लक्ष्मण सहित चित्रकूटबाट हिंडेर अत्रि आदि ऋषिहरूका आश्रमहरूमा बस्दै पञ्चवटीमा पुग्नुभयो। त्यहाँ पुगेर श्रीरामले लक्ष्मणसंग भन्नुभयो—'हामी जहाँ पुग्नुथियो, त्यो स्थान यही हो। यहाँ चारैतिर नजर घुमाएर कुनै यस्तो ठाउँ खोजेर निकाल, जहाँ सर्वसम्मत आश्रम बनाएर म, तिमी र यिनी जनकनन्दिनी बस्न सकौं तथा जल, पुष्प र कुश नजिकै होऊन्।' तब लक्ष्मणजी आफ्नो बुद्धिको प्रधानता न राखी भन्नुहुन्छ—

**परवानस्मि काकुत्स्थ त्वयि वर्षशतं स्थिते।**
**स्वयं तु रुचिरे देशे क्रियतामिति मां वद॥**

(वा० रा० ३। १५। ७)

'रघुनाथजी! यसलोकमा तपाईं सयकडौं वर्षसम्म स्थित रहँदा पनि म सधैं तपाईंको अधीनमा छु। (तपाईंको सामुन्ने आफ्नो इच्छाले म केही पनि गर्ने छैन।) यसकारण तपाईं आफैं नै आफ्नो रुचिको अनुकूल स्थानमा मलाई आश्रम बनाउने आज्ञा दिनुहोस्।

यसबाट यो सम्झिनुहुँदैन कि लक्ष्मणजी विवेकहीन हुनुहुन्थ्यो। वहाँ बुद्धिमान् र विद्वान् हुनुहुन्थ्यो, समय-समयमा श्रीरामसेवाको लागि बुद्धिको पनि प्रयोग गर्नुहुन्थ्यो। तर वहाँलाई रामले गरेका काममा धेरै सन्तोष हुन्थ्यो।

त्यसपछि श्रीरामजीले सुन्दर ठाउँ देखाएर त्यसका गुणहरू र शोभाको वर्णन गर्नुभयो। त्यहाँ श्रीलक्ष्मणजीले तुरून्त नै दाजुको आज्ञानुसार एउटा बस्न योग्य आश्रम तयार पार्नुभयो र त्यसमा एउटा धेरै सुन्दर र विशाल पर्णशाला बनाइदिनुभयो। त्यस आश्रम र पर्णशालालाई देखेर सीतासहित श्रीराम धेरै प्रसन्न हुनुभयो तथा वहाँले लक्ष्मणको कार्यको प्रशंसा गरेर वहाँलाई हृदयमा लगाउनुभयो। फेरि वहाँहरू त्यहाँ आनन्दपूर्वक रहन थाल्नुभयो।

त्यहाँ बस्दा वर्षा शरद् ऋतु बित्यो। हेमन्तको आगमन भयो। तब एक दिन विनीत लक्ष्मणले सीताजीसंग स्नान गर्न गइरहेका श्रीरामसंग भन्नुभयो—

**अस्मिंस्तु पुरुषव्याघ्र काले दुःखसमन्वितः।**
**तपश्चरति धर्मात्मा त्वद्भक्त्या भरतः पुरे॥**
**त्यक्त्वा राज्यं च मानं च भोगांश्च विविधान् बहून्।**
**तपस्वी नियताहारः शेते शीते महीतले॥**
**सोऽपि वेलामिमां नूनमभिषेकार्थमुद्यतः।**
**वृतः प्रकृतिभिर्नित्यं प्रयाति सरयूं नदीम्॥**
**अत्यन्तसुखसंवृद्धः सुकुमारो हिमार्दितः।**
**कथं त्वपररात्रेषु सरयूमवगाहते॥**

(वा० रा० ३। १६। २७—३०)

'पुरुषोत्तम! यस शीतकालमा धर्मात्मा भरत तपाईंको भक्तिको कारणले नगरमा कष्ट सहन गरेर तपस्या गरिरहनुभएको छ। वहाँ राज्य र मान तथा नाना प्रकारका थुप्रै भोगहरूको पनि परित्याग गरेर तपस्यामा संलग्न हुनुहुन्छ र नियमित आहार गर्दै यस जाडाको ऋतुमा पनि भुईंमा नै शयन गर्नुहुन्छ। निश्चय नै, भरत पनि यसै बेलामा स्नान गर्नको लागि तयार भएर मन्त्री एवं प्रजाजनहरूको साथमा प्रतिदिन सरयू नदीमा जानुहुँदो होला। अत्यन्त सुखमा पालिएका सुकुमार भरत जाड़ाको कष्ट सहन

गर्दै रात्रिका पछिल्ला प्रहरमा सरयूजीमा कसरी डुब्की लगाउनुहुँदो होला।

यसबाट ती व्यक्तिहरूको खण्डन हुनजान्छ, जो यस्तो भन्दछन् कि लक्ष्मणजी श्रीरामसंग नै प्रेम गर्नुहुन्छ, भरत प्रति त वहाँको द्वेषभाव नै रह्यो। अवश्य नै श्रीरामलाई दुःख दिनेहरू र वहाँको अवज्ञा गर्नेहरूलाई लक्ष्मणजी क्षमा गर्नुहुन्नथ्यो, तर जब वहाँलाई थाहा भयो कि भरतको कुनै दोष छैन, बरू राम–वियोगमा भरत तपस्वी जीवन बिताइरहनुभएको छ, तब त लक्ष्मण भरतमाथि पहिलेको भन्दा पनि धेरै परम श्रद्धा र प्रेम गर्न लाग्नुभएको थियो।

एक दिनको कुरा हो, पञ्चवटी आश्रममा बसिरहेका श्रीराम लक्ष्मणसंग कुरा गरिरहनुभएको थियो। त्यसैबेला त्यहाँ शूर्पणखाले आएर श्रीरामसंग आफ्नो साथमा विवाह गर्नको लागि भनी। श्रीरामले उसलाई लक्ष्मणको नजिकै पठाइदिनुभयो। शूर्पणखाले वहाँको नजिकै गएर पनि त्यही कुरा भनी। तब लक्ष्मणजीले हाँसेर उत्तर दिनुभयो—

**कथं दासस्य मे दासी भार्या भवितुमिच्छसि।**
**सोऽहमार्येण परवान् भ्रात्रा कमलवर्णिनि॥**

( वा० रा० ३। १८। ९)

'म त दास हूँ। आफ्ना दाजु श्रीरामको अधीनमा छु। कमलवर्णिनी! तिमी मेरी स्त्री भएर दासी बन्न किन चाहन्छ्यौ? (तिमी श्रीरामकहाँ जाऊ।)'

ऊ श्रीरामकहाँ गई। त्यहाँ जब ऊ सीतामाथि झम्टी, तब श्रीरामको आज्ञा पाएर लक्ष्मणले उसका नाक–कान काटिदिनुभयो।

यस पछि खर–दूषण आदि राक्षसहरूले श्रीराममाथि आक्रमण गरे। तिनीहरूलाई आउँदै गरेको देखेर श्रीरामले लक्ष्मणसंग भन्नुभयो–निस्सन्देह तिमी यी राक्षसहरूलाई मार्न सक्तछौ तर म स्वयं नै यी सबैको वध गर्न चाहन्छु। यसकारण तिमी सीताको रक्षाको लागि उनलाई गुफामा लिएर जाऊ। लक्ष्मणले भगवान्‌को आज्ञा मानेर त्यसै गर्नुभयो,

श्रीरामले सबै राक्षसहरूको संहार गर्नुभयो। फेरि शूर्पणखाको प्रेरणाले रावण सीताहरणको लागि मारीचलाई साथमा लिएर पञ्चवटीको नजिकै आए। त्यहाँ मारीचले विचित्र स्वर्णमृगको रूप बनाएर सीताको मन आकर्षित गऱ्यो। सीताले भनेपछि भगवान् श्रीराम उसलाई मार्नको लागि धनुष-बाण लिएर उसको पछि लाग्नुभयो। त्यहाँ मारीच मारियो। मर्ने बेलामा उसले रामको जस्तै नै स्वर बनाएर 'हा सीता!' 'हा लक्ष्मण!' यसप्रकार भनेर जोड़संग आर्तनाद गऱ्यो। त्यो सुनेर सीता आत्तिनुभयो। वहाँले सम्झनुभयो कि राम संकटमा पर्नुभएको छ, यसकारण वहाँको सहायताको लागि लक्ष्मणलाई तुरून्त दौडेर जानको लागि भन्नुभयो। सीताले धेरै कुरो भन्दा पनि श्रीलक्ष्मणजी दाजुको आज्ञाको आदर गरेर सीताको रक्षामा नै उभिइरहनुभयो। तब देवी सीताले वहाँको प्रेम र भावमा दोषारोपण गरेर कटुवचन भन्नुभयो, फेरि पनि लक्ष्मण टस-मस हुनुभएन, वहाँले श्रीरामको प्रभाव र राक्षसहरूको मायाको वर्णन गरेर सीतालाई सम्झाउने चेष्टा गर्नुभयो। तर सीतालाई सन्तोष भएन र वहाँले क्रोधावेशमा लक्ष्मणलाई तान छेडेर भन्न न हुने वचन भनिदिनुभयो। तब लक्ष्मण वनका देवताहरूलाई सीताको रक्षाको भार सुम्पिएर श्रीरामकहाँ जानुभयो। श्रीरामको आज्ञा-उल्लङ्घन गर्ने लक्ष्मणको लागि यो पहिलो नै अवसर थियो।

यता रावण भिक्षुको वेषमा आएर सीताको हरण गरेर लिएर गए र उता लक्ष्मणजी आश्रमतिर आउँदै गरेका श्रीरामसंग भेटिनुभयो। श्रीरामले लक्ष्मणसंग भन्नुभयो—'तिमी सीतालाई एक्लै छोडेर आयौ, यो धेरै नराम्रो काम गऱ्यौ। यसै प्रकार अरू पनि छेड हान्नुभयो। तब लक्ष्मणले भन्नुभयो—

**न स्वयं कामकारेण तां त्यक्त्वाहमिहागतः।**
**प्रचोदितस्तयैवोग्रैस्त्वत्सकाशमिहागतः॥**

(वा० रा० ३। ५९। ६)

'भगवन्! म आफ्नो इच्छाले वहाँलाई छोडेर यहाँ आएको हुइनँ। वहाँकै कठोर वचनहरूबाट प्रेरित भएर मैंले यहाँ तपाईंकहाँ आउनु परेको हो।'

यसप्रकार लक्ष्मणले सबै कुरा श्रीरामलाई सम्झाएर भन्नुभयो, तब पनि श्रीरामलाई सन्तोष भएन। वहाँ बाटामा विभिन्न प्रकारले विलाप गर्दै आश्रममा पुग्नुभयो। त्यहाँ पर्णकुटीलाई रित्तो देखेर, अत्यन्त विरहाकुल भएर विलाप गर्न थाल्नुभयो। तब लक्ष्मणले वहाँलाई धैर्य धारण गराएर धेरै सम्झाउनुभयो। यसप्रकार जब-जब सीताको वियोगमा श्रीरामचन्द्रजी अधीर हुनुहुन्थ्यो, तब-तब लक्ष्मण प्रेमपूर्ण वचनहरूद्वारा वहाँको प्रभावको स्मरण गराउँदै वहाँलाई धैर्य-धारण गराउनुहुन्थ्यो।

दुवै भाइहरू सीताको खोजीमा घुम्दै-घुम्दै जटायुको नजिकै पुग्नु भयो। उनको दाहसंस्कार गरेर कबन्धको वध गर्नुभयो र उसैको परामर्शले पम्पासरोवरको नजिक पुग्नुभयो, त्यहीं शबरीसंग भेट भयो। त्यहाँबाट हिंडेपछि हनुमान्द्वारा सुग्रीवसंग मित्रता भयो। सुग्रीवले श्रीरामलाई श्रीसीताद्वारा खसाइएका वस्त्र र आभूषण देखाउनु भयो। तब श्रीरामले ती वस्त्राभूषणहरूलाई छातीमा लगाएर लक्ष्मणजीसंग हेर्नको लागि भन्नुभयो। ती वस्त्राभूषणहरूलाई देखेर लक्ष्मणजीले भन्नुभयो—

**नाहं जानामि केयूरे नाहं जानामि कुण्डले॥**
**नूपुरे त्वभिजानामि नित्यं पादाभिवन्दनात्।**

× × × ×

( वा० रा० ४। ६। २२-२३)

'भगवन्! न म सीताका बाजूबन्दलाई नै जान्दछु र न म कुण्डलहरूलाई नै जान्दछु, किनभने म नित्य वहाँका चरणहरूमा प्रणाम गर्दै पाउजुहरूलाई हेर्ने गर्दथें।' ब्रह्मचर्य-व्रत र पूज्यभावको कति

सुन्दर आदर्श छ।

यसपछि सुग्रीवसंग सारा कुराहरू भए। बाली-सुग्रीवको युद्ध भयो। श्रीरामले एउटै बाणले बालीलाई मारेर खसाउनुभयो। सुग्रीवको किष्किन्धाको राज्यमा अभिषेक भयो। श्रीराम र लक्ष्मणले प्रवर्षण पर्वतमा बसेर वर्षा-ऋतुको समय व्यतीत गर्नुभयो, शरद्-ऋतु आयो। तर यता सुग्रीवले विषय-भोगहरूमा फँसेर श्रीरामको कार्यलाई बिर्सिए। यो देखेर श्रीरामचन्द्रजीको आज्ञाले लक्ष्मणजी सुग्रीवको नजिकै जानु भयो। त्यस-प्रसङ्गमा श्रीलक्ष्मणजीको वीरता, धीरता र शीलको वाल्मीकीय रामायणमा निकै नै सुन्दर चित्रण गरिएको छ। त्यहाँ सुग्रीवलाई सम्झाउँदै लक्ष्मण भन्नुहुन्छ—

**पूर्वं कृतार्थो मित्राणां न तत्प्रतिकरोति यः।**
**कृतघ्नः सर्वभूतानां स वध्यः प्लवगेश्वर॥**
**गोघ्ने चैव सुरापे च चौरे भग्नव्रते तथा।**
**निष्कृतिर्विहिता सद्भिः कृतघ्ने नास्ति निष्कृतिः॥**

(वा० रा० ४। ३४। १०,१२)

'वानरराज! जसले पहिले मित्रहरूको सहायताले आफ्नो कार्य सिद्ध गरेर त्यसको सट्टामा उनीहरूको उपकार गर्दैन, त्यो कृतघ्न हो। यसकारण त्यो सबै प्राणीहरूको लागि वध गर्न योग्य छ। गोहत्या गर्ने र मदिरा-पान गर्ने तथा चोर एवं व्रत भङ्ग गर्नेवाला यी सबैको लागि त सत्पुरुषहरूले प्रायश्चित्तको विधान गरेका छन्, तर कृतघ्नको लागि कुनै प्रायश्चित्त छैन।'

यसमा ताराले विनयपूर्वक लक्ष्मणलाई सम्झाएर शान्त पारिन्। तब सुग्रीवले सावधान भएर लक्ष्मणसंग भने—

**कः शक्तस्तस्य देवस्य ख्यातस्य स्वेन कर्मणा।**
**तादृशं प्रतिकुर्वीत अंशेनापि नृपात्मज॥**

**सीतां प्राप्स्यति धर्मात्मा वधिष्यति च रावणम्।**
**सहायमात्रेण मया राघवः स्वेन तेजसा॥**

( वा० रा० ४। ३६। ६-७)

'दशरथनन्दन! भगवान् श्रीराम आफ्ना कार्यले सबैतिर विख्यात हुनुहुन्छ। वहाँ साक्षात् देव (भगवान्) हुनुहुन्छ। वहाँको उपकारको कसैले आंशिकरूपमा पनि बदला कसरी चुकाउन सक्छ? धर्मात्मा श्रीरामले आफ्नै तेजले रावणको वध गर्नुहुन्छ र सीतालाई प्राप्त गर्नु हुनेछ। म त केवल निमित्त रूपमा सहायक रहनेछु।'

यो सुनेर श्रीलक्ष्मणजी प्रसन्न हुनुभयो र सुग्रीवको प्रशंसा गरेर उनकै साथमा श्रीरामको नजिकै आउनुभयो। त्यसैबेला सुग्रीवले बोलाएका असङ्ख्य बाँदरहरू पनि पुगे। तिनीहरूलाई सीताजीको खोजी गर्न सबै दिशाहरूमा पठाइयो। श्रीहनुमान्ले लङ्कामा गएर श्रीजनकनन्दिनी संग भेट गर्नुभयो। त्यहाँबाट फर्केर वहाँले श्रीराम-लक्ष्मणलाई सीताको कष्टकथा सुनाउनुभयो। सीताको सभाचार सुनेर असङ्ख्य बाँदरहरूको ठूलो सेना लिएर श्रीराम-लक्ष्मण समुद्रको तटमा पुग्नुभयो। त्यहाँ श्रीरामले शरणागत विभीषणलाई अभय-दान दिनुभयो। समुद्रमा पुल बाँधेर सेनासहित श्रीराम-लक्ष्मण समुद्रको पारिपट्टि पुग्नुभयो। लङ्कामा राक्षसहरूको साथमा भयानक युद्ध भयो। एक दिनको कुरो हो, मेघनादले सबै बाँदरहरूले देख्दा देख्दै मायावी सीताको वध गरेर सबैलाई दुःखित गरिदिए। हनुमान्द्वारा यो समाचार पाएर श्रीराम सीताको दुःखले मूर्च्छित हुनुभयो। वहाँलाई सचेत पार्नको लागि अनेक उपचारहरू गरिए। लक्ष्मणले पुरूषार्थको बढाइँ गर्दै श्रीरामसंग भन्नुभयो—

**तदद्य विपुलं वीर दुःखमिन्द्रजिता कृतम्।**
**कर्मणा व्यपनेष्यामि तस्मादुत्तिष्ठ राघव॥**
**उत्तिष्ठ नरशार्दूल दीर्घबाहो धृतव्रत।**

**किमात्मानं महात्मानमात्मानं नावबुध्यसे॥**

(वा० रा० ६। ८३। ४२-४३)

'प्रभो! आज इन्द्रजित्ले (आफ्नो यस क्रूर कर्मले) तपाईंलाई जो ठूलो कष्ट पुऱ्याएका छन्, म आफ्नो भयानक कर्मले त्यसलाई हटाउनेछु। यसकारण अब तपाईं उठेर बस्नुहोस्। महाबाहो! पुरुषसिंह! के तपाईं आफ्नो महात्मापनको महान् प्रभावलाई जान्नुहुन्न? हे व्रतहरूका पालक! तपाईं उठ्नुहोस्।'

यस प्रकार श्रीलक्ष्मणजी आफ्ना काखमा मूर्च्छित भएर सुतेका श्रीरामलाई सचेत पार्ने चेष्टा गरिरहनुभएको थियो, त्यतिखेर विभीषण पनि त्यहाँ आउनुभयो। विभीषणले सोधेपछि श्रीलक्ष्मणजीले सीताको शोकमा श्रीराम अचेत हुनुभएको कुरा बताउनुभयो। तब विभीषणले प्रबल युक्तिहरूद्वारा सबैको सामुन्ने श्रीरामलाई सम्झाउनुभयो कि 'मेघनादले सीतालाई मार्न सक्दैनन्। यो सबै राक्षसी मायाको खेल हो। तपाईं चिन्ता न गर्नुहोस्। मेघनाद यतिखेर निकुम्भिलामा यज्ञ गर्न गएका छन्, उनको यज्ञ पूरा भएपछि उनलाई जीत्न कठिन हुनेछ। हामीले चाँडै नै त्यहाँ पुगेर उनीसंग युद्ध गर्नुपर्दछ। अतः तपाईं लक्ष्मणलाई हामीसंग पठाइदिनुहोस्।' यस प्रकार विभीषणको कुरा सुनेर श्रीराम सावधान हुनुभयो। विभीषणबाट सारा कुरा फेरि सुन्नुभयो। फेरि मेघनादको पराक्रम र मायाबलको वर्णन गरेर लक्ष्मणसंग भन्नुभयो— 'सुग्रीव र विभीषणसंग गएर तिमी मेघनादलाई मार।' तब श्रीलक्ष्मणजीले मेघनादलाई मार्ने प्रतिज्ञा गरेर श्रीरामको परिक्रमा गर्नुभयो र वहाँलाई प्रणाम गर्नुभयो। यसपछि वहाँ सेनासंग विभीषणलाई लिएर जानुभयो। त्यहाँ मेघनाद संग लक्ष्मणको निकै ठूलो युद्ध भयो। त्यसमा श्रीलक्ष्मणले वीरता, धीरता र युद्ध कौशलको निकै विलक्षण परिचय दिनुभयो। श्रीलक्ष्मणले मेघनादका घोडा, सारथि र रथको नाश गरेर बार-बार उनका अनेक धनुषहरूलाई काटेर खसाल्नुभयो। यसप्रकार वहाँले राक्षसहरूको सारा सेनालाई

व्याकुल पारिदिनुभयो। अन्तमा महाबलवान् मेघनादलाई मारेर लक्ष्मणजीले बड़ो अद्‌भुत काम गर्नुभयो। त्यसपछि लक्ष्मणजीले श्रीरामको नजिकै आएर वहाँलाई प्रणाम गर्नुभयो। श्रीरामचन्द्रले लक्ष्मणलाई हृदयमा लगाएर वहाँको यस कार्यको प्रशंसा गर्दै भन्नुभयो—

**कृतं परमकल्याणं कर्म दुष्करकर्मणा।**
**अद्य मन्ये हते पुत्रे रावणं निहतं युधि॥**
**अद्याहं विजयी शत्रौ हते तस्मिन् दुरात्मनि।**

(वा० रा० ६। ९१। १३-१४)

'भाइ लक्ष्मण! तिमी ठूलो दुष्कर कर्म गर्नेवाला हौ। तिमीले यो परम कल्याणकारी कार्य गरेका छौ। रावण-पुत्र मेघनाद मारिनाले अब म रावणलाई युद्धमा मरेको नै सम्झन्छु। त्यस्तो दुरात्मा शत्रु मेघनादलाई मार्नाले अब हाम्रो विजय भइसक्यो।

यसपछि श्रीरामको आज्ञाले सुषेणले औषधिहरूको उपचार गरेर लक्ष्मणको शरीरको सम्पूर्ण व्यथा हटाइदिए, यसबाट लक्ष्मण पहिले झैं स्वस्थ हुनुभयो। राक्षसहरूको मुखबाट लक्ष्मणद्वारा मेघनाद मारिएको समाचार सुनेर रावणलाई धेरै दुःख भयो। उनले क्रोधले युक्त भएर सेनासहित आक्रमण गरे। बड़ा भयानक युद्ध भयो। त्यस युद्धमा रावणको शक्तिबाणले श्रीलक्ष्मणजी मूर्च्छित हुनुभयो। यो देखेर श्रीरामलाई बड़ा दुःख भयो, वहाँले भाइ लक्ष्मणको सेवा र प्रेम सम्झेर विचित्र ढंगले विलाप गर्नुभयो, यसबाट पनि श्रीलक्ष्मणको प्रेमको बारेमा थाहा पाइन्छ।

त्यसपछि सुषेणले हनुमान्‌द्वारा औषधिहरू मँगाएर लक्ष्मणलाई मूर्च्छाबाट जगाए र स्वस्थ पारे। फेरि राम र रावणको घोर युद्ध भयो, जसमा रावणको मृत्यु भयो। सीतालाई बोलाइयो। राज्योचित सत्कारको साथमा वहाँ डोलीमा बसेर आउँदै हुनुहुन्थ्यो, तर श्रीरामले वहाँलाई पैदल ल्याउनको लागि विभीषणलाई आज्ञा दिनुभयो। यो कुरा लक्ष्मणलाई धेरै खट्किया, तर भगवान्‌को त्यस्तै नै इच्छा सम्झेर वहाँ केही बोल्नु

भएन। श्रीरामले त्यहाँ आएपछि सीताको तिरस्कार गर्नुभयो। लक्ष्मणलाई बड़ा दुःख भयो, तैपनि सीताले भनेर श्रीरामको कठोरता सम्झेर वहाँले सीताको लागि चिता तयार पार्नुभयो। सीताको अग्नि-परीक्षा भयो। सबै देवताहरू आउनुभयो। राजा दशरथ पनि आउनुभयो। त्यहाँ श्रीदशरथजीले लक्ष्मणलाई श्रीरामको प्रभाव सुनाएर वहाँको सेवामा तत्पर रहनको लागि उत्साहित गर्नुभयो। यसपछि पुष्पक-विमानमा चढेर सबैजना अयोध्या पुग्नुभयो। त्यहाँ माताहरू र भरत-शत्रुघ्नसंग मिलाप भयो। श्रीराम राजसिंहासनमा विराजमान हुनुभयो। तीनैजना भाइहरू वहाँको सेवा गर्न थाल्नुभयो। यसप्रकार आनन्दपूर्वक धेरै नै समय व्यतीत भयो।

यसपछि सीतालाई घरमा राखेको कारणले भएको लोकापवादलाई सुनेर श्रीरामले सीताको परित्याग गर्ने विचार गर्नुभयो। त्यससमयमा सबै भाइहरूलाई आफ्नो नजिकै बोलाएर श्रीरामले भन्नुभयो— 'तिमीहरू शान्त चित्तले मेरो कुरा सुन, सीताको कारणले सारा राज्यमा मेरो अपवाद (अपयश) भइरहेको छ। यद्यपि लङ्कामा सीताले अग्नि-परीक्षा दिएर सबैलाई विश्वास दिलाइसकेकी थिइन् र लक्ष्मणको सामुन्नेमा नै सबै देवता र सबै महर्षिहरूले पनि सीतालाई निष्पाप बताउनु भएको थियो तथा म स्वयं पनि जान्दछु कि जानकी निर्दोष छिन्, तैपनि अब यो लोकापवाद म सहन गर्न सक्दिनँ। यसकारण भाइ लक्ष्मण! भोलि बिहानै तिमी सुवर्णभूषित रथमा बसालेर जानकीलाई गंगापारि लैजाऊ र वाल्मीकि ऋषिको आश्रमको नजिकै पुर्‍याएर आऊ।' श्रीरामको यो आज्ञा लक्ष्मणको लागि धेरै नै भयंकर थियो, तर श्रीरामले सोच्नुभयो कि लक्ष्मणलाई छोडेर अर्को कुनै व्यक्ति यस आज्ञाको पालन गर्न सक्ने छैन। लक्ष्मणको प्रेममा वहाँलाई पूरा विश्वास थियो। यसकारण वहाँले यो हृदयविदारक आज्ञा लक्ष्मणलाई नै दिनुभयो। श्रीरामले आफ्नो कसम खाएर प्रतिवाद गर्न निषेध गर्नुभयो। यसकारण लक्ष्मणले

केही उत्तर दिन सक्नुभएन। यस प्रसङ्गमा लक्ष्मणले कति असह्य कष्ट सहन गरेर आज्ञा–पालनको व्रत निर्वाह गर्नुभयो, यो कुरो यस प्रसङ्गलाई पढेर नै केही बुझ्न सकिन्छ। यो सानो लेखमा यसको पूरा भाव व्यक्त गर्न सकिंदैन। सीताको परित्याग गर्ने बेला शोकमा भरिएर हात जोडेर लक्ष्मणजी सीताजीसंग भन्नुहुन्छ—

**हृद्गतं मे महच्छल्यं यस्मादार्येण धीमता।**
**अस्मिन्निमित्ते वैदेहि लोकस्य वचनीकृतः॥**

( वा० रा० ७। ४७। ४)

'जनकनन्दिनी! बुद्धिमान् आर्य श्रीरामचन्द्रजीद्वारा म यस लोक–निन्दित कार्यमा नियुक्त गरिएँ—यसबाट मेरो हृदयमा ठूलो काँडो बिझाइरहेको छ।'

यसबाहेक लक्ष्मणले त्यहाँ यो पनि भन्नुभयो कि 'योभन्दा त यदि मेरो मृत्यु हुन्थ्यो भने राम्रो थियो।' यस्तो कठिन आज्ञाको पालन गर्नु लक्ष्मणको नै काम थियो। त्यहाँबाट फर्किंदाखेरि पनि लक्ष्मणजी श्रीरामको नै चिन्ता गर्नुहुन्छ कि अब श्रीराम सीता विना कसरी जीवन धारण गर्न सक्नुहुन्छ। यस प्रकार सुमन्त्रसंग कुराकानी गर्दै–गर्दै लक्ष्मण अयोध्या पुग्नुभयो र श्रीरामसंग भेट गर्नुभयो। त्यसबेला लक्ष्मणको मुखमा शोकका सबै चिह्न विद्यमान थिए। श्रीरामका चरणहरूमा प्रणाम गरेर वहाँले सीताको परित्यागका सारा कुराहरू भनेर सुनाउनुभयो र शोकाकुल श्रीरामलाई धेरै प्रकारले सान्त्वना दिनुभयो। त्यसबेला श्रीराम प्रसन्न भएर लक्ष्मणसंग भन्नुहुन्छ—'भाइ लक्ष्मण! यस्तो विकट समयमा तिमीजस्तो बन्धु निकै नै दुर्लभ छ। सौम्य! तिमी महाबुद्धिमान् हौ र मेरो मनको अनुसार चल्नेव्यक्ति हौ।'

यसपछि अश्वमेध यज्ञको आयोजन भयो। त्यसमा सीता र कुश–लवलाई साथमा लिएर श्रीवाल्मीकि ऋषि पनि आउनुभयो। कुश–

लवले रामायणको कथा सुनाए। श्रीरामको आज्ञाले सीताले सबैको सामुन्ने आफ्नो पातिव्रत्यको परिचय दिनुभयो। वहाँ भूमिमा प्रविष्ट हुनुभयो।

यसपछि ब्रह्माजीको सन्देश लिएर एउटा तपस्वी आए। उनले भगवान्संग यो प्रतिज्ञा गराएर कि जो हामी दुवैको कुरा सुन्दछ अथवा हामीलाई देख्दछ, त्यसको तपाईं वध गराउनुहोस्, एकान्तमा ब्रह्माजीको महाप्रयाण विषयक सन्देश सुनाए। त्यसैबेला दुर्वासा ऋषि आउनुभयो। वहाँले त्यतिखेर नै श्रीरामसंग भेट गर्न खोज्नुभयो। वहाँको शापबाट सम्पूर्ण कुललाई बचाउनको लागि श्रीलक्ष्मणजी आफ्नो जीवनको लोभ छोडेर वहाँको आगमनको सूचना दिनको लागि श्रीरामको नजिकै जानु भयो। फेरि आफैं नै श्रीरामलाई प्रतिज्ञा-पालनको लागि उत्साहित गरेर आफूलाई मार्नको लागि भन्नुभयो। यसमा सबैको सल्लाहले जब श्रीरामले लक्ष्मणको परित्याग गरिदिनुभयो, तब वहाँको वियोग सहन गरेर लक्ष्मणजी एकदिन पनि यस संसारमा रहनुभएन, तुरुन्त नै सरयू नदीको तटमा गएर योगबलले परमधाममा पाल्नुभयो।

श्री लक्ष्मणको माहात्म्यको वर्णन कसले गर्न सक्छ र? यहाँको समान परमार्थ र प्रेमको, बुद्धिमत्ता र निष्कपटताको, सत्परामर्श दिन र आज्ञा पालन गर्नको, तेज र मैत्रीको विलक्षण समन्वय यहाँकै चरित्रहरूमा पाइन्छ। सारा संसार श्रीरामको गुणगान गर्दछ, श्रीराम भरतका गुणहरूको बखान गर्नुहुन्छ तथा श्रीराम र भरत दुवै श्रीलक्ष्मणजीका गुणहरू गाउनुहुन्छ। फेरि म वहाँका गुणहरूको यस सानो लेखमा कसरी वर्णन गर्न सक्छु?

# भरतको आदर्श चरित्र

भरतजीको चरित्र निकै नै उज्ज्वल र आदर्शमय छ। वहाँमा कहीं पनि दोष देखिंदैन। भरतजीको महिमा अपार छ। वाल्मीकीय रामायणमा यहाँलाई श्रीविष्णुको नै अंशावतार बताइएको छ। साथै वहाँको चरित्रले वहाँलाई एक साधु–शिरोमणि, आदर्श स्वामी–भक्त, महात्मा, निःस्पृह र भक्ति प्रधान कर्मयोगी सिद्ध गर्दछ। भरतजी धर्म र नीतिलाई जान्नेवाला, सद्‌गुण सम्पन्न, त्यागी, संयमी, सदाचारी, प्रेम र विनयको मूर्ति, श्रद्धालु र बड़ा बुद्धिमान् हुनुहुन्थ्यो। वैराग्य, सत्य, तपस्या, क्षमा, तितिक्षा, दया, वात्सल्य, धीरता, वीरता, गम्भीरता, सरलता, सौम्यपना, मधुरता, अमानिता र मित्रता आदि गुणहरूको यहाँमा विलक्षण विकास भएको थियो। भ्रातृ–प्रेमको त यहाँ मानौं सजीव मूर्ति नै हुनुहुन्थ्यो।

## भरतको पितृ–भक्ति

विवाहपछि भरतजी शीघ्र नै आफ्ना मामासंग मावल जानुभएको थियो, यसकारण रामायणमा यहाँको पितृ–भक्तिको विशेष वर्णन आउँदैन। तर मावली हजुरबाको घरमा रहँदा एक दिन यहाँले मित्रगोष्ठीमा आफ्नो दुःस्वप्नको कुरा बताएर पिताको लागि जुन दुःख प्रकट गर्नुभयो र अयोध्यामा फर्किसकेपछि आमासंग पिताजीको स्वर्गवासको समाचार पाउँदा शोकको कारणले यहाँको जो दशा भयो तथा यहाँले पिताको लागि जुन प्रकारले विलाप गर्नुभयो, यसबाट यहाँको श्रद्धायुक्त साँचो पितृ–प्रेम थाहा पाइन्छ। जब आमाले यहाँसंग धैर्य धारण गर्न भन्नु भयो, तब त्यसको उत्तरमा यहाँ भन्नुहुन्छ—

**अभिषेक्ष्यति रामं तु राजा यज्ञं नु यक्ष्यते।**
**इत्यहं कृतसंकल्पो हृष्टो यात्रामयासिषम्॥**

**तदिदं ह्यन्यथाभूतं व्यवदीर्णं मनो मम।**
**पितरं यो न पश्यामि नित्यं प्रियहिते रतम्॥**

(वा० रा० २। ७२। २७-२८)

'मैंले त यो सोचेको थिएँ कि महाराजले श्रीरामको राज्याभिषेक गर्नुहुनेछ र स्वयं यज्ञको दीक्षा लिनुहुनेछ। यस विचारले म वहाँबाट प्रसन्नतापूर्वक हिंडेको थिएँ, तर यहाँ आउँदा ती सबै कुराहरू विपरीत नै देखिए। आज जो म सधैं आफ्नो प्रिय र हित गर्नेवाला पिताजीलाई देखिरहेको छैन, यसबाट मेरो हृदय छिया-छिया भइरहेको छ'—इत्यादि।

## भ्रातृ-भक्ति

उपर्युक्त ढंगले पिताको लागि शोक गर्दा गर्दै नै भरतको हृदयमा श्रीरामचन्द्रजीको प्रेम उम्रेर आउँछ र वहाँ भन्नलाग्नुहुन्छ—

**यो मे भ्राता पिता बन्धुर्यस्य दासोऽस्मि सम्मतः।**
**तस्य मां शीघ्रमाख्याहि रामस्याक्लिष्टकर्मणः॥**
**पिता हि भवति ज्येष्ठो धर्ममार्यस्य जानतः।**
**तस्य पादौ ग्रहीष्यामि स हीदानीं गतिर्मम॥**

(वा० रा० २। ७२। ३२-३३)

'जो मेरा दाजु, पिता र बन्धु हुनुहुन्छ जसको म परम प्रिय दास हुँ र जो पवित्र कर्म गर्ने व्यक्ति हुनुहुन्छ, त्यस्ता श्रीरामचन्द्रजीलाई तपाईं छिटै मेरो आगमनको सूचना दिनुहोस्। धर्मलाई जान्नेवाला श्रेष्ठ मनुष्यको लागि दाजु पिताको समान नै हुन्छन्। म वहाँका चरणहरूमा प्रणाम गर्नेछु। अब वहाँ नै मेरा आश्रय हुनुहुन्छ।'

यत्तिकैमा कैकेयीले वहाँलाई सारा घटना भनेर सुनाउनुभयो र राज्य स्वीकार गर्नको लागि भन्नुभयो।

कैकेयीको मुखबाट यसप्रकार दाजु भाइहरूको वन–गमनको कुरा सुनेर भरतजी महान् दुःखले सन्तप्त हुनुहुन्छ। वहाँ व्याकुल हृदयले आमालाई धेरै नै राम्रा–नराम्रा कुराहरू भन्नुहुन्छ र यो पनि भन्नुहुन्छ—

**लुब्धाया विदितो मन्ये न तेऽहं राघवं यथा।**
**तथा ह्यनर्थो राज्यार्थं त्वयाऽऽनीतो महानयम्॥**

(वा० रा० २। ७३। १३)

'म मान्दछु, लोभको वशमा भएको कारणले तपाईंले अहिलेसम्म यो जान्न सक्नुभएन कि मेरो श्रीरामचन्द्रजी प्रति कस्तो भाव छ। यसकारण तपाईंले राज्यको लागि यत्रो ठूलो अनर्थ गर्नुभयो।'

यसबाहेक अरू पनि धेरै कुराहरू भरतजीले आमालाई भन्नुभयो। त्यसपछि भरतजी आमा कौसल्यासंग, जो वहाँसंग भेट गर्न आउँदै हुनुहुन्थ्यो, बाटैमा भेटिनुभयो र वहाँको काखमा चप्किएर रून थाल्नु भयो। यसपछि वहाँ अनेक प्रकारले कसम खाएर आमा कौसल्यालाई विश्वास दिलाउनुहुन्छ कि रामजीको वनवासमा वहाँको सम्मति थिएन।

यसपछि मुनि वसिष्ठको आज्ञानुसार राजा दशरथको अन्त्येष्टिकर्मको तयारी हुन्छ। त्यसबेला राजा दशरथको शवलाई देखेर भरतजी फेरि विलाप गर्दै भन्नुहुन्छ—

**किं ते व्यवसितं राजन् प्रोषिते मय्यनागते।**
**विवास्य रामं धर्मज्ञं लक्ष्मणं च महाबलम्॥**

(वा० रा० २। ७६। ६)

'राजन्! म त परदेश गएको थिएँ, तपाईंकहाँ आइपुग्न पनि भ्याइनँ, त्यसभन्दा पहिले नै धर्मज्ञ श्रीरामचन्द्रजीलाई र महाबली लक्ष्मणलाई वनमा पठाएर तपाईंले यो के विचार गर्नुभयो?'

भरतलाई यसप्रकार विलाप गरेको देखेर महामुनि वसिष्ठजी फेरि सम्झाउनुहुन्छ। त्यसपछि विधि–विधानले राजा दशरथको अन्त्येष्टि–

क्रिया सम्पन्न हुन्छ, नगरमा आएर दश दिन सम्म भुईंमा शयन गर्दै भरत बड़ा दुःखले समय बिताउनुहुन्छ।

श्राद्ध आदिबाट निवृत्त भइसकेपछि राजसभामा श्रीवसिष्ठजी तथा अन्य सबै सभासद्हरूले भरतजीलाई सम्झाएर आग्रहपूर्वक राज्य स्वीकार गर्नको लागि भन्न थाले। तब भरतजीले भन्नुभयो—

'म र यो राज्य दुवै श्रीरामका हुन्। तपाईंहरू मलाई धर्मको उपदेश दिनुहोस्। श्रीरामचन्द्रजी सबै प्रकारले म भन्दा ठूला हुनुहुन्छ, यसकारण—

**राममेवानुगच्छामि स राजा द्विपदां वरः।**
**त्रयाणामपि लोकानां राघवो राज्यमर्हति॥**

× × × ×

**यदि त्वार्यं न शक्ष्यामि विनिवर्तयितुं वनात्।**
**वने तत्रैव वत्स्यामि यथार्यो लक्ष्मणस्तथा॥**
**सर्वोपायं तु वर्तिष्ये विनिवर्तयितुं बलात्।**
**समक्षमार्यमिश्राणां साधूनां गुणवर्तिनाम्॥**

(वा० रा० २। ८२। १६,१८-१९)

'पुरुषोत्तम श्रीरघुनाथजी अयोध्याको त कुरै के गर्नु, तीनै लोकको पनि राजा हुन योग्य हुनुहुन्छ, म वहाँकै अनुसरण गर्नेछु। तपाईंहरूजस्ता गुणवान् श्रेष्ठ साधु पुरुषको सामुन्नेमा नै वहाँलाई बलपूर्वक फर्काएर ल्याउन म सबै प्रकारले उपाय गर्नेछु। यसमा पनि यदि आर्य श्रीरामचन्द्रजीलाई फर्काएर ल्याउनमा समर्थ भइनँ भने त जसरी भाइ लक्ष्मण रहन्छन्, त्यसरी म पनि त्यहीं वनमा नै निवास गर्नेछु। भरतका यस्ता भ्रातृ-प्रेममा सानिएका वचनहरू सुनेर त्यहाँ बसेका सबै सभासद्हरूका आँखाबाट आनन्दका आँसुहरू बग्न थाल्दछन्।

श्रीरामलाई फर्काएर ल्याउनको लागि जब भरत दल-बलको साथमा चित्रकूटको लागि प्रस्थान गर्नुहुन्छ, त्यसबेला बाटामा वहाँको

निषादराज गुहसंग भेट हुन्छ। यहाँको साथमा चतुरङ्गिणी सेनालाई देखेर गुहको मनमा सन्देह हुनजान्छ र उनी आफ्नो सन्देह यहाँको सामुन्ने प्रकट गरिदिन्छन्। त्यसबेला भरत निषादसंग भन्नुहुन्छ—

**मा भूत् स कालो यत् कष्टं न मां शङ्कितुमर्हसि।**
**राघवः स हि मे भ्राता ज्येष्ठः पितृसमो मतः॥**
**तं निवर्तयितुं यामि काकुत्स्थं वनवासिनम्।**

(वा० रा० २। ८५। ९-१०)

'निषादराज! यस्तो अवसर न आओस् जो यसप्रकार दुःखदायक होस्। तपाईंले ममाथि शंका गर्नुपर्दैन। किनभने रघुकुलभूषण श्रीराम मेरा दाजु हुनुहुन्छ र म वहाँलाई पिताकै समान सम्झन्छु। म त्यस्ता वनवासी श्रीरामलाई वनवासबाट फर्काउनको लागि गइरहेको छु।' भरतको कुरा सुनेर निषादराजको मुख प्रसन्नताले फक्रियो। उनी हर्षमा भरिएर भन्न लागे—

**धन्यस्त्वं न त्वया तुल्यं पश्यामि जगतीतले।**
**अयत्नादागतं राज्यं यस्त्वं त्यक्तुमिहेच्छसि॥**

(वा० रा० २। ८५। १२)

'तपाईं धन्य हुनुहुन्छ, जो प्रयत्न विना मिलेको राज्यलाई त्यागि दिन चाहनुहुन्छ, यसकारण यस भूमण्डलमा तपाईंसमान मलाई कुनै अर्को मान्छे देखिंदैन।'—इत्यादि।

यसप्रकार दुवैमा धेरै बेरसम्म कुराकानीहरू भइरहे। श्रीरामको वियोगमा वहाँहरूको चिन्तन गर्दा-गर्दा शोकाग्निले सन्तप्त भएको कारणले भरतजी सहसा मूर्च्छित हुनुभयो। नजिकै बसेका शत्रुघ्न पनि वहाँलाई समाएर रून थाल्नुभयो र बेहोस हुनुभयो। यो देखेर निषादराज मुग्ध भए। केही बेरपछि चित्त स्वस्थ भएपछि भरतजीले फेरि गुहसंग सोध्नुभयो—

**भ्राता मे क्वावसद् रात्रौ क्व सीता क्व च लक्ष्मणः।**
**अस्वपच्छयने कस्मिन् किं भुक्त्वा गुह शंस मे॥**

(वा० रा०२। ८७। १३)

'निषादराज! त्यसदिन राती मेरा दाजु श्रीराम सीता र लक्ष्मणसंग यहाँ कुन ठाउँमा बस्नुभयो तथा वहाँहरूले के भोजन गरेर कस्तो ओछ्यानमा शयन गर्नुभएको थियो? सबै कुरा मलाई भन।'

भरतले यसरी सोधेपछि गुह धेरै प्रसन्न भए र उनले सारा घटना जस्ताको त्यस्तै सुनाइदिए। उनले वहाँलाई त्यो चिउरीको बोट र कुशका ओछ्यान देखाए, जहाँ श्रीरामले सीताको साथमा राती शयन गर्नुभएको थियो। त्यो ठाउँलाई देखेर भरतजीको विचित्र दशा भयो, वहाँ विभिन्नप्रकारले विलाप गर्न थाल्नुभयो—

**हा हतोऽस्मि नृशंसोऽस्मि यत् सभार्यः कृते मम।**
**ईदृशीं राघवः शय्यामधिशेते ह्यनाथवत्॥**
**सार्वभौमकुले जातः सर्वलोकसुखावहः।**
**सर्वप्रियकरस्त्यक्त्वा राज्यं प्रियमनुत्तमम्॥**
**कथमिन्दीवरश्यामो रक्ताक्षः प्रियदर्शनः।**
**सुखभागी न दुःखार्हः शयितो भुवि राघवः॥**
**धन्यः खलु महाभागो लक्ष्मणः शुभलक्षणः।**
**भ्रातरं विषमे काले यो राममनुवर्तते॥**

(वा० रा० २। ८८। १७—२०)

'हाय! म मारिएँ। म बड़ा क्रूर छु, जसको कारणले श्रीरघुनाथजीले सती सीताको साथमा अनाथ झैं यस्तो शय्यामा सुत्नुपर्दछ। जो सम्राट्को वंशमा उत्पन्न, सबै मान्छेहरूलाई सुख दिनेवाला र सबैको प्रिय गर्नेवाला हुनुहुन्छ, जसको वर्ण नीलकमलको समान छ, नेत्रहरू राता छन्, जो सबप्रकारले सुख भोग्नको योग्य र दुःखको अयोग्य हुनुहुन्छ, त्यस्ता

प्रियदर्शन श्रीरघुनाथजी अत्युत्तम प्रिय राज्यलाई छोडेर कुन प्रकारले पृथ्वीमा शयन गर्नुहुन्छ। उत्तम लक्षणहरूले युक्त लक्ष्मण नै धन्य र ठूलो भाग्यशाली हुन्, जो संकटको समयमा दाजु श्रीरामको साथमा रहेर वहाँको सेवा गर्दछन्।' भरतजीले विलाप गर्दै यस्तै प्रकारका अरू पनि धेरै नै कुराहरू भन्नुभयो।

अगाडि गएर जब भरतजी महर्षि भरद्वाजको आश्रममा पुग्नुहुन्छ, त्यतिखेर महर्षिले कुशल समाचार सोधेपछि वहाँको हृदयमा गहिरो चोट पुऱ्याउने खालको प्रश्न गर्नुहुन्छ। वहाँ भन्नुहुन्छ—'तपाईंको यहाँ वनमा कुन कारणले आगमन भयो? तपाईं निरपराधी धर्मात्मा राम र लक्ष्मणको कुनै अनिष्ट त गर्न चाहनुहुन्न? यो सुनेर दुःखको कारणले भरतका आँखाहरूमा पानी भरिएर आयो। वहाँ गद्‌गदवाणीमा बोल्नुभयो—'

**हतोऽस्मि यदि मामेवं भगवानपि मन्यते।**
**मत्तो न दोषमाशङ्क्रे मैवं मामनुशाधि हि॥**
**न चैतदिष्टं माता मे यदवोचन्मदन्तरे।**
**नाहमेतेन तुष्टश्च न तद्वचनमाददे॥**
**अहं तु तं नरव्याघ्रमुपयातः प्रसादकः।**
**प्रतिनेतुमयोध्यायां पादौ चास्याभिवन्दितुम्॥**
**तं मामेवंगतं मत्वा प्रसादं कर्तुमर्हसि।**
**शंस मे भगवन् रामः क्व संप्रति महीपतिः॥**

(वा० रा० २। ९०। १५—१८)

'मुने! मबाट कुनै अपराध भएको छैन। फेरि पनि तपाईं यदि मलाई यति अपराधी मान्नुहुन्छ, तब त म हरेक प्रकारले मारिएँ। यसकारण तपाईं मसंग यस्तो कठोर कुरा न गर्नुहोस्। मेरो अनुपस्थितिमा मेरी आमाले जे भन्नुभयो अथवा गर्नुभयो, त्यो मलाई अभीष्ट छैन। म त्यसबाट

अलिकति पनि प्रसन्न छैन र न मैंले वहाँको कुरालाई मानेको नै छु। म त त्यस्ता नरश्रेष्ठ श्रीरामलाई प्रसन्न पारेर अयोध्या फर्काएर ल्याउनको लागि र वहाँका चरणहरूमा वन्दना गर्नको लागि वनमा आएको हुँ। यसकारण मलाई यसप्रकार आएको सम्झेर तपाईं ममाथि कृपा गर्नुहोस् र भन्नुहोस् कि यतिखेर महाराज श्रीरामचन्द्रजी कहाँ हुनुहुन्छ?'

यो सुनेर भरद्वाजजी बड़ा प्रसन्न हुनुभयो र भरतजीको प्रशंसा गर्दै भन्नुभयो—

**जाने चैतन्मनःस्थं ते दृढीकरणमस्त्विति।**
**अपृच्छं त्वां तवात्यर्थं कीर्तिं समभिवर्धयन्॥**

(वा० रा० २। ९०। २१)

'भरत! म तपाईंको मनको कुरा जान्दछु। तैपनि त्यसलाई दृढ गर्नको लागि र तपाईंको कीर्तिलाई निकै विस्तार गर्नको लागि नै मैंले तपाईंसंग यी सबै कुरा सोधेको हुँ।'

यसपछि अरू पनि धेरै कुराहरू भए। भरद्वाजजीको धेरै आग्रहले वहाँको आतिथ्य भरतजीले स्वीकार गर्नुपर्‍यो। ऋषिराजले निकै विचित्र ढंगले सेना र परिवारसहित भरतको अतिथि सत्कार गर्नुभयो। निकै नै आनन्दले त्यो रात्रि व्यतीत भयो। त्यसै प्रसङ्गमा यो कुरा पनि आएको छ—

**तत्र राजासनं दिव्यं व्यजनं छत्रमेव च।**
**भरतो मन्त्रिभिः सार्धमभ्यवर्तत राजवत्॥**
**आसनं पूजयामास रामायाभिप्रणम्य च।**
**वालव्यजनमादाय न्यषीदत्सचिवासने॥**

(वा० रा० २। ९१। ३८-३९)

'भरतले त्यस राजमहलमा (जसलाई मुनिले आफ्नो योगबलले रच्नुभएको थियो) दिव्य राज्यसिंहासन, छत्र र चँवर पनि देख्नुभयो

तथा मन्त्रीहरूको साथमा वहाँले राजा रामकै जस्तो ती सबैको सम्मान गर्नुभयो। श्रीरामलाई प्रणाम गरेर त्यस आसनको पूजा गर्नुभयो र आफूले हातमा चमर लिएर मन्त्रीको आसनमा गएर बस्नुभयो। हेर्नुहोस् कति उच्च भावना र भक्ति हो। कस्तो पवित्र भाव हो। कति निरभिमानता र कति त्याग हो।

जब भरतजी चित्रकूटको नजिकै पुग्नुहुन्छ, त्यसबेला आकाशमा धूलो उडेको देखेर श्रीराम लक्ष्मणसंग त्यसको कारण जान्नको लागि सोध्नुहुन्छ। लक्ष्मण रूखमा चढेर हेर्नुहुन्छ र यो निश्चय गरेर कि सेनासहित भरत आइरहनुभएको छ, वहाँ प्रति सन्देह प्रकट गर्दै कठोर वचन भन्न थाल्नुहुन्छ। तब श्रीरामचन्द्रजी भरतका गुण र प्रेमको बढाइँ गर्दै भन्नुहुन्छ—

**प्राप्तकालं यथैषोऽस्मान् भरतो द्रष्टुमर्हति।**
**अस्मासु मनसाप्येष नाहितं किंचिदाचरेत्॥**
**विप्रियं कृतपूर्वं ते भरतेन कदा नु किम्।**
**ईदृशं वा भयं तेऽद्य भरतं यद् विशंकसे॥**
**नहि ते निष्ठुरं वाच्यो भरतो नाप्रियं वचः।**
**अहं ह्यप्रियमुक्तः स्यां भरतस्याप्रिये कृते॥**

× × × ×

**यदि राज्यस्य हेतोस्त्वमिमां वाचं प्रभाषसे।**
**वक्ष्यामि भरतं दृष्ट्वा राज्यमस्मै प्रदीयताम्॥**
**उच्यमानो हि भरतो मया लक्ष्मण तद्वचः।**
**राज्यमस्मै प्रयच्छेति बाढमित्येव मंस्यते॥**

(वा० रा० २। ९७। १३—१५,१७-१८)

'जसरी यतिखेर यी-भरत हामीहरूसंग भेटघाट गर्न आइरहेका छन् यो सर्वथा उचित हो। हामीहरूको अहितको आचरण त उनी

कहिल्यै मनले पनि गर्न सक्दैनन्। भरतले तिम्रो कहिले र के अपकार गरेका छन्, जसको कारणले तिमी आज उनीबाट यस्तो भय र यस प्रकारको आशंका गरिरहेका छौ? (भरत आएपछि) तिमी उनलाई कुनै कठोर अथवा अप्रिय वचन न भन्नू। यदि तिमीले उनको साथमा कुनै प्रतिकूल व्यवहार गऱ्यौ अथवा अप्रिय वचन भन्यौ भने त त्यो व्यवहार मसंग नै गरिएको मानिनेछ। यदि तिमी राज्यको लागि यस्तो कठोर कुरा भन्छौ भने त भेट हुँदा म उनलाई भनिदिन्छु कि यो राज्य लक्ष्मणलाई देऊ। मैले यस्तो भनेमा उनले अवश्य नै मेरो कुराको अनुमोदन गर्नेछन् र तिमीलाई राज्य दिनेछन्।'

यसप्रकार यद्यपि भरतजी सर्वथा साधु र निर्दोष हुनुहुन्थ्यो तथापि वहाँले सबैको सन्देहको शिकार बन्नुपऱ्यो। भरतको समान निःस्पृह, धर्मात्मा एवं त्यागी महापुरुषले यसप्रकार सबैको सन्देहको शिकार बन्नु जगत्‌को इतिहासमा एउटा अनौठो कुरा हो। यति भएर पनि भरत सबै कुरा सहनुहुन्छ। धन्य वहाँको प्रेम। धन्य वहाँको स्वामिभक्ति!! र धन्य वहाँको सहिष्णुता!!!

यता भरतजी भाइ शत्रुघ्न, गुह र प्रधान-प्रधान मन्त्रीहरूलाई श्रीरामको आश्रमलाई खोज्नको लागि आज्ञा दिएर भन्न थाल्नुहुन्छ—

**यावन्न चन्द्रसङ्काशं तद् द्रक्ष्यामि शुभाननम्।**
**भ्रातुः पद्मविशालाक्षं न मे शान्तिर्भविष्यति॥**

× × × ×

**यावन्न चरणौ भ्रातुः पार्थिवव्यञ्जनान्वितौ।**
**शिरसा प्रग्रहीष्यामि न मे शान्तिर्भविष्यति॥**
**यावन्न राज्ये राज्यार्हः पितृपैतामहे स्थितः।**
**अभिषिक्तो जलक्लिन्नो न मे शान्तिर्भविष्यति॥**

(वा० रा० २। ९८। ७, ९-१०)

'जबसम्म दाजु श्रीरामचन्द्रका कमलदल-समान विशाल नेत्र भएको र चन्द्रमाकै समान सुशोभित त्यस मुखकमललाई देख्न पाउँदिनँ, तबसम्म मलाई शान्ति मिल्ने छैन। जबसम्म आफ्ना दाजुका राजचिह्नहरूले युक्त युगल चरणहरूमा शिर राखेर प्रणाम गर्दिनँ, तब सम्म मलाई शान्ति मिल्ने छैन। जबसम्म राज्यको साँचो अधिकारी भगवान् श्रीराम अभिषेकको जलले सिक्त भएर आफ्ना पिता-पितामहहरूको साम्राज्यमा प्रतिष्ठित हुनुहुनेछैन, तबसम्म मलाई शान्ति मिल्ने छैन।'

यस प्रकार धेरै कुरा भनेर पुरुषश्रेष्ठ भरतजीले पैदल नै श्रीरामको खोजी गर्नको लागि त्यस गहनवनमा प्रवेश गर्नुभयो। अग्लो रूखमा चढेर वहाँले टाढैबाट नै श्रीरामको आश्रमलाई र त्यहाँ बसेका श्रीरामचन्द्रजीलाई चिन्नुभयो, त्यसबाट वहाँमा नयाँ जीवन आइहाल्यो। वहाँ निकै प्रसन्न हुनुभयो र गुहलाई साथमा लिएर आश्रमतर्फ हिंड्नुभयो।

श्रीरामको कुटियाको नजिकै पुगेर भरतजी देख्नुहुन्छ कि सम्पूर्ण पृथ्वीका स्वामी धर्मपरायण भगवान् श्रीरामचन्द्रजी सीता र लक्ष्मणको साथमा एउटा चौतारोमा बस्नुभएको छ। वहाँले कालो मृगचर्म र रूखका बोक्राको वस्त्र धारण गर्नुभएको छ। वहाँको शिरमा जटाहरू सुशोभित भइरहेका छन् तथा सिंहका जस्ता काँधहरू, ठूला ठूला भुजाहरू र कमलका जस्ता नेत्रहरू छन्। श्रीरामलाई यस अवस्थामा देखेर महात्मा भरत शोकमा निमग्न हुनुहुन्छ। दाजुतर्फ दृष्टि पर्दा नै आर्त भावले विलाप गर्दै गद्गदवाणीले भन्न लाग्नुहुन्छ—

**यः संसदि प्रकृतिभिर्भवेद्युक्त उपासितुम्।**
**वन्यैर्मृगैरुपासीनः सोऽयमास्ते ममाग्रजः॥**
**वासोभिर्बहुसाहस्रैर्यो महात्मा पुरोचितः।**
**मृगाजिने सोऽयमिह प्रवस्ते धर्ममाचरन्॥**

× × × ×

**मन्निमित्तमिदं दुःखं प्राप्तो रामः सुखोचितः।**
**धिग्जीवितं नृशंसस्य मम लोकविगर्हितम्॥**

(वा० रा० २। ९९। ३१-३२,३६)

'हाय! जो राजसभामा बसेर प्रजा र मन्त्रीहरूद्वारा सम्मान पाउन योग्य हुनुहुन्छ, वहाँ नै मेरा दाजु यहाँ जंगली पशुहरूले घेरिएर बस्नुभएको छ। जो महात्मा पहिले हजारौंको लागत मूल्य पर्ने वस्त्रहरूको उपयोग गर्नुहुन्थ्यो, वहाँ आज यहाँ धर्माचरण गर्दै केवल दुईवटा मृगचर्म धारण गरेर रहनुहुन्छ। हाय! जो सब प्रकारका सुखका योग्य हुनुहुन्छ, त्यस्ता श्रीराम मेरो नै कारणले यति दुःख उठाइरहनुभएको छ। म कति क्रूर हुँ। मेरो यस लोकनिन्दित जीवनलाई धिक्कार छ।'

यस प्रकार विलाप गर्दै-गर्दै भरतजी दुःखले व्याकुल हुनुभयो। वहाँको मुखकमलमा आँसुहरूको धारा बग्नथाल्यो। वहाँ अत्यन्त दुःखले विह्वल भएको कारणले श्रीरामका चरणहरू छुनुभन्दा पहिले नै 'हा आर्य' भनेर वहाँको नजिकै दीन-दुःखी झैं पछारिनुभयो। शोकले वहाँको गला रोकिएको थियो, केही पनि बोल्न सक्नुभएन। फेरि शत्रुघ्नले पनि रूँदैरूँदै श्रीरामका चरणहरूमा प्रणाम गर्नुभयो। जटा र रूखका बोक्रा लगाएका भरतलाई हात जोडेर भुईंमा परेको देखेर श्रीरामले निकै कठिनताले चिन्नुभयो। वहाँले दुवै भाइहरूलाई उठाउनु भयो र छातीमा लगाउनुभयो। भरतको व्यवहार देखेर सम्पूर्ण वनवासीहरू रूनथाले।

त्यसपछि भाइ भरतलाई काखमा लिएर श्रीरामचन्द्रजीले सोध्नु भयो-'भाइ! तिमी राज्य छोडेर वल्कल-वस्त्र, मृगचर्म र जटा धारण गरेर यहाँ किन आयौ? यसमा भरतजीले पिताको मृत्युको समाचार सुनाएर भन्नुभयो—

**तथानुपूर्व्या युक्तश्च युक्तं चात्मनि मानद।**

राज्यं प्राप्नुहि धर्मेण सकामान् सुहृदः कुरु॥

× × × ×

एभिश्च सचिवैः सार्धं शिरसा याचितो मया।
भ्रातुः शिष्यस्य दासस्य प्रसादं कर्तुमर्हसि॥

(वा० रा० २।१०१।१०, १२)

'सबैलाई सम्मान दिनेवाला रघुनन्दन! परम्परा अनुसार तथा योग्य भएको कारणले पनि यस राज्यको अधिकारी तपाईं नै हुनुहुन्छ। यसकारण न्यायले यस राज्यको धर्मानुसार ग्रहण गरेर तपाईं आफ्ना मित्रहरूको मनोरथ पूर्ण गर्नुहोस्। म तपाईंको भाइ, शिष्य र दास हुँ। यी मन्त्रीहरूको साथमा तपाईंका चरणहरूमा शिर झुकाएर प्रार्थना गर्दछु, ममाथि कृपा गर्नुहोस्।'

यसप्रकारका अरू पनि धेरै कुराहरू भनेर भरतजी आँखाहरूबाट आँशु बगाउँदै फेरि श्रीरामका चरणहरूमा पछारिनुभयो र राज्याभिषेकको लागि वहाँसंग प्रार्थना गर्न थाल्नुभयो। तब श्रीरामले धेरै शास्त्रोक्त कुराहरू भनेर र पिताको आज्ञाको महत्त्व देखाएर भरतलाई राज्य ग्रहण गर्नको लागि धेरै सम्झाउनुभयो, तर वहाँलाई सन्तोष भएन। वहाँले भन्नुभयो—'भगवन्! तपाईंको बराबरी कसले गर्न सक्छ र? तपाईंको लागि सुख-दुःख, मान-आपमान, निन्दा-स्तुति सबै समान छन्। जो संग तपाईंको जस्तो ज्ञान छ, त्यो संकट पर्दा पनि विषाद न गर्ला, तर म यस्तो होइन। यसकारण म बारम्बार तपाईंका चरणहरूमा शिर झुकाएर याचना गर्दछु तपाईं दया गर्नुहोस्। मेरो र मेरी आमाको कलङ्क धोएर पूज्य पिताजीलाई पनि निन्दाबाट बचाउनुहोस्।'—इत्यादि।

भरतले यसप्रकार भनेपछि सम्पूर्ण ऋत्विज्, पुरवासी, भिन्न-भिन्न समुदायका नेता र आमाहरू यी सबै अचेत जस्ता भएर आँसु बगाउँदै वहाँको प्रशंसा गर्न थाले र सबैले आफ्नो आफ्नो योग्यताको अनुसार

श्रीरामचन्द्रजीसंग फर्कने प्रार्थना गरे।

त्यसपछि श्रीरामले फेरि धेरै न्याय र धर्मले पूर्ण वचन भनेर भरतलाई सम्झाउनुभयो। यसप्रकार कुरा हुँदा हुँदा जब श्रीरामचन्द्रजीले कुनै प्रकारले पनि स्वीकृति दिनुभएन, तब भरतजीको मनमा बड़ा दुःख भयो, वहाँले भन्नुभयो जबसम्म मेरा स्वामी ममाथि प्रसन्न हुनुहुन्न, तबसम्म म केही खान-पिन नगरी यहाँके सामुन्ने बसिरहनेछु।' यति भनेर वहाँ कुशको आसन ओछ्याएर बस्नुभयो। तब श्रीरामचन्द्रले फेरि भरतलाई सम्झाउनुभयो कि—'भाइ! तिम्रो यो कार्य धर्मको विरूद्ध छ। यसकारण तिमी यो दुराग्रहको त्याग गर।' यो सुनेर भरतले तुरुन्त नै उभिएर फेरि सबैको सामुन्ने भन्न लाग्नुभयो कि—'यदि पिताको आज्ञाको पालन गर्नको लागि यहाँले वनमा रहन अनिवार्य छ भने त यहाँको सट्टामा म नै चौधवर्ष सम्म वनमा निवास गर्नेछु।' यसमा फेरि श्रीरामले भरतलाई सम्झाउनुभयो कि—'भाइ भरत! यस प्रकार साटासाट गर्ने हामीहरूलाई अधिकार छैन।' यसपछि सबैको सामुन्ने भगवान् श्रीरामले भन्नुभयो—

**जानामि भरतं क्षान्तं गुरुसत्कारकारिणम्।**
**सर्वमेवात्र कल्याणं सत्यसन्धे महात्मनि॥**
**अनेन धर्मशीलेन वनात् प्रत्यागतः पुनः।**
**भ्रात्रा सह भविष्यामि पृथिव्याः पतिरुत्तमः॥**
**वृतो राजा हि कैकेय्या मया तद्वचनं कृतम्।**
**अनृतान्मोचयानेन पितरं तं महीपतिम्॥**

(वा० रा० २। १११। ३०—३२)

'म जान्दछु कि भरत बड़ा क्षमाशील र गुरुजनहरूको सत्कार गर्नेवाला छन्। यी सत्यप्रतिज्ञ महात्मामा सबैकल्याणकारी गुण वर्तमान छन्। वनवासको अवधि समाप्त गरेर फेरि जब म फर्किनेछु, तब म

आफ्ना यी धर्मशील भाइको साथमा यस पृथ्वीको प्रमुख राजा बन्नेछु। कैकेयीले राजासंग वरदान माग्नुभयो, मैंले वहाँको आज्ञालाई स्वीकार गरें। यसकारण भाइ भरत! अब तिमी मैंले भनेको मानेर ती पृथ्वीपति राजाधिराज पिताजीलाई असत्यको बन्धनबाट मुक्त पार।'

ती अतुलित तेजस्वी भाइहरूको त्यो रोमाञ्चकारी संवाद सुनेर र आपसको प्रेमपूर्ण व्यवहार देखेर त्यहाँ आएको जनसमुदायको साथमा सबै महर्षिहरू विस्मित र मुग्ध हुनुभयो। अन्तरिक्षमा अदृश्य भावले उभिएका मुनिहरू र त्यहाँ प्रत्यक्ष बसेका महर्षिहरूले ती दुवै भाइहरूको धेरै धेरै प्रशंसा गर्न लाग्नुभयो।

यसपछि सबै महर्षिहरूले भरतलाई श्रीरामको कुरा मान्नको लागि सम्झाउनुभयो। यसबाट श्रीरामलाई बडा प्रसन्नता भयो, तर भरतलाई सन्तोष भएन। वहाँ लट्पटिंदो बोलीले हात जोडेर फेरि श्रीरामसंग भन्न लाग्नु भयो—'आर्य! म यस राज्यको रक्षा गर्न सक्दिनँ। तपाईं यस राज्यलाई स्वीकार गरेर अर्को कसैलाई यसको पालनको भार सुम्पिदिनुहोस्।' यस्तो भनेर भरत आफ्ना दाजुका चरणहरूमा पर्नुभयो। तब श्रीरामचन्द्रले वहाँलाई उठाएर काखमा बसाल्नुभयो र मधुर स्वरले भन्नुभयो—

**आगता त्वामियं बुद्धिः स्वजा वैनयिकी च या।**
**भृशमुत्सहसे तात रक्षितुं पृथिवीमपि॥**

(वा० रा० २। ११२। १६)

'प्यारा भाइ! तिमीलाई स्वभावले नै तथा शिक्षाको फलस्वरूप जो यो विनययुक्त बुद्धि प्राप्त भएको छ, यसबाट तिमी सारा पृथ्वीको रक्षा गर्नमा पनि पूर्णतया समर्थ छौ।'

सूर्यतुल्य तेजस्वी श्रीरामचन्द्रजीका यी प्रेम र शिक्षा भरिएका वचन सुनेर र वहाँको दृढता देखेर भरतले भन्नुभयो—

**अधिरोहार्य पादाभ्यां पादुके हेमभूषिते।**

**एते हि सर्वलोकस्य योगक्षेमं विधास्यतः॥**

(वा० रा० २। ११२। २१)

'आर्य! यी दुईवटा स्वर्णभूषित पादुकाहरू हुन्, तपाईं यिनीहरूमाथि आफ्ना चरण राख्नुहोस्। यी नै सम्पूर्ण जगत्‌को योगक्षेमको निर्वाह गर्नेछन्।' धन्यवाद छ भरतको उच्चतम भावलाई।

भगवान् श्रीरामचन्द्रजीले ती पादुकाहरूमा आफ्ना मंगलमय चरणयुगल राखेर ती पादुकाहरू भरतलाई दिनुभयो। ती पादुकाहरूलाई प्रणाम गरेर भरतले श्रीरामसंग भन्नुभयो—

**चतुर्दश हि वर्षाणि जटाचीरधरो ह्यहम्॥**
**फलमूलाशनो वीर भवेयं रघुनन्दन।**
**तवागमनमाकाङ्क्षन् वसन् वै नगराद् बहिः॥**
**तव पादुकयोर्न्यस्य राज्यतन्त्रं परंतप।**
**चतुर्दशे हि सम्पूर्णे वर्षेऽहनि रघूत्तम॥**
**न द्रक्ष्यामि यदि त्वां तु प्रवेक्ष्यामि हुताशनम्।**

(वा० रा० २। ११२। २३—२६)

'वीर रघुनन्दन! म पनि चौध वर्षसम्म जटा र चीर (वल्कलवस्त्र) धारण गरेर फल–मूलको आहार गर्नेछु र तपाईंको आगमनको बाटो हेर्दै नगरभन्दा बाहिर नै रहनेछु। परन्तप! यति दिनसम्म राज्यको सारा भार तपाईंका यी चरणपादुकाहरूमा नै रहनेछ। रघुश्रेष्ठ! चौध वर्ष पूरा भइसकेपछि, यदि त्यसै दिन मलाई हजुरको दर्शन मिलेन भने त म बल्दो आगोमा प्रवेश गर्नेछु।'

भरतको यो प्रतिज्ञा सुनेर भगवान्‌ले प्रसन्नतापूर्वक त्यसको अनुमोदन गर्नुभयो। त्यसपछि दुवै भाइहरूलाई माता कैकेयीसंग राम्रो व्यवहार गर्ने शिक्षा दिएर र हृदयले दुवैको आलिङ्गन गरेर विदा गर्नु भयो। त्यस समय भाइ भरतको वियोगमा श्रीरामचन्द्रका आँखाहरूमा

जल भरिएर आयो।

त्यसपछि भरतजी भगवान्का पादुकाहरूलाई शिरमा धारण गरेर बडा प्रसन्ताले रथमा सवार हुनुभयो तथा बाटामा भरद्वाजजीसंग भेट गरेर, वहाँसंग सारा कुरा भनेर र आज्ञा लिएर श्रृंगवेरपुर हुँदै अयोध्या पुग्नुभयो। फेरि आमाहरूलाई महलमा राखेर भरतले सबै गुरुजनहरूसंग भन्नुभयो—

**नन्दिग्रामं गमिष्यामि सर्वानामन्त्रयेऽत्र वः।**
**तत्र दुःखमिदं सर्वं सहिष्ये राघवं विना॥**
**गतश्चाहो दिवं राजा वनस्थः स गुरुर्मम।**
**रामं प्रतीक्षे राज्याय स हि राजा महायशाः॥**

(वा० रा० २। ११५। २-३)

'अब म नन्दिग्राममा जानेछु, यसको लागि तपाईंहरू सबैजनाको आज्ञा चाहन्छु। धेरै दुःखको कुरा छ, महाराज त स्वर्ग गइहाल्नुभयो र मेरा परम पूज्य गुरु श्रीराम वनमा निवास गर्नुहुन्छ। यसकारण म त्यहीं बसेर श्रीरामको वियोगमा यी सबै दुःखहरूलाई सहन गर्नेछु र राज्यको लागि श्रीरामचन्द्रको प्रतीक्षा गर्नेछु, किनभने महायशस्वी श्रीराम नै हामीहरूका राजा हुनुहुन्छ।'

भरतको यस्तो कुरा सुनेर मन्त्रीहरूसहित पुरोहित श्रीवसिष्ठजीले भन्नुभयो—

**सुभृशं श्लाघनीयं च यदुक्तं भरत त्वया।**
**वचनं भ्रातृवात्सल्यादनुरूपं तवैव तत्॥**
**नित्यं ते बन्धुलुब्धस्य तिष्ठतो भ्रातृसौहृदे।**
**मार्गमार्यं प्रपन्नस्य नानुमन्येत कः पुमान्॥**

( वा० रा० २। ११५। ५-६)

'भरत! भ्रातृ-भक्तिले प्रेरित भएर तिमीले जुन वचन भनेका छौ,

त्यो अत्यन्त प्रशंसनीय छ। वास्तवमा त्यो तिम्रो नै योग्य हो। तिमी आफ्ना दाजुको दर्शनको लागि सधैं नै लालायित रहन्छौ, वहाँकै हितमा संलग्न छौ र अत्यन्त उत्तम मार्गमा हिंडिरहेका छौ, यसकारण तिम्रो विचारको अनुमोदन कुन पुरुषले न गर्ला?'

यसप्रकार सबैको आज्ञा लिएर भरत जी श्रीरामचन्द्रजीका पादुकाहरूलाई शिरमा राखेर शत्रुघ्नका साथमा नन्दिग्राम जानुभयो। त्यहाँ रथबाट ओर्लेर सबै गुरूजनहरूसंग भन्नुभयो—

**एतद्राज्यं मम भ्रात्रा दत्तं संन्यासमुत्तमम्।**
**योगक्षेमवहे चेमे पादुके हेमभूषिते॥**

× × ×

**छत्रं धारयत क्षिप्रमार्यपादाविमौ मतौ।**
**आभ्यां राज्ये स्थितो धर्मः पादुकाभ्यां गुरोर्मम॥**
**भ्रात्रा तु मयि संन्यासो निक्षिप्तः सौहृदादयम्।**
**तमिमं पालयिष्यामि राघवागमनं प्रति॥**
**क्षिप्रं संयोजयित्वा तु राघवस्य पुनः स्वयम्।**
**चरणौ तौ तु रामस्य द्रक्ष्यामि सहपादुकौ॥**
**ततो निक्षिप्तभारोऽहं राघवेण समागतः।**
**निवेद्य गुरवे राज्यं भजिष्ये गुरुवर्तिताम्॥**
**राघवाय च संन्यासं दत्त्वेमे वरपादुके।**
**राज्यं चेदमयोध्यां च धूतपापो भवाम्यहम्॥**

(वा० रा० २।११५।१४, १६—२०)

'मेरा दाजुले यो राज्य मलाई उत्तम नासोको रूपमा दिनुभएको हो। वहाँका यी सुवर्ण-भूषित पादुका (खराऊ) हरू नै सबैको योगक्षेम सम्हाल्नेवाला हुन्। म यिनलाई आर्य श्रीरामचन्द्रका साक्षात् चरण मान्दछु। तपाईंहरू चाँडै नै यिनमाथि छत्र ओढाउनुहोस्। मेरा गुरूका

यी चरणपादुकाहरूको प्रभावले नै यस राज्यमा धर्मको स्थापना हुनेछ। वहाँले प्रेमको कारणले नै मलाई यो अमूल्य नासो सुम्पिनुभएको छ। यसकारण म वहाँ फर्किने बेलासम्म यसको राम्ररी रक्षा गर्नेछु। तथा वहाँ आएपछि शीघ्र नै यिनलाई फेरि भगवान्‌का चरणहरूले युक्त बनाएर यी पादुकाहरूले सुशोभित आर्यका चरणहरूको दर्शन गर्नेछु। श्रीरघुनाथजी आउँदा नै वहाँको सेवामा यो राज्य समर्पित गरिदिनेछु, फेरि मेरो सबै भार हलुको हुनेछ। म वहाँको आज्ञाको अधीन रहेर वहाँकै सेवामा लाग्नेछु। मसंग नासोको रूपमा राखिएको यो राज्यलाई, यी पादुकाहरूलाई र अयोध्यालाई पनि श्रीरामको सेवामा समर्पित गरेर म सबै प्रकारका दुःख र पापहरूबाट मुक्त हुनेछु।'

त्यसपछि भरतजी जटा–वल्कल धारण गर्ने मुनिको वेष बनाएर नन्दिग्राममा रहन लाग्नुभयो। वहाँ राज्यशासनको सम्पूर्ण कार्य भगवान्‌का चरणपादुकाहरूलाई निवेदन गरेर गर्नुहुन्थ्यो। चरणपादुका माथि आफैं छत्र ओढाउनुहुन्थ्यो र चमर डुलाउनुहुन्थ्यो। यसप्रकार वहाँले दाजु श्रीरामचन्द्रजीका चरण–पादुकाहरूको राज्याभिषेक गर्नु भयो। राज्यको जुन कुनै कार्य उपस्थित हुन्थ्यो, जुन पनि बहुमूल्य भेटी आउँथ्यो, भरतजी त्यो सबै पहिले ती पादुकाहरूलाई अर्पण गर्नुहुन्थ्यो र पछि त्यसको यथायोग्य प्रबन्ध गर्नुहुन्थ्यो।

× × × × ×

लङ्का–विजय पछि विभीषणलाई राज्य दिएर सीता र लक्ष्मणको साथमा श्रीराम अयोध्या फर्किन तयार हुनुभयो। त्यसबेला विभीषणले श्रीरामजीसंग स्नान आदि गरेर वस्त्रालङ्कार धारण गर्न प्रार्थना गर्नुभयो। तब भगवान् भरतको भक्ति सम्झँदै भन्नुहुन्छ—

**स तु ताम्यति धर्मात्मा मम हेतोः सुखोचितः।**
**सुकुमारो महाबाहुर्भरतः सत्यसंश्रयः॥**

**तं विना कैकयीपुत्रं भरतं धर्मचारिणम्।**
**न मे स्नानं बहु मतं वस्त्राण्याभरणानि च॥**

× × × ×

**तं तु मे भ्रातरं द्रष्टुं भरतं त्वरते मनः॥**

(वा० रा० ६। १२१। ५-६,१८)

'सत्यपरायण, धर्मात्मा, महाबाहु, सुकुमार भरत सब प्रकारका सुख-भोगहरूका योग्य भएर पनि मेरो लागि दुःख भोगिरहेका छन्। त्यस्ता धर्मचारी कैकेयीपुत्र भरत विना मलाई स्नान र वस्त्राभूषण धारण गर्न रुचिकर छैन। त्यस्ता भाइ भरतलाई हेर्न त मेरो मन छट्पटाइरहेको छ।' यसबाट थाहा पाइन्छ कि भरतको श्रीराममा कति प्रेम थियो।

त्यसपछि श्रीराम सीता, लक्ष्मण र सबै समुदायको साथमा पुष्पक-विमानमा बसेर अयोध्याको लागि प्रस्थान गर्नुभयो र भरद्वाजआश्रममा पुगेर आफू आएको शुभ सन्देश दिनको लागि हनुमान्‌लाई प्यारा भरत कहाँ पठाउनुभयो। हनुमान्‌जी नन्दिग्राममा पुगेर के देख्नुहुन्छ—

**ददर्श भरतं दीनं कृशमाश्रमवासिनम्।**
**जटिलं मलदिग्धाङ्गं भ्रातृव्यसनकर्शितम्॥**
**फलमूलाशिनं दान्तं तापसं धर्मचारिणम्।**
**समुन्नतजटाभारं वल्कलाजिनवाससम्॥**
**नियतं भावितात्मानं ब्रह्मर्षिसमतेजसम्।**
**पादुके ते पुरस्कृत्य प्रशासन्तं वसुंधराम्॥**

( वा० रा० ६।१२५।३०—३२)

'श्रीहनुमान्‌ले देख्नु भयो कि भरत शहरभन्दा बाहिर आश्रममा रहनुहुन्छ। दाजुको वियोगले वहाँको शरीर दुर्बल भइसकेको छ। त्यसमा मैलो जमेको छ। वहाँको मुख सुकेको छ, त्यसमा दीनताको भाव झल्किरहेको छ। वहाँ केवल फलमूलको नै आहार गर्नुहुन्छ। इन्द्रियहरू

वहाँको वशमा छन्। वहाँ शिरमा लामा जटाहरूको भार तथा शरीरमा वल्कल र मृगचर्म धारण गरेर धर्माचरणपूर्वक तपस्या गरिरहनुभएको छ। वहाँको मन सबैतिरबाट संयत र ध्यानमा निमग्न छ। वहाँको तेज ब्रह्मर्षिहरूको समान छ। वहाँ श्रीरामका चरणपादुकाहरूको सेवा गर्दै पृथ्वीको शासन गर्दै हुनुहुन्छ।' हनुमान्जीले यो पनि देख्नुभयो कि भरतको प्रेम र व्यवहारबाट आकर्षित भएर काषायवस्त्र धारण गरेका मन्त्री, पुरोहित र सेनाका प्रधान–प्रधान वीर पनि वहाँको नजिकै रहन्छन्। वायु–पुत्र हनुमान्जीले भरतजीलाई श्रीरामको आगमनको समाचार सुनाउनुभयो।

हनुमान्को मुखबाट भगवान्को आगमनको समाचार सुनेर भरतजी हर्षले विह्वल हुनुभयो। वहाँलाई शरीरको जानकारी रहेन। केही बेरमा स्वस्थ भएछँदामा वहाँले हनुमान्लाई छातीमा लगाउनुभयो र प्रेमाश्रुहरूले भिजाउँदै वहाँसंग भन्न लाग्नुभयो—

**देवो वा मानुषो वा त्वमनुक्रोशादिहागतः।**
**प्रियाख्यानस्य ते सौम्य ददामि ब्रुवतः प्रियम्॥**

(वा० रा० ६। १२५। ४३)

**बहूनि नाम वर्षाणि गतस्य सुमहद्वनम्।**
**शृणोम्यहं प्रीतिकरं मम नाथस्य कीर्तनम्॥**

(वा० रा० ६। १२६। १)

'ममाथि दया गरेर आउने तिमी कुनै देवता हौ अथवा मनुष्य? सौम्य! तिमीले मलाई निकै नै प्रिय सन्देश दियौ, यसको बदलामा तिमीलाई जुन कुरा प्रिय छ, त्यो म दिन सक्छु। मेरा स्वामी वनमा जानु भएको धेरै वर्षहरू बितिसके। आज नै म आफ्ना नाथको आनन्ददायक समाचार सुनिरहेको छु।'

यसपछि भरतजीले बाँदरहरूसंग श्रीरामको मित्रता भएको विषयमा

सोध्नुभयो। यस विषयमा हनुमान्‌जीले वन-गमनदेखि लिएर लङ्काबाट फर्किंदा भरद्वाजको आश्रममा पुग्दासम्मका सारा कुराहरू भनेर सुनाउनु भयो। यो सबै सुनेर भरतजी बड़ा प्रसन्न हुनुभयो र नजिकै उभिएका शत्रुघ्नलाई नगरको सजावट गर्न र सबैलाई श्रीरामको स्वागतको लागि तयार हुने सूचना दिन भन्नुभयो। समाचार सुन्दा नै सारा नगरमा हर्ष र प्रेमको बाढी आयो। सबै भगवान्‌को आगमनको प्रतीक्षा गर्न लागे। धर्मज्ञ भरतजीले श्रीरामका पादुकाहरूलाई शिरमा राखेर तिनीहरूलाई सुन्दर मालाहरूले सुशोभित गर्नुभयो र तिनीमाथि स्वर्णछत्र लगाएर स्वर्णभूषित सेता चमर डुलाउँदै हिंड्नुभयो। केही पर जाँदा जब वहाँलाई श्रीरामचन्द्रजी आउँदै गरेको देखिनुभएन, तब वहाँ प्रेमाकुल भएर हनुमान्‌जीसंग सोध्न थाल्नुभयो—'हनुमान्! के कुरा हो? अहिले सम्म रघुकुलभूषण आर्य श्रीरामलाई मैंले देखिरहेको छैन। (वहाँ देखिनु भएको छैन।)' यत्तिकैमा श्रीभरतजीले विमानलाई आउँदै गरेको देख्नु भयो र त्यसमाथि विराजमान श्रीरामलाई भक्तिपूर्वक प्रणाम गर्नुभयो। फेरि श्रीरामको आज्ञाले त्यो विमान पृथ्वीमा ओर्लियो। श्री भरतजी विमानको भित्र श्रीरामलाई देखेर हर्षले भरिनुभयो र फेरि वहाँका चरणहरूमा पर्नुभयो। श्रीरामचन्द्रजीले धेरै दिनपछि दृष्टिगोचर भएका भाइ भरतलाई उठाएर काखमा बसाएर प्रेम र हर्षपूर्वक हृदयमा लगाउनु भयो। यसपछि भरतले भाइलक्ष्मणसंग भेट गरेर सीताका चरणहरूमा प्रणाम गर्नुभयो।

त्यसपछि धर्मज्ञ श्री भरतजीले श्रीरामका ती दुवै पादुकाहरूलाई हातमा लिएर श्रीरामका चरणहरूमा लगाइदिनुभयो र हात जोडेर भन्नु भयो—

**एतत्ते सकलं राज्यं न्यासं निर्यातितं मया॥**
**अद्य जन्म कृतार्थं मे संवृत्तश्च मनोरथः।**

**यत्त्वां पश्यामि राजानमयोध्यां पुनरागतम्॥**

( वा० रा० ६। १२७। ५५-५६)

'यो नासोको रूपमा राखिएको तपाईंको सम्पूर्ण राज्य मैंले आज तपाईंलाई फिर्ता गरिदिएको छु। आज मेरो जन्म सफल भयो र मेरा समस्त मनोरथहरू पूर्ण भए जो म अयोध्यामा फर्किएर आउनुभएको तपाईंलाई देखिरहेको छु'—इत्यादि।

—यसप्रकार भन्दै रहेका भ्रातृप्रेमी भरतलाई देखेर राक्षसराज विभीषण र सुग्रीव आदि बाँदरहरूका आँखाहरूबाट आँसुहरूको धारा बग्नथाल्यो।

श्रीरामको राज्याभिषेक भइसकेपछि भरत पनि लक्ष्मणको समान नै श्रीरामको सेवामा रहन लाग्नुभयो। केही दिनपछि श्रीरामले भरतका मामाको समाचार पाएर गन्धर्वहरूमाथि विजय प्राप्त गर्नको लागि भरतलाई पठाउनुभयो। भरतजीले भगवान्को आज्ञा-पालन गर्नको लागि नै त्यहाँ गएर गन्धर्वहरूमाथि विजय प्राप्त गर्नुभयो। फेरि भगवान्को आज्ञानुसार त्यहाँको राज्यमा आफ्ना पुत्रहरूको अभिषेक गरेर वहाँ चाँडै नै भगवान्को नजिकै फर्केर आउनुभयो र रामलाई सबैकुराहरू भनिदिनुभयो। पूरा कुराहरू सुनिसकेपछि श्रीरामले भरतको प्रशंसा गर्नुभयो र धेरै प्रसन्न हुनुभयो।

यसपछि लक्ष्मणको त्याग गरे छँदामा श्रीरामचन्द्रजीले परमधाम जाने इच्छाले भरतको राज्याभिषेक गर्ने कुरा बताउनुभयो, तर भरतले त्यसलाई स्वीकार गर्नुभएन। वहाँ यस प्रकारको कुरा सुन्दा नै अचेत हुनुभयो र सचेत भएपछि राज्यको निन्दा गर्दै भन्नुभयो—

**सत्येनाहं शपे राजन् स्वर्गभोगेन चैव हि।**
**न कामये यथा राज्यं त्वां विना रघुनन्दन॥**

( वा० रा० ७। १०७। ६)

'राजन्! म निश्चयपूर्वक सत्य तथा स्वर्गको कसम खाएर भन्दछु कि म तपाईंबाट बेग्लै रहेर राज्य पनि चाहन्न।'

तब श्रीरामले भरतको सल्लाहले कुश र लवलाई राज्यमा अभिषिक्त गर्नुभयो र शत्रुघ्नलाई बोलाएर सबैको साथमा परमधाममा पाल्नुभयो।

वास्तवमा भरतको राम-भक्ति जगत्को इतिहासमा अद्वितीय छ। यहाँको त्याग, संयम, व्रत, नियम—सबै प्रशंसनीय र अनुकरणीय छन्। यहाँको चरित्रबाट स्वार्थ-त्याग, विनय, सहिष्णुता, गम्भीरता, सरलता, क्षमा, वैराग्य र स्वामिभक्ति आदि सबै गुणहरूको शिक्षा लिन सकिन्छ। भक्तिसहित निष्काम भावले गृहस्थ आश्रममा रहँदै प्रजापालन गर्ने यस्तो सुन्दर उदाहरण अन्यत्र मिल्न कठिन छ।

# श्रीरामका दासानुदास श्रीशत्रुघ्न

श्री शत्रुघ्नजीको चरित्र पनि आफ्नै ढंगको अनौठो नै छ। वाल्मीकीय रामायणमा श्रीशत्रुघ्नजीलाई पनि भगवान् विष्णुको नै अंशावतार मानिएको छ, तर वहाँको चरित्रबाट यही सिद्ध हुन्छ कि वहाँ श्रीरामका दासानुदासहरूमा अग्रगण्य हुनुहुन्थ्यो। श्रीशत्रुघ्नजी मौनकर्मी, प्रेमी, सदाचारी, मितभाषी, सत्यवादी, विषयविरागी, सरल, तेजःपूर्ण, गुरुजनका अनुगामी र वीर हुनुहुन्थ्यो। श्रीरामायणमा यहाँको सम्बन्धमा विशेष विवरण भेटिंदैन, तर जे भेटिन्छ त्यसैबाट यहाँको महत्ताको केही अनुमान गर्न सकिन्छ। यहाँ बाल्यकालदेखि नै सधैं भरतजीको साथमा रहनुहुन्थ्यो, यसकारण श्री भरतजीको र यहाँको चरित्र साथै चल्दछ। यसकारण रामायणमा यहाँको विषयमा कुनै विशेष कुरा बेग्लै बताइएको छैन। यहाँको गुण र चरित्रको अनुमान भरतको व्यवहारबाट लगाउनुपर्दछ।

बालकाण्डमा यहाँको प्रेमको वर्णन गर्दै भनिएको छ—

**अथैनं पृष्ठतोऽभ्येति सधनुः परिपालयन्।**
**भरतस्यापि शत्रुघ्नो लक्ष्मणावरजो हि सः॥**

(वा० रा० १। १८। ३२)

'जसरी लक्ष्मण हातमा धनुष लिएर श्रीरामको रक्षा गर्दै वहाँको पछि-पछि हिंड्नुहुन्थ्यो, त्यसैगरी नै वहाँ लक्ष्मणका भाइ शत्रुघ्न पनि भरतको साथमा रहनुहुन्थ्यो।'

जनकपुरमा सबै भाइहरूको विवाहको कार्य सम्पन्न भइसकेपछि त्यहाँबाट फर्किएर अयोध्या आएको केही दिन नै पछि भरतजीलाई वहाँका मामा युधाजित् आफ्नो देश लैजान थाल्नुभयो त शत्रुघ्नजी पनि वहाँको साथमा नै मावल जानुभयो। त्यसबेला भरतजीको प्रेममा वहाँले

माता-पिता, भाइ-बन्धु र नव-विवाहिता स्त्रीको कत्ति पनि मोह न गरी दाजु भरतको साथमा रहन नै आफ्नो परम कर्तव्य सम्झनुभयो। फेरि अयोध्याबाट बोलाइएपछि भरतजीको साथमा फर्किनुभयो। अयोध्या पुग्दाखेरि माता कैकेयीद्वारा पिताको मरण तथा लक्ष्मण र सीताको साथमा श्रीरामको वनवासको समाचार सुनेर यहाँलाई पनि निकै ठूलो दुःख भयो। दाजुलक्ष्मणको शूरताबाट यहाँ परिचित हुनुहुन्थ्यो, यसकारण यहाँले शोकपूर्ण हृदयले ठूलो आश्चर्यको साथमा भरतजीसंग भन्नुभयो—

**गतिर्यः सर्वभूतानां दुःखे किं पुनरात्मनः।**
**स रामः सत्त्वसम्पन्नः स्त्रिया प्रव्राजितो वनम्॥**
**बलवान् वीर्यसम्पन्नो लक्ष्मणो नाम योऽप्यसौ।**
**किं न मोचयते रामं कृत्वापि पितृनिग्रहम्॥**

(वा० रा० २। ७८। २-३)

'आर्य! जो दुःखको समयमा आत्मीय व्यक्तिहरूको त कुरा नै के गर्नु, समस्त प्राणीहरूलाई सहारा दिनेवाला हुनुहुन्छ, वहाँ नै महापराक्रमी श्रीरामचन्द्रजी पत्नीको साथमा वनमा पठाइनुभयो (यो कति दुःखको कुरो हो)। जो भाइ लक्ष्मणजी निकै बलवान् र पराक्रमी पनि हुनुहुन्छ, वहाँले पिता-मातालाई निग्रह गरेर पनि श्रीरामलाई यस संकटबाट किन मुक्त गर्नुभएन?'

यसप्रकार कुराहरू भइरहेका थिए, श्रीशत्रुघ्नजी दुःख र क्रोधमा भरिनुभएकोथियो, त्यसैबेला राम-विरह-व्याकुल एउटा द्वारपालले सूचना दिए कि 'राजकुमार! जुन क्रूर पापिनी मन्थराको षड्यन्त्रले श्रीरामचन्द्र वनमा पठाइनुभयो, त्यो (मन्थरा) वस्त्राभूषणहरूले सजिएर उभिएकी छे। यो सुनेर शत्रुघ्नजीलाई बड़ा क्रोध आयो। वहाँले मन्थराको चुल्ठो समातेर उसलाई आँगनमा घिसार्न थाल्नुभयो। यो

देखेर त्यो कुप्रीका अन्य सहेलीहरूले सोचे कि दयामयी कौसल्याको शरणमा न गइकन शत्रुघ्नले हामीहरूलाई पनि छोड्नुहुनेछैन। यसकारण उनीहरू तुरन्त नै दौडिएर कौसल्याजीकहाँ गए। कैकेयी मन्थरालाई छुटाउन आउनुभयो त शत्रुघ्नले वहाँलाई पनि हप्काउनुभयो। अन्तमा भरतले आएर शत्रुघ्नलाई सम्झाउनुभयो कि स्त्रीजाति अवध्य मानिएका छन् र यो पनि भन्नुभयो कि–

**इमामपि हतां कुब्जां यदि जानाति राघवः।**
**त्वां च मां चैव धर्मात्मा नाभिभाषिष्यते ध्रुवम्॥**

(वा० रा० २। ७८। २३)

'भाइ! यदि कहीं कुप्री तिम्रो हातले मारिई भने त यस घटनालाई जान्ने बित्तिकै धर्मात्मा श्रीराम तिमीसंग र मसंग पनि निश्चय नै बोल्न छोड्नुहुनेछ।' कुब्जालाई मूर्च्छित अवस्थामा नै छोडिदिनुभयो।

यस प्रसंगमा बुझ्नुपर्ने पहिलो कुरा यो छ कि श्रीरामको धर्मनीतिमा स्त्रीजातिको कति आदर थियो, जसबाट कि उनीहरू हर अवस्थामा अवध्य मानिन्थे। अर्को कुरा यो थियो कि शोकाकुल भरतले यस्तो परिस्थितिमा पनि भाइलाई सम्झाएर अधर्मबाट रोक्नुभयो। तेस्रो कुरा थियो कि क्रोधातुर हुँदा पनि शत्रुघ्नले तुरून्त नै दाजुको कुरा मान्नुभयो। यसपछि श्रीरामलाई फर्काउनको लागि भरतजी वनमा जान लाग्नुभयो त शत्रुघ्न पनि साथमा जानुभयो। चित्रकूटको नजिकै पुगेर भरतको आज्ञाले श्रीरामको पर्णकुटी खोज्न थाल्नुभयो। जब भरतजी श्रीरामलाई देखेर वहाँतिर दगुर्नुभयो, तब राम दर्शनोत्सुक शत्रुघ्न पनि वहाँको पछि-पछि पुग्नुभयो। त्यहाँ कविले भनेका छन्—

**शत्रुघ्नश्चापि रामस्य ववन्दे चरणौ रुदन्।**
**तावुभौ च समालिङ्ग्य रामोऽप्यश्रूण्यवर्तयत्॥**

(वा० रा० २। ९९। ४०)

'शत्रुघ्नले पनि रूँदै रूँदै श्रीरामका चरणहरूको वन्दना गर्नुभयो। ती दुवैलाई हृदयमा लगाएर श्रीराम पनि आँसु बगाउन थाल्नुभयो। त्यस पछि शत्रुघ्नले दाजु लक्ष्मण र सीताजीसंग पनि बड़ा प्रेमले भेटघाट गर्नुभयो।

सबैजना एकत्रित भए। कुराकानी शुरू भयो। त्यहाँ श्रीराम र भरतको संवादमा लक्ष्मण र शत्रुघ्नको कुनै काम नै थिएन। शत्रुघ्नजीले त आफ्नो जीवन रामसेवक श्रीभरतजीलाई अर्पण गरिसक्नुभएको थियो, अतः वहाँको विषयमा जे भन्नुपर्थ्यो त्यो स्वयं भरत नै भनिदिनुहुन्थ्यो। पादुकाहरू लिएर अयोध्या फर्किंदाखेरि दुवै भाइहरू फेरि श्रीरामको परिक्रमा र वहाँका चरणहरूमा प्रणाम गरेर वहाँसंग मिल्नुभयो। लक्ष्मणको जस्तै शत्रुघ्नको पनि स्वभाव तेज थियो। कैकेयी प्रति यहाँको मनमा क्रोध थियो। श्रीराम यो कुरालाई जान्नुहुन्थ्यो। यसकारण विदा गर्ने वेला श्रीरामले शत्रुघ्नलाई वात्सल्य भावले शिक्षा दिंदै भन्नुभयो—

**मातरं रक्ष कैकेयीं मा रोषं कुरु तां प्रति॥**
**मया च सीतया चैव शप्तोऽसि रघुनन्दन।**

(वा० रा० २। ११२। २७-२८)

'रघुनन्दन शत्रुघ्न! निश्चय नै तिमीलाई मेरो र सीताको कसम छ, तिमी आमा कैकेयीको सेवा गर्नू, वहाँमथि कहिल्यै क्रोध न गर्नू।'

यसबाट पनि थाहा पाइन्छ कि शत्रुघ्नजीको श्रीराममा कति प्रेम र भक्तिभाव थियो।

यसपछि शत्रुघ्नजी भरतसंग अयोध्या फर्केर सधैं वहाँको आज्ञानुसार राज्य र परिवारको सेवा गर्नथाल्नुभयो। शत्रुघ्नजी हरेक अवस्थामा भरतको नजिकै बसेर वहाँको आज्ञाको प्रतीक्षा गरिरहनुहुन्थ्यो। भरतजीको मनमा पनि शत्रुघ्नमाथि बड़ा भरोसा थियो। यसैकारण वहाँ

सानोभन्दा सानो र ठूलोभन्दा ठूलो कार्यको लागि शत्रुघ्नजीलाई नै आज्ञा दिनुहुन्थ्यो।

यसपछि श्रीराम फर्केर आउन्जेल शत्रुघ्नजीको विषयमा वाल्मीकीय रामायणमा कुनै विशेष उल्लेखनीय कुरा पाइँदैन। श्रीहनुमान्‌जीद्वारा श्रीरामचन्द्रको आउने खबर पाएपछि भरतजीको आज्ञाले शत्रुघ्नले नै श्रीरामको स्वागतको र नगरलाई सजाउने र राजमार्ग र अन्य सबै बाटाहरूलाई ठीक पार्ने प्रबन्ध गर्नुभयो। श्रीरामको राज्याभिषेक भैसकेपछि पनि यहाँ श्रीभरतजीसंग नै श्रीरामको सेवा कार्य गर्ने गर्नुहुन्थ्यो। भाइको नाताले श्रीलक्ष्मण र श्रीशत्रुघ्नमा भरतजीको समान अधिकार भएर पनि श्रीभरतजी आफ्नो काम शत्रुघ्नबाट नै गराउनुहुन्थ्यो।

सीता–वनवास पछि एक दिन धेरै ऋषिहरूले श्रीरामको नजिकै आएर लवणासुरका अत्याचारहरूको वर्णन गर्नुभयो। यसमा श्रीरामले वहाँहरूलाई आश्वासन दिनुभयो र सभामा यो प्रस्ताव राख्नुभयो कि लवणासुरलाई मार्नको लागि को जानेछ? कसलाई आज्ञा दिने? भरतलाई कि शत्रुघ्नलाई? यो सुनेर भरतजीले भन्नुभयो कि 'मलाई आज्ञा मिलोस्, म लवणासुरलाई मार्नेछु।' भरतजीको कुरा सुनेर शत्रुघ्नजीले आफ्नो आसनबाट उभिएर श्रीरामलाई प्रणाम गरेर भन्नुभयो—

**कृतकर्मा महाबाहुर्मध्यमो रघुनन्दन॥**
**आर्येण हि पुरा शून्या त्वयोध्या परिपालिता।**
**संतापं हृदये कृत्वा आर्यस्यागमनं प्रति॥**
**दुःखानि च बहूनीह अनुभूतानि पार्थिव।**
**शयानो दुःखशय्यासु नन्दिग्रामे महायशाः॥**
**फलमूलाशनो भूत्वा जटी चीरधरस्तथा।**
**अनुभूयेदृशं दुःखमेष राघवनन्दनः॥**

**प्रेष्ये मयि स्थिते राजन्न भूयः क्लेशमाप्नुयात्।**

(वा० रा० ७। ६२। ११—१५)

'रघुनाथजी! माहिला दाजु श्रीभरतजीले त पहिले तपाईंको धेरै कार्य गर्नुभएको छ। किनभने यहाँले तपाईंको वियोगको सन्ताप हृदयमा राखेर पनि तपाईं न रहँदा तपाईंको आगमनको प्रतीक्षा गर्दै अयोध्याको पालन गर्नुभएको छ। राजन्! महायशस्वी भरतजीले नन्दिग्राममा झारपातको शय्यामा शयन गरेर र फल-मूलको भोजन गरेर जटा र चीर धारण गर्दै तपाईंको वियोगकाललाई बिताउनुभएको छ। यसप्रकारका दुःखहरूको अनुभव गरिसकेपछि यतिखेर म दास हुँदा हुँदै यहाँलाई यो लवणासुर-वधको परिश्रम मिल्नुहुँदैन।' शत्रुघ्नजीले यस्तो भनेपछि श्रीरामचन्द्रजीले भन्नुभयो—

**एवं भवतु काकुत्स्थ क्रियतां मम शासनम्।**
**राज्ये त्वामभिषेक्ष्यामि मधोस्तु नगरे शुभे॥**
**निवेशय महाबाहो भरतं यद्यवेक्षसे।**
**शूरस्त्वं कृतविद्यश्च समर्थश्च निवेशने॥**
**राज्यं प्रशाधि धर्मेण वाक्यं मे यद्यवेक्षसे।**
**उत्तरं च न वक्तव्यं शूर वाक्यान्तरे मम॥**

( वा० रा० ७। ६२। १६-१७,२०)

'भाइ! यस्तै होस्, तिमी नै मेरो आज्ञाको पालन गर। म मधुदैत्यको सुन्दर नगरमा तिम्रो राज्याभिषेक गर्दछु। हे महाबाहो! यदि तिमी भरतलाई कष्ट दिन चाहन्नौ भने त राम्रो कुरा हो, भरतलाई यहीं रहन देऊ। तिमी पनि ठूला विद्वान्, शूरवीर र नगर बसाउनमा समर्थ छौ। यदि तिमीले मेरो कुराको पालन गर्ने हो भने त धर्मपूर्वक वहाँको राज्यको शासन गर। वीर! तिमीले मेरो यस आज्ञाको विरुद्ध कुनै उत्तर दिन ठीक छैन

(उचित छैन)।' भगवान् श्रीरामको यो वचन सुनेर शत्रुघ्नजीलाई ठूलो लाज भयो र वहाँ मन्द स्वरमा बोल्नुभयो—

अधर्मं विद्म काकुत्स्थ अस्मिन्नर्थे नरेश्वर।
कथं तिष्ठत्सु ज्येष्ठेषु कनीयानभिषिच्यते॥
अवश्यं करणीयं च शासनं पुरुषर्षभ।
तव चैव महाभाग शासनं दुरतिक्रमम्॥
त्वत्तो मया श्रुतं वीर श्रुतिभ्यश्च मया श्रुतम्।
नोत्तरं हि मया वाच्यं मध्यमे प्रतिजानति॥
व्याहृतं दुर्वचो घोरं हन्तास्मि लवणं मृधे।
तस्यैवं मे दुरुक्तस्य दुर्गतिः पुरुषर्षभ॥
उत्तरं नहि वक्तव्यं ज्येष्ठेनाभिहिते पुनः।
अधर्मसहितं चैव परलोकविवर्जितम्॥
सोऽहं द्वितीयं काकुत्स्थ न वक्ष्यामीति चोत्तरम्।

(वा० रा० ७। ६३। २—७)

'राजन्! दाजु भरतजी हुँदाहुँदै म भाइको राज्याभिषेक कसरी हुन सक्छ? यस कार्यमा मलाई अधर्म अनुभव हुन्छ। (अधर्म होला जस्तो लाग्छ।) यता मैंले तपाईंको आज्ञाको पालन पनि अवश्य गर्नु पर्दछ, किनभने पुरुषोत्तम! महाभाग्यमानी! तपाईंको आज्ञाको उल्लंघन गर्नु पनि घोर पाप हो। वीर! यही कुरा मैंले तपाईंबाट र वेद-शास्त्रहरूबाट पनि सुनेको छु। अतः पूज्य दाजु भरतजीले लवणासुरलाई मार्ने कुरा स्वीकार गरिसकेपछि फेरि मैंले कुनै उत्तर दिनु न पर्ने थियो। मैंले यो साह्रै खोटो वचन भनिहालें कि लवणासुरलाई म मार्नेछु। पुरुषश्रेष्ठ! यस दुरुक्तिको नै फल यो राज्याभिषेकरूप दुर्गति मलाई मिलेको छ। दाजुको आज्ञा भइसकेपछि फेरि उत्तर दिनुहुँदैन, किनभने

यस्तो गर्नु अधर्मयुक्त र परलोकको विरुद्ध हो। यसकारण रघुवर! अब म अर्कोपल्ट केही पनि उत्तर दिनेछैन। [म तपाईंको इच्छानुसार काम गर्न तयार छु।]'

कस्तो सुन्दर त्याग हो! श्रीरामको वियोगमा राज्यप्राप्तिलाई वहाँ दुर्गति सम्झनुहुन्छ। वास्तवमा कुरा पनि यस्तो नै है, साधकहरूले यस कुरामा विशेष ध्यान दिनुपर्दछ।

यसपछि पनि श्रीशत्रुघ्नजीले लवणासुरमाथि आक्रमण गर्नुभयो। त्यसबेला श्रीरामले शत्रुघ्नलाई लवणासुर मार्ने युक्ति बताउनुभयो र बाटामा खर्चको लागि धेरै नै धन र निकै ठूलो सेना वहाँको साथमा दिएर वहाँलाई विदा गर्नुभयो। बाटामा जाँदाखेरि शत्रुघ्नजी एक रात श्रीवाल्मीकिको आश्रममा बस्नुभयो। त्यही रात्रिमा श्रीसीताजीबाट कुश लव यी दुई यमज (जुम्ल्याहा) छोराहरूको जन्म भएको थियो। यस कारण त्यो रात्रि पनि श्रीशत्रुघ्नको लागि निकै नै आनन्ददायी भयो। यसपछि शत्रुघ्नजी त्यहाँबाट हिंडेर बाटामा सात दिन बस्दै बस्दै यमुनाको किनारामा च्यवन ऋषिको आश्रममा पुग्नुभयो।

त्यहाँ च्यवन ऋषिबाट लवणासुरको दिनचर्या र उसको बल-पराक्रमको जानकारी प्राप्त गर्नुभयो। फेरि जब लवणासुर आफ्नो घरबाट आहारको लागि बनमा निस्क्यो, तब ऊ फर्किनुभन्दा पहिले नै शत्रुघ्नजीले गएर उसको नगरको द्वार रोकिदिनुभयो। शत्रुघ्नलाई देखेर लवणासुर भन्नथाल्यो कि 'यसबाट के हुन्छ? नराधम! यस प्रकारका हजारौं मनुष्यहरूलाई त म दिनदिनै खान्छु।' यसमा शत्रुघ्न जीले आफ्नो परिचय दिंदै भन्नुभयो कि म तिमीसंग युद्ध गर्न चाहन्छु। यसपछि दुवैको आपसमा घोर युद्ध भयो। अन्तमा शत्रुघ्नजीले कानसम्म धनुष तानेर एउटा दिव्य बाण उसको छातीमा हान्नुभयो।

त्यसले छातीलाई छेडेर पातालमा प्रवेश गऱ्यो र फेरि फर्केर आएर शत्रुघ्नजीको ठोक्रोमा स्थित भयो। देवता र महर्षिहरू शत्रुघ्नको प्रशंसा गर्न थाले तथा आकाशबाट जय-जयकारको ध्वनि र पुष्पहरूको वर्षा हुनथाल्यो।

यसप्रकार लवणासुरलाई मारेर तथा त्यहीं राम्रो प्रकारले मधुरापुरी (मथुरा) बसाएर त्यसको राज्यको प्रबन्ध गरेर बाह्र वर्षपछि शत्रुघ्नजी श्रीरामको दर्शन गर्नको लागि त्यहाँबाट अयोध्यातर्फ फर्किनुभयो। आउँदाखेरि शत्रुघ्नजी फेरि श्रीवाल्मीकि ऋषिको आश्रममा नै बस्नुभयो। त्यहाँ वहाँले मधुर स्वरमा गाइएको श्रीरामचरित्रलाई सुन्नुभयो। त्यो सुनेर वहाँको हृदय करुणाले भरियो। वहाँ रात्रिमा त्यहीं ढल्किएर श्रीरामको विषयमा नै विचार गरिरहनुभयो। वहाँलाई निद्रा लागेन। बिहान भएपछि नित्यकर्म गरिसकेपछि मुनिको आज्ञा लिएर श्रीरामदर्शनको उत्कण्ठाले वहाँ अयोध्यातर्फ हिंड्नुभयो। अयोध्या पुगेर श्रीरामचन्द्रको महलमा आउनुभयो। त्यहाँ इन्द्रको समान आसनमा विराजमान श्रीरामलाई वहाँले प्रणाम गर्नुभयो र भन्नुभयो कि—'भगवन्! तपाईंको आज्ञानुसार म लवणासुरलाई मारेर त्यहाँ नगर बसाएर आएको छु।'

**द्वादशैतानि वर्षाणि त्वां विना रघुनन्दन।**
**नोत्सहेयमहं वस्तुं त्वया विरहितो नृप॥**
**स मे प्रसादं काकुत्स्थ कुरुष्वामितविक्रम।**
**मातृहीनो यथा वत्सो न चिरं प्रवसाम्यहम्॥**

(वा० रा० ७। ७२। ११-१२)

महाराज रघुनाथजी! यी बाह्रवर्षहरू मैंले तपाईंको वियोगमा निकै कठिनताले बिताएको छु। यसकारण अब म तपाईं विना त्यहाँ निवास

गर्न चाहन्नँ। यसकारण महापराक्रमी श्रीरामजी! तपाईं ममाथि यस्तो कृपा गर्नुहोस्, जसबाट मातृविहीन बालक झैं तपाईंबाट अलग्ग भएर धेरै दिनसम्म कहीं न रहूँ।'

शत्रुघ्नको यस्तो कुरो सुनेर श्रीरामले वहाँलाई हृदयमा लगाउनु भयो र भन्नुभयो–वीर! तिमीले शोक गर्नुहुँदैन, यो क्षत्रिय स्वभावको अनुरूप छैन। तिमीले क्षात्रधर्म अनुसार प्रजाको पालन गर्नुपर्दछ। समय समयमा मसंग भेटघाट गर्न आउने गर।' यसप्रकार भगवान् श्रीरामचन्द्रजीको आज्ञाले शत्रुघ्नजीले दीन वाणीले वहाँको कुरा स्वीकार गर्नुभयो। फेरि भरत र लक्ष्मणसंग भेट गरेर र सबैलाई प्रणाम गरेर वहाँ मथुरापुरी फर्किनुभयो।

यसपछि जब भगवान् परमधाम जान लाग्नुभयो, तब फेरि शत्रुघ्नलाई बोलाइयो। तब शत्रुघ्नजी आफ्ना पुत्रहरूको राज्याभिषेक गरेर अयोध्यामा पुग्नुभयो र श्रीरामको नजिकै आएर वहाँलाई प्रणाम गरेर गद्गद वाणीले भन्न थाल्नुभयो—

**कृत्वाभिषेकं सुतयोर्द्वयो राघवनन्दन।**
**तवानुगमने राजन् विद्धि मां कृतनिश्चयम्॥**
**न चान्यदद्य वक्तव्यमतो वीर न शासनम्।**
**विहन्यमानमिच्छामि मद्विधेन विशेषतः॥**

(वा० रा० ७। १०८। १४-१५)

'महाराज रघुनाथजी! म आफ्ना दुवै पुत्रहरूको राज्याभिषेक गरेर तपाईंसंग हिंडने निश्चय गरेर आएको छु। वीर! अब तपाईं मलाई कुनै अर्को आज्ञा न दिनुहोस्, किनभने कसैद्वारा पनि र विशेष गरी म जस्ता अनुयायीद्वारा तपाईंको आज्ञाको उल्लङ्घन होस्–यस्तो म चाहन्नँ। अभिप्राय यो हो कि मैंले आजसम्म तपाईंको आज्ञाको कहिल्यै त्याग

गरेको छैन। यसकारण अब पनि त्यस्तो गर्नु न परोस्, यसको तपाईं नै रक्षा गर्नुहोस्।'

भगवान् श्रीरामले शत्रुघ्नजीको प्रार्थना स्वीकार गर्नुभयो र श्रीशत्रुघ्नजी पनि श्रीरामचन्द्रजी संगसंगै परमधाम जानुभयो।

यो श्रीशत्रुघ्नजीको सानो जीवन–चरित्र केवल वाल्मीकीय रामायणको आधारमा लेखिएको छ, यसमा अर्को कुनै रामायणबाट अथवा पुराणहरूबाट कुनै कुरा लिइएको छैन। यसकारण सम्भव छ कि वहाँका प्रेम र गुणहरूका सम्पूर्ण कुराहरू पाठकहरूको सामुन्ने न आउलान्, तर यसको लागि क्षमाप्रार्थना बाहेक म के गर्न सक्छु र?

# आदर्श भक्त हनुमान्

श्रीहनुमान्जी भगवान् श्रीरामका सर्वोत्तम दास भक्त हुनुहुन्छ। वहाँको जन्म वायुदेवको अंशबाट र माता अंजनीको गर्भबाट भएको थियो। श्रीहनुमान्जी बालब्रह्मचारी, महावीर, अतिशय बलवान्, ठूला बुद्धिमान्, चतुरशिरोमणि, विद्वान्, सेवाधर्मका आचार्य, सर्वथा निर्भय, सत्यवादी, स्वामिभक्त, भगवान्को तत्त्व, रहस्य, गुण र प्रभावलाई राम्ररी जान्नेवाला, महाविरक्त, सिद्ध, परम प्रेमी भक्त र सदाचारी महात्मा हुनुहुन्छ। वहाँ युद्धविद्यामा निकै नै निपुण, इच्छानुसार रूप धारण गर्नमा समर्थ तथा भगवान्का नाम, गुण, स्वरूप र लीलाका निकै नै रसिक हुनुहुन्छ। भनिन्छ कि अब पनि जहाँ श्रीरामको कथा अथवा कीर्तन हुन्छ, त्यहाँ श्रीहनुमान्जी कुनै न कुनै वेषमा उपस्थित रहने नै गर्नुहुन्छ। श्रद्धा न भएको कारणले मान्छेहरू वहाँलाई चिन्न सक्तैनन्।

श्रीहनुमान्जीका गुण अपार छन्। भगवान् र वहाँका भक्तहरूका गुणहरूको वर्णन कुनै पनि मनुष्यले कसरी गर्न सक्छ र? यस विषयमा जुन कुनै कुरा पनि लेखिन्छ, त्यो थोरै नै हुन्छ। यहाँ संक्षेपमा श्रीहनुमान्जीका चरित्रहरूद्वारा वहाँका गुणहरूको केही दिग्दर्शन गराइन्छ।

पहिले-पहिले जब पम्पा-सरोवरमा श्रीराम र लक्ष्मणसंग श्रीहनुमान्जी भेटिनुभयो, त्यो प्रसंग हेर्नाले थाहा हुन्छ कि श्रीहनुमान्जीमा विनय, विद्वत्ता, चतुरता, दीनता, प्रेम र श्रद्धा आदि गुणहरू निकै नै विलक्षण छन्।

आफ्ना मन्त्रीहरूको साथमा ऋष्यमूक-पर्वतमा बसेका सुग्रीवको दृष्टि पम्पा-सरोवरतर्फ जान्छ, तब उनी देख्छन् कि हातहरूमा धनुष-बाण लिएका निकै राम्रा, विशालबाहु, महापराक्रमी दुई वीर पुरूषहरू

यतातिर आइरहेका छन्। उनीहरूलाई देखेर नै सुग्रीव भयभीत भएर श्रीहनुमान्‌जीसंग भन्दछन् कि 'हनुमान्! तिमी गएर यिनीहरूको परीक्षा त गर। यदि यिनीहरू बालीद्वारा पठाइएका हन् भने त मलाई संकेतले सम्झाइदिनू, जसबाट म यस पर्वतलाई छोडेर तुरून्त नै भागिहालूँ।'

सुग्रीवको आज्ञा पाएर वहाँ ब्रह्मचारीको रूप धारण गरेर त्यहाँ जानुहुन्छ र श्रीरामचन्द्रजीलाई प्रणाम गरेर वहाँसंग प्रश्न गर्नुहुन्छ। मानस-रामायणमा श्रीतुलसीदासजी वहाँको प्रश्नको यस्तो वर्णन गर्नुहुन्छ-

**को तुम्ह स्यामल गौर सरीरा। छत्री रूप फिरहु बन बीरा॥**
**कठिन भूमि कोमल पद गामी। कवन हेतु बिचरहु बन स्वामी॥**
**की तुम्ह तीनि देव महँ कोऊ। नर नारायन की तुम्ह दोऊ॥**

× × × ×

**जग कारन तारन भव भंजन धरनी भार।**
**की तुम्ह अखिल भुवन पति लीन्ह मनुज अवतार॥**

अध्यात्मरामायणमा पनि झन्नै-झन्नै यस्तै वर्णन छ। यसको अतिरिक्त त्यहाँ श्रीरामचन्द्रजी भाइ लक्ष्मणसंग हनुमान्‌जीको विद्वत्ताको सराहना (प्रशंसा) गर्दै भन्नुहुन्छ-

'लक्ष्मण! हेर, यो ब्रह्मचारीको वेषमा कस्तो सुन्दर भाषण गर्दछ, अवश्य नै यसले सम्पूर्ण शब्दशस्त्र धेरै प्रकारले पढ़ेको छ। यसले यति कुरा गऱ्यो, तर यसको बोलाइमा कहीं कुनै पनि अशुद्धि आएन।'

वाल्मीकीय रामायणमा त श्रीरामले यहाँसम्म भन्नुभयो कि 'यसले अवश्य नै सबै वेदहरूको अभ्यास गरेको छ, नत्रभने त यसले यसप्रकारको भाषण कसरी गर्न सक्थ्यो?' यसको अतिरिक्त अरू पनि

धेरै प्रकारले श्रीहनुमान्जीका वचनहरूको प्रशंसा गर्दै वहाँ अन्तमा भन्नुहुन्छ कि जुन राजाको नजिकै यस्ता बुद्धिमान् दूत हुन्छन् उसका समस्त कार्यहरू दूतको कुराकानीबाट नै सिद्ध हुने गर्दछन्।

रामचरितमानसमा अगाडिको वर्णन निकै नै प्रेमपूर्ण छ—

भगवान् श्रीरामचन्द्रजी आफ्नो सम्पूर्ण परिचय दिएर श्रीहनुमान्जी संग सोध्नुहुन्छ कि ब्राह्मण! भन्नुहोस्, तपाईं को हुनुहुन्छ? यो सुन्दा नै हनुमान्जी श्रीरामलाई राम्रो प्रकारले चिनेर तुरून्त नै वहाँका चरणहरूमा पर्नुहुन्छ, वहाँको शरीर रोमाञ्चित हुन्छ, मुखबाट बोली निस्किंदैन, वहाँ टकटकी लगाएर भगवान्को रूप-माधुरी र विचित्र वेषलाई हेर्न थाल्नुहुन्छ। कस्तो अलौकिक प्रेम हो! फेरि धैर्य धारण गरेर भगवान्संग भन्नुहुन्छ-

**मोर न्याउ मैं पूछा साईं। तुम्ह पूछहु कस नर की नाईं॥**
**तव माया बस फिरउँ भुलाना। ताते मैं नहिं प्रभु पहिचाना॥**
**एकु मैं मंद मोहबस कुटिल हृदय अग्यान।**
**पुनि प्रभु मोहि बिसारेउ दीनबंधु भगवान॥**
**जदपि नाथ बहु अवगुन मोरें। सेवक प्रभुहि परै जनि भोरें॥**

कति प्रेम र दैन्यभाव छ। यसपछि विनयपूर्वक सुग्रीवको परिस्थिति बताएर दुवै भाइहरूलाई आफ्नो पीठ्यूँमा चढाएर वहाँ सुग्रीवको नजिकै लैजानुहुन्छ। वहाँ दुवैतिरका कुराहरू सुनाएर अग्निदेवको साक्षीमा श्रीराम र सुग्रीवको मित्रता गराइदिनुहुन्छ। बालीको वध गरेर भगवान् श्रीराम भाइ लक्ष्मणसहित प्रवर्षण पर्वतमा निवास गरेर वर्षा ऋतुको समय व्यतीत गर्नुहुन्छ। उता सुग्रीव राज्य, ऐश्वर्य र स्त्री आदि भेटिनाले भोगहरूमा फँसेर भगवान्को कार्यलाई बिर्सिन्छन्। यो देखेर श्रीहनुमान्जी राजनीतिको अनुसार सुग्रीवलाई भगवान्को कार्यको स्मृति

गराउनुहुन्छ र उनको आज्ञा लिएर बाँदरहरूलाई बोलाउनको लागि देश-देशान्तरहरूमा दूत पठाउनुहुन्छ। कस्तो बुद्धिमानी हो!

यसपछि जब श्रीसीताजीको खोजीको लागि सबै दिशाहरूमा बाँदरहरूलाई पठाउने कुराकानी भइरहेको थियो, त्यस समयको वर्णन श्रीवाल्मीकीय रामायणमा हेर्नाले थाहा पाइन्छ कि सुग्रीवको श्रीहनुमान्मा कति भरोसा र विश्वास थियो तथा भगवान् श्रीरामको पनि वहाँको कार्यकुशलतामा कति विश्वास थियो। त्यहाँ श्रीरामको सामुन्नेमा नै सुग्रीव हनुमान्संग भन्दछन्—

**न भूमौ नान्तरिक्षे वा नाम्बरे नामरालये।**
**नाप्सु वा गतिसङ्गं ते पश्यामि हरिपुङ्गव॥**
**सासुराः सहगन्धर्वाः सनागनरदेवताः।**
**विदिताः सर्वलोकास्ते ससागरधराधराः॥**
**गतिर्वेगश्च तेजश्च लाघवं च महाकपे।**
**पितुस्ते सदृशं वीर मारुतस्य महौजसः॥**
**तेजसा वापि ते भूतं न समं भुवि विद्यते।**
**तद्यथा लभ्यते सीता तत्त्वमेवानुचिन्तय॥**
**त्वय्येव हनुमन्नस्ति बलं बुद्धिः पराक्रमः।**
**देशकालानुवृत्तिश्च नयश्च नयपण्डित॥**

(किष्किन्धा० ४४। ३—७)

'कपिश्रेष्ठ! तिम्रो गतिको अवरोध न पृथ्वीमा, न अन्तरिक्षमा, न आकाशमा र न देवलोकमा अथवा जलमा नै देखिन्छ। देवता, असुर, गन्धर्व, नाग, मनुष्य यिनीहरू सहित उनीहरूका सम्पूर्ण लोकहरूको समुद्र र पर्वतहरू सहित तिमीलाई राम्रो प्रकारले ज्ञान छ। महाकपे! तिम्रो गति, वेग, तेज र फुर्ती तिम्रा महान् बलशाली पिता वायुको समान

छ। यस भूमण्डलमा कुनै पनि प्राणी तेजमा तिम्रो समानता गर्नेवाला न कहिल्यै भयो न रहेको छ। यसकारण जसप्रकार सीता भेटिनुहुन्छ, त्यो उपाय तिमी सोचेर बताऊ। हनुमान्! तिमी नीतिशास्त्रका पण्डित हौ; बल, बुद्धि, पराक्रम, देश-कालको अनुसरण र नीतिपूर्ण व्यवहार-यी सबैकुरा एकै ठाउँ तिमीमा पाइन्छन्।'

यसप्रकार सुग्रीवका कुराहरू सुनेर भगवान् श्रीराम हनुमान्जीतिर हेरेर आफ्नो कार्य सिद्ध भएको नै सम्झन थाल्नुभयो। वहाँले मनै-मन अत्यन्त प्रसन्न भएर आफ्नो नामका अक्षरहरूले युक्त एउटा औंठी हनुमान्जीको हातमा दिएर भन्नुभयो—

**अनेन त्वां हरिश्रेष्ठ चिह्नेन जनकात्मजा।**
**मत्सकाशादनुप्राप्तमनुद्विग्नानुपश्यति ॥**
**व्यवसायश्च ते वीर सत्त्वयुक्तश्च विक्रमः।**
**सुग्रीवस्य च संदेशः सिद्धिं कथयतीव मे॥**

(किष्किन्धा० ४४। १३-१४)

'कपिश्रेष्ठ! यस चिह्नद्वारा जनकनन्दिनी सीतालाई यो विश्वास हुनेछ कि तिमी मकहाँबाट नै गएका हौ। तब उनी निर्भय भएर तिमी तिर हेर्न सक्नेछिन्। वीरवर! तिम्रो उद्योग, धैर्य र पराक्रम तथा सुग्रीवको सन्देशले मलाई यस कुराको सूचना दिइरहेका छन् कि तिमीद्वारा यस कार्यको सिद्धि अवश्य हुनेछ।'

अध्यात्मरामायणमा पनि धेरैजसो यसै प्रकार श्रीरामले हनुमान्जीका गुणहरूको प्रशंसा गर्नुभएको छ। त्यहाँ चिह्नको रूपमा आफ्नो मुद्रिका दिएर भगवान् श्रीराम हनुमान्जीसंग भन्नुहुन्छ—

**अस्मिन् कार्ये प्रमाणं हि त्वमेव कपिसत्तम।**
**जानामि सत्त्वं ते सर्वं गच्छ पन्थाः शुभस्तव॥**

(४। ६। २९)

'कपिश्रेष्ठ! यस कार्यमा केवल तिमी नै समर्थ छौ। म तिम्रो समस्त पराक्रम राम्ररी जान्दछु। ठीक छ, जाऊ, तिम्रो बाटो कल्याणकारक होस्।'

यसपछि जब जाम्बवान् र अंगद आदि बाँदरहरूसंग हनुमान्जी श्रीसीताजीको खोजी गर्दै–गर्दै समुद्रको किनारमा पुग्नुहुन्छ र श्रीसीताजीको अनुसन्धान न पाएको कारणले शोकाकुल भएर सबै त्यहीं अनशन व्रत लिएर बस्नुहुन्छ, तब गृध्रराज सम्पातीसंग कुराकानी हुँदामा यो थाहा पाइन्छ कि सययोजनको समुद्रपारि लंकापुरीमा राक्षसराज रावण रहन्छन्, त्यहाँ आफ्नो अशोकवाटिकामा उनले सीतालाई लुकाएर राखेका छन्। तब सबै बाँदरहरू एक ठाउँ बसेर आपसमा समुद्र नाँघ्ने विचार गर्न थाले। अंगदले सोधेपछि सबैले आफ्नो–आफ्नो सामर्थ्यको परिचय दिए, तर श्रीहनुमान्जी चुप लागेर बसिरहनुभयो। कस्तो निरभिमानता हो। यो प्रसंग वाल्मीकीय रामायणमा निकै नै रोचक र विस्तृत छ। त्यहाँ जाम्बवान्ले श्रीहनुमान्जीको बुद्धि, बल, तेज, पराक्रम, विद्या र वीरताको निकै नै विचित्र चित्रण गरेका छन्। उनी भन्छन्।

**वीर वानरलोकस्य सर्वशास्त्रविदां वर।**
**तूष्णीमेकान्तमाश्रित्य हनूमन् किं न जल्पसि॥**

.... .... ....

**रामलक्ष्मणयोश्चापि तेजसा च बलेन च।**

.... .... ....

**गरुत्मानिव विख्यात उत्तमः सर्वपक्षिणाम्॥**

× × × ×

**पक्षयोर्यद्बलं तस्य भुजवीर्यबलं तव।**

**विक्रमश्चापि वेगश्च न ते तेनापहीयते॥**
**बलं बुद्धिश्च तेजश्च सत्त्वं च हरिपुङ्गव।**
**विशिष्टं सर्वभूतेषु किमात्मानं न सज्जसे॥**

(किष्किन्धा० ६६। २—४, ६-७)

'सम्पूर्ण शास्त्रवेत्ताहरूमा श्रेष्ठ तथा बाँदर-जगत्का अद्वितीय वीर हनुमान्! तिमी कसरी एकान्तमा आएर चुप लागेर बसेका छौ? किन केही पनि बोल्दैनौ? तिमी त तेज र बलमा श्रीराम र लक्ष्मणका समान छौ। गमनशक्तिमा सम्पूर्ण पक्षीहरूमा श्रेष्ठ विनतापुत्र महाबली गरुडसमान प्रख्यात छौ। उनका प्वाँखहरूमा जो बल र तेज तथा पराक्रम छ, त्यही तिम्रा यी भुजाहरूमा पनि छ। वानरश्रेष्ठ! तिमीभित्र सम्पूर्ण प्राणीहरूभन्दा धेरै बल, बुद्धि, तेज र धैर्य छ, फेरि तिमी आफ्नो स्वरूप किन जान्दैनौ?'

यसपछि जाम्बवान्ले वहाँको जन्मको कथा सुनाउँछन् तथा बाल्यावस्थाका पराक्रम र वरदानको कुरा भनेर वहाँको बलको स्मृति दिलाउँदै अन्तमा भन्दछन्—

**उत्तिष्ठ हरिशार्दूल लङ्घयस्व महार्णवम्।**
**परा हि सर्वभूतानां हनुमन् या गतिस्तव॥**
**विषण्णा हरयः सर्वे हनुमन् किमुपेक्षसे।**
**विक्रमस्व महावेग विष्णुस्त्रीन्विक्रमानिव॥**

(किष्किन्धा० ६६। ३६-३७)

'वानरश्रेष्ठ हनुमान्! उठ र यस महासागरलाई नाघेर जाऊ। जो तिम्रो गति छ, त्यो सबै प्राणीहरूभन्दा बढ़ी छ। सबै बाँदर चिन्तामा परेका छन् र तिमी यिनीहरूको उपेक्षा गर्छौ, यो के कुरा हो? तिम्रो वेग महान् छ। जसरी भगवान् विष्णुले (पृथ्वीलाई नाप्नको लागि) तीन

पाइला चाल्नुभएकोथियो, त्यसै प्रकार तिमी हाम फालेर समुद्रको पारि गइहाल।' यति सुन्दा नै श्रीहनुमान्जी तुरुन्त नै समुद्र नाघ्नको लागि आफ्नो शरीर बढाउन थाल्नुभयो।

रामचरितमानसमा पनि यही आशयको वर्णन छ। त्यहाँ अंगदलाई धैर्य दिइसकेपछि जाम्बवान् हनुमान्जीसंग भन्दछन्—

**कहइ रीछपति सुनु हनुमाना। का चुप साधि रहेहु बलवाना॥**
**पवन तनय बल पवन समाना। बुधि बिबेक बिग्यान निधाना॥**
**कवन सो काज कठिन जग माहीं। जो नहिं होइ तात तुम्ह पाहीं॥**
**राम काज लगि तव अवतारा। सुनतहिं भयउ पर्बताकारा॥**
**कनक बरन तन तेज बिराजा। मानहुँ अपर गिरिन्ह कर राजा॥**

अध्यात्मरामायणमा पनि यस्तै प्रकारको वर्णन छ। यसबाहेक पर्वताकार रूप धारण गरिसकेपछि त्यहाँ श्रीहनुमान्जी भन्नुहुन्छ—

**लङ्घयित्वा जलनिधिं कृत्वा लङ्कां च भस्मसात्॥**
**रावणं सकुलं हत्वानेष्ये जनकनन्दिनीम्।**
**यद्वा बद्ध्वा गले रज्ज्वा रावणं वामपाणिना॥**
**लङ्कां सपर्वतां धृत्वा रामस्याग्रे क्षिपाम्यहम्।**
**यद्वा दृष्ट्वैव यास्यामि जानकीं शुभलक्षणाम्॥**

(४। ९। २२—२४)

'वानर हो! म समुद्रलाई नाघेर लंकालाई भस्म गर्नेछु र रावणलाई कुलसहित मारेर श्रीजानकीलाई लिएर आउँछु। अथवा भन्छौ भने रावणको गलामा डोरी हालेर तथा लंकालाई त्रिकूट पर्वत सहित बायाँ हातमा उठाएर भगवान् रामको अगाडि ल्याएर राखूँ? अथवा शुभलक्षणा श्रीजानकीलाई देखेर नै आइपुगूँ?

कति आत्मबल हो। यसमा जाम्बवान्ले भने—'वीर! तिम्रो

कल्याण होस्। तिमी केवल शुभलक्षणा श्रीजानकीजीलाई जिउँदैजाग्दै देखेर नै आइहाल।'

समुद्रलाई नाघ्नको लागि तयार भएर आफ्ना बाँदरहरूसंग जो वचन भन्नुभयो, त्यसबाट यो थाहा हुन्छ कि वहाँको श्रीरामनाममा निकै नै दृढ़ विश्वास थियो। वहाँ श्रीराम भगवान्का गुण, प्रभाव र तत्त्वलाई राम्रो प्रकारले जान्नुहुन्थ्यो तथा श्रीराममा वहाँको अविचल प्रेम थियो। अध्यात्मरामायणमा यो प्रसंग यसप्रकार छ—

**पश्यन्तु वानराः सर्वे गच्छन्तं मां विहायसा॥**
**अमोघं रामनिर्मुक्तं महाबाणमिवाखिलाः।**
**पश्याम्यद्यैव रामस्य पत्नीं जनकनन्दिनीम्॥**
**कृतार्थोऽहं कृतार्थोऽहं पुनः पश्यामि राघवम्।**
**प्राणप्रयाणसमये यस्य नाम सकृत् स्मरन्॥**
**नरस्तीर्त्वा भवाम्भोधिमपारं याति तत्पदम्।**
**किं पुनस्तस्य दूतोऽहं तदङ्गाङ्गुलिमुद्रिकः॥**
**तमेव हृदये ध्यात्वा लङ्घयाम्यल्पवारिधिम्।**

(५। १। २—६)

'समस्त वानरहरू हो! तिमीहरू सबैजना भगवान् रामद्वारा छोडिएका अमोघबाण झैं आकाशमार्गबाट गइरहेको मलाई हेर। म आज नै रामप्रिया जनकनन्दिनी श्रीसीताजीको दर्शन गर्नेछु। निश्चय नै म कृतकृत्य भइसकें, कृतकृत्य भइसकें, अब म फेरि श्रीरघुनाथजीको दर्शन गर्नेछु। प्राण निस्किने बेलामा जसको नामको एक पटक स्मरण गर्नाले नै मनुष्य अपार संसार सागरलाई पार गरेर वहाँको परमधाम मा गइहाल्छ, यस्ता भगवान् श्रीरामका दूत, वहाँको हातको मुद्रिका लिएर, हृदयमा वहाँकै ध्यान गर्दै म यदि यो छोटो समुद्रलाई

नाघेर जाऊँ भने थसमा आश्चर्य नै के छ र? समुद्र नाघ्नको लागि श्रीहनुमान्‌जीले जो भयानक रूप लिनुभयो, त्यसको वर्णन वाल्मीकीय रामायणमा विस्तारपूर्वक छ। यहाँ त्यसको दिग्दर्शनमात्र गराइन्छ। वहाँ लेखिएको छ—

**ववृधे रामवृद्ध्यर्थं समुद्र इव पर्वसु॥**
**निष्प्रमाणशरीरः सँल्लिलङ्घयिषुरर्णवम्।**
**बाहुभ्यां पीडयामास चरणाभ्यां च पर्वतम्॥**
**स चचालाचलश्चाशु मुहूर्तं कपिपीडितः।**
**तरूणां पुष्पिताग्राणां सर्वं पुष्पमशातयत्॥**
**तमूरुवेगोन्मथिताः सालाश्चान्ये नगोत्तमाः।**
**अनुजग्मुर्हनूमन्तं सैन्या इव महीपतिम्॥**

(सुन्दर० १०—१२, ४८)

'जसरी पूर्णिमाको दिन समुद्र बढ्दछ, त्यसरी भगवान् श्रीरामको कार्यको सिद्धिको लागि हनुमान् बढ्न थाल्नुभयो। समुद्र नाघ्ने इच्छाले वहाँले आफ्नो शरीरलाई खूब बढाउनुभयो र आफ्ना भुजाहरू र चरणहरूले त्यस पर्वतलाई दबाउनुभयो त त्यो हनुमान्‌जीद्वारा ताडित भएको पर्वत तुरुन्त काँप्न थाल्यो र मुहूर्तभरि काँपिरह्यो। त्यसमाथि उम्रिएका वृक्षहरूका सम्पूर्ण फूलहरू झरेर गए। जब वहाँले हाम फाल्नुभयो, तब पर्वतमाथि उम्रिएका साल र अन्य वृक्ष यता-उता लड़े। वहाँका जङ्घाहरूको वेगबाट टुटेका वृक्षहरू यसप्रकार वहाँको पछिलागे, जसरी राजाको पछाडि सेना चल्दछ।'

यसबाहेक त्यहाँ श्रीहनुमान्‌जीको स्वरूपको मनोहर भाषामा निकै नै सुन्दर चित्रण गरिएको छ। त्यहाँ लेखिएको छ कि त्यतिखेर श्रीहनुमान्‌जीको दस योजन चौड़ा र तीस योजन लामो

छायाँ वेगको कारणले समुद्रमा निकै सुन्दर लाग्दथ्यो। वहाँ परम तेजस्वी, महाकाय कपिवर आकाशमा आलम्बनहीन प्वाँखवाला पर्वत जस्ता जानिनुहुन्छ। यसबाट वहाँको लंबाई-चौड़ाईको विस्तारको केही पत्तो लाग्दछ।

यो देखेर मैनाक-पर्वत वहाँसंग विश्राम लिनको लागि अनेक प्रकारले प्रार्थना गर्दछ। तर भगवान् श्रीरामको कार्य पूरा नगरी वहाँलाई विश्राम कहाँ! वहाँ त्यस मैनाकलाई केवल स्पर्श मात्र गरेर नै अघि बढ्नुहुन्छ। रामचरितमानसमा श्रीतुलसीदासजी भन्नुहुन्छ—

**जेहिं गिरि चरन देइ हनुमंता। चलेउ सो गा पाताल तुरंता॥**
**जिमि अमोघ रघुपति कर बाना। एही भाँति चलेउ हनुमाना॥**
**जलनिधि रघुपति दूत बिचारी। तैं मैनाक होहि श्रमहारी॥**
**हनूमान तेहि परसा कर पुनि कीन्ह प्रनाम।**
**राम काजु कीन्हें बिनु मोहि कहाँ बिश्राम॥**

सुरसालाई आफ्नो बुद्धि-बलको परिचय दिएर अगाडि जाँदा-जाँदा जब समुद्रमा वहाँको दृष्टि पर्दछ, तब के देख्नुहुन्छ भने एउटा विशालकाय प्राणी समुद्रको जलमा परेको छ। त्यस विकराल वदना राक्षसीलाई देखेर वहाँ सोच्न लाग्नुभयो-कपिराज सुग्रीवले जुन महापराक्रमी छायाग्राही अद्‌भुत जीवको कुरा बताउनु भएकोथियो, त्यो निःसन्देह यही हो। यस्तो निश्चय गरेर वहाँले आफ्नो शरीरलाई बढ़ाउनुभयो। हनुमान्‌जीको शरीरलाई बढ्दो देखेर सिंहिका पनि आफ्नो भयानक मुख फैलाएर हनुमान्‌जीतिर दौड़ी। तब हनुमान्‌जी सानो रूप बनाएर उसको मुखमा घुस्नुभयो र आफ्ना नङ्हरूले उसका मर्मस्थलहरूलाई भेदन गर्नुभयो। यसप्रकार कुशलता र धैर्यपूर्वक उसलाई मारेर फेरि पहिलेको जस्तै अघि बढ्नुभयो। कस्तो

विचित्र बुद्धि, कौशल, धैर्य र साहस हो।

यसप्रकार समुद्रलाई पार गरेर वहाँ त्रिकूट पर्वतमा पुग्नुभयो। विना विश्राम सय योजनको समुद्रलाई नाघे छँदामा पनि वहाँको शरीरमा कुनै प्रकारको थकावट आएन। त्यहाँबाट वहाँले राम्ररी लंकाको निरीक्षण गर्नुभयो। फेरि लंकाको नजिक गएर त्यसभित्र प्रवेश गर्ने विषयमा खूब विचार गरेर अन्तमा यो निश्चय गर्नुभयो कि रात्रिको समय सानो रूप बनाएर यसमा प्रवेश गर्नु ठीक हुनेछ। यसपछि सन्ध्याकालमा जब वहाँ सानो रूप धारण गरेर लंकापुरीमा प्रवेश गर्न लाग्नुभयो, तब द्वारमा लंकापुरीकी अधिष्ठात्री लंकिनी राक्षसीले वहाँलाई देखी। उसले श्रीहनुमान्‌लाई हप्काएर जब लात्ती हानी, तब वहाँले आफ्नो बायाँ हातको एक मुड्की उसको शरीरमा हिर्काउनुभयो। त्यो लाग्ने बित्तिकै नै ऊ रगत वमन गर्दै पृथ्वीमा लड़ी। फेरि उठेर ब्रह्माजीको कुराको स्मरण गर्दै हनुमान्‌जीको स्तुति गर्न लागी र अन्तमा भनी—

**धन्याहमप्यद्य चिराय राघव-**
**स्मृतिर्ममासीद्भवपाशमोचिनी ।**
**तद्भक्तसङ्गोऽप्यतिदुर्लभो मम**
**प्रसीदतां दाशरथिः सदा हृदि॥**

(अध्यात्म० ५। १। ५७)

'आज म पनि धन्य छु जो धेरै समयपछि मलाई संसार बन्धनको विनाश गर्ने रघुनाथजीको स्मृति प्राप्त भयो र वहाँका भक्तको अति दुर्लभ संग पनि प्राप्त भयो। त्यस्ता दशरथपुत्र राम सधैं नै मेरो हृदयमा प्रसन्नतापूर्वक निवास गर्नुहुनेछ।' रामचरितमानसमा यो प्रसंग यस प्रकार छ—

हनुमान्‌जीको प्रहारले व्याकुल भएर पछारिएपछि सावधान

भएर लंकिनी भन्दछे—

**तात मोर अति पुन्य बहूता। देखेउँ नयन राम कर दूता॥**
**तात स्वर्ग अपबर्ग सुख धरिअ तुला एक अंग।**
**तूल न ताहि सकल मिलि जो सुख लव सतसंग॥**

यसपछि हनुमान्जी सानो रूप धारण गरेर लंकापुरीमा सीताको खोजी गर्दै धेरै राक्षसहरूको घरमा घुमेर रावणको महलमा जानुहुन्छ। त्यहाँ रावणको महलका विचित्र रचना देख्दै पुष्पक विमानलाई आश्चर्ययुक्त भएर हेर्नुहुन्छ। यसपछि जतिखेर वहाँले सीतालाई चिन्नको लागि रावणको महलमा रावणका स्त्रीहरूलाई देखेर आफ्नो मनको स्थितिको वर्णन गर्नुभयो, त्यसलाई देख्नाले यो थाहा हुन्छ कि वहाँको ब्रह्मचर्यनिष्ठा कति अग्लो थियो, परस्त्री-दर्शनलाई वहाँ कति नराम्रो सम्झिनुहुन्थ्यो, वहाँको कति सुन्दर विशुद्धभाव थियो। वाल्मीकीय रामायणको कथा छ कि जब हनुमान्ले रावणको महलका कुना-कुना खोजी गर्नुभयो तर वहाँले जानकीलाई देख्नुभएन, त्यसबेला सीताजीलाई खोज्ने उद्देश्यले स्त्रीहरूलाई देख्दा देख्दै वहाँको मनमा धर्मभंगको शंका भयो। वहाँ सोच्न थाल्नुभयो, यसप्रकार अन्तःपुरमा सुतिरहेका अर्काका स्त्रीहरूको हेराइले मेरो धर्मलाई बिल्कुल नष्ट गरिदिनेछ। तर यी परस्त्रीहरूलाई मैले कामबुद्धिले देखेको छैन (हेरेको छैन)। यस दृश्यबाट मेरो मनमा अलिकति पनि विकार आएन। सम्पूर्ण इन्द्रियहरूका राम्रा-नराम्रा प्रवृत्तिहरूको कारण मन नै हो र मेरो मन सर्वथा निर्विकार छ। यसबाहेक सीताजीलाई अर्को तरीकाबाट म खोज्न पनि सक्दिनँ। स्त्रीहरूलाई खोज्दाखेरि स्त्रीहरूको माझमा नै खोज्नुपर्दछ। -इत्यादि। यस्तो सुन्दर विचार र यस्तो विशुद्ध भाव वहाँको नै उपयुक्त छ।

साधकहरूले यसबाट विशेष शिक्षा ग्रहण गर्नुपर्दछ र विकट स्थितिमा पनि आफ्नो मनमा कुनै प्रकारको पनि विकार आउन दिनुहुँदैन। वाल्मीकीय रामायणमा सीताको खोजीको निकै नै विचित्र र विस्तृत वर्णन छ। यहाँ त्यसमध्येबाट निकै नै थोरै प्रसंगको दिग्दर्शनमात्र गराइएको छ।

रामचरितमानसमा लेखिएको छ कि सीताको खोजीको लागि लंकामा घुम्दा घुम्दै हनुमान्‌जीको दृष्टि एउटा सुन्दर भवनमा पर्दछ, जसमा भगवान् श्रीरामका आयुध अंकित गरिएका छन्। तुलसीका बोटहरू त्यसको शोभा बढ़ाइरहेका छन्। यो देखेर वहाँ सोच्न थाल्नुहुन्छ कि यहाँ त राक्षसहरूको नै निवास छ, यहाँ सज्जन पुरुष किन निवास गर्न थाले? त्यसबेला विभीषण जाग्नुहुन्छ र बार-बार श्रीरामनामको स्मरण गर्नुहुन्छ। यो देखेर हनुमान्‌जीले सोच्नुभयो कि निस्सन्देह यिनी भगवान्‌का कुनै भक्त हुन्, यिनीसंग पक्कै चिनजान गर्नुपर्छ। साधुबाट कहिल्यै कार्यको हानि हुनसक्दैन।

**बिप्र रूप धरि बचन सुनाए। सुनत बिभीषन उठि तहँ आए॥**
**करि प्रनाम पूँछी कुसलाई। बिप्र कहहु निज कथा बुझाई॥**
**की तुम्ह हरि दासन्ह महँ कोई। मोरें हृदय प्रीति अति होई॥**
**की तुम्ह रामु दीन अनुरागी। आयहु मोहि करन बड़भागी॥**
**तब हनुमंत कही सब राम कथा निज नाम।**
**सुनत जुगल तन पुलक मन मगन सुमिरि गुन ग्राम॥**

भगवान्‌का भक्तहरूमा परस्पर स्वाभाविक प्रेम कस्तो हुनुपर्दछ, यसको यहाँ निकै नै सुन्दर चित्र खिचिएको छ। विभीषण भन्नुहुन्छ—

**तात कबहुँ मोहि जानि अनाथा। करिहहिं कृपा भानुकुल नाथा॥**
**तामस तनु कछु साधन नाहीं। प्रीति न पद सरोज मन माहीं॥**

**अब मोहि भा भरोस हनुमंता । बिनु हरिकृपा मिलहिं नहिं संता॥**

तब हनुमान्‌जी भन्नुहुन्छ—

**सुनहु बिभीषन प्रभु कै रीती । करहिं सदा सेवक पर प्रीती॥**
**कहहु कवन मैं परम कुलीना । कपि चंचल सबहीं बिधि हीना॥**
**अस मैं अधम सखा सुनु मोहू पर रघुबीर।**
**कीन्ही कृपा सुमरि गुन भरे बिलोचन नीर॥**
**जानतहूँ अस स्वामि बिसारी । फिरहिं ते काहे न होहिं दुखारी॥**
**एहि बिधि कहत राम गुन ग्रामा । पावा अनिर्बाच्य बिश्रामा॥**

कति सुन्दर दैन्यभाव, अतुलित विश्वास र अनन्य भगवत्प्रेम छ। यसपछि विभीषणबाट सबै खबर पाएर हनुमान्‌जी अशोकवाटिकामा गएर श्रीसीताजीलाई देख्नुहुन्छ र मनैमन वहाँलाई प्रणाम गर्नुहुन्छ। अशोकवाटिकामा गएर श्रीसीताजीसंग भेट गर्न हनुमान्‌जीले कति बुद्धिमानी र युक्तिहरूले काम लिनुभयो, यसको वर्णन वाल्मीकीय रामायणमा धरै विस्तृत छ। त्यहाँ लेखिएको छ कि धरै प्रकारका युक्तिहरू लगाएर सीताजीसंग भेट गर्ने उपाय सोच्दै अन्तमा हनुमान्‌जी ठूलो सावधानीका साथ एक सघन वृक्षका पत्ताहरूमा लुकेर बस्नु-हुन्छ। त्यहींबाट सबैतिर दृष्टि घुमाएर हेर्नुहुन्छ। हेर्दा-हेर्दै वहाँको दृष्टि सीतामाथि पर्दछ। वहाँलाई देखेर धरै चिह्नहरूद्वारा अनुमान लगाएर यो निश्चय गर्नुहुन्छ कि यहाँ जनकनन्दिनी सीता हुनुहुन्छ। त्यहाँ वहाँले सीताको रहनसहन र स्वभावको बड़ा विचित्र चित्रण गर्नुभएको छ। वहाँ सीताका गहनाहरूलाई देखेर यो अनुमान लगाउनु-हुन्छ कि भगवान् श्रीरामले सीताजीका अंगहरूमा जुन जुन आभूषणहरूको चर्चा गर्नुभएको थियो, ती सबै वहाँका अङ्गहरूमा देखिन्छन्। यिनीहरूमा ती नै देखिंदैनन् जो वहाँले ऋष्यमूक पर्वतमा खसाइदिनु-

भएको दियो। यसप्रकार वहाँका रूप र गुणहरूलाई देखेर बड़ा बुद्धिमानीले वहाँले यो निश्चय गर्नुभयो कि निःसन्देह यहाँ सीता हुनुहुन्छ। यो निश्चय भएपछि वहाँलाई श्रीसीताजीको दुःखबाट बडा दुःख भयो र वहाँ मनैमन धैरै विलाप गर्न थाल्नुभयो। यसपछि सीतासंग कसरी कुराकानी गर्नुपर्छ, कतिखेर कसरी भेट गर्नुपर्छ, कसरी वहाँलाई विश्वास दिलाउनुपर्छ कि म श्रीरामचन्द्रको दास हुँ–यस विषयमा पनि वहाँले बड़ो विचारकुशलता प्रकट गर्नुभयो। ठीक त्यतिखेर रावण धैरै राक्षसीहरूलाई साथमा लिएर त्यहाँ पुग्दछन्। उनले सीतालाई अनेक प्रकारको भय देखाएर आफ्नो अधीन पार्ने चेष्टा गर्दछन्। तर सीता कुनै प्रकारले पनि आफ्नो निश्चयबाट विचलित हुनुहुन्न। अन्तमा रावण जान्छन्। तब उनको आज्ञानुसार राक्षसीहरू अनेक प्रकारले सीतालाई भय देखाउँछन्। त्यसै बेला त्रिजटा नामकी राक्षसी आफ्नो सपनाको कुरा भनेर सीतालाई धैर्य प्रदान गर्दछे र उसका कुराहरू सुनेर ती घोर राक्षसीहरू पनि शान्त हुन्छन्। सीता विरहमा व्याकुल भएर विलाप गर्न थाल्नुहुन्छ।

तब हनुमान्जी सीतासंग भेट गर्ने उपयुक्त मौका देखेर आफ्नो पूर्वनिश्चित विचार अनुसार श्रीरामको कथाको वर्णन गर्न लाग्नुहुन्छ। श्रीरघुनाथजीको आद्योपान्त समस्त चरित्र सुनेर सीतालाई बड़ो विस्मय भयो। अध्यात्म रामायणमा लेखिएको छ कि अन्तमा वहाँले सोच्नुभयो कि यो स्वप्न अथवा भ्रम त होइन ? यस्तो विचार गरेर वहाँ भन्न थाल्नुभयो—

**येन मे कर्णपीयूषं वचनं समुदीरितम्।**
**स दृश्यतां महाभागः प्रियवादी ममाग्रतः॥**

(५। ३। १८)

'जसले मेरा कानहरूलाई अमृतको समान प्रिय लाग्ने वचन सुनाए, ती प्रियभाषी महानुभाव मेरो सामुन्ने प्रकट होऊन्।'

यी वचन सुनेर वहाँ माता सीताको सामुन्ने बड़ा नम्रताको साथ

उभिनुहुन्छ र हात जोडेर वहाँलाई प्रणाम गर्नुहुन्छ। अकस्मात् एउटा वानरलाई आफ्नो सामुन्ने उभिएको देखेर सीताको मनमा यो शङ्का हुन्छ कि कहीं रावण त मलाई छल्नको लागि आइरहेका छैनन्, यो सोचेर वहाँ तलतिर मुख गरेर नै बसिरहनुहुन्छ। रामचरितमानसमा त्यसबेलाका श्रीहनुमान्जीका वचन यसप्रकार छन्—

**राम दूत मैं मातु जानकी। सत्य सपथ करुनानिधान की॥**
**यह मुद्रिका मातु मैं आनी। दीन्हि राम तुम्ह कहँ सहिदानी॥**

यसपछि श्रीजानकीले सोधेपछि वहाँले जसरी वानरराज सुग्रीवको साथमा भगवान् श्रीरामको मित्रता भयो, त्यो सारा कथा विस्तारपूर्वक सुनाइदिनुभयो तथा श्रीराम र लक्ष्मणका शारीरिक चिह्नहरूको एवं वहाँका गुण र स्वभावको पनि वर्णन गर्नुभयो। यी सबै कुराहरू सुनेर जानकीजीलाई बड़ा प्रसन्नता भयो। यस प्रसङ्गको वर्णन श्रीवाल्मीकीय रामायणमा बड़ा विस्तृत र रोचक छ।

रामचरितमानसमा श्रीतुलसीदासजीले निकै नै संक्षेपमा यस प्रकार भन्नुभएको छ—

**कपि के बचन सप्रेम सुनि उपजा मन बिस्वास।**
**जाना मन क्रम बचन यह कृपासिंधु कर दास॥**
**हरिजन जानि प्रीति अति गाढ़ी। सजल नयन पुलकावलि बाढ़ी॥**

यसपछि महातेजस्वी पवनकुमार हनुमान्जीले सीताजीलाई भगवान् श्रीरामले दिएको औंठी दिनुभयो, जसलाई लिएर वहाँ यति प्रसन्न हुनुभयो मानौं स्वयं भगवान् श्रीराम नै भेटिनुभएको हो। त्यसबेला वहाँ हनुमान्जीसंग भन्नुहुन्छ—

**बूड़त बिरह जलधि हनुमाना। भयहु तात मो कहुँ जलजाना॥**

**अब कहु कुसल जाउँ बलिहारी । अनुज सहित सुख भवन खरारी॥**
**कोमलचित कृपाल रघुराई । कपि केहि हेतु धरी निठुराई॥**
**सहज बानि सेवक सुखदायक । कबहुँक सुरति करत रघुनायक॥**
**कबहुँ नयन मम सीतल ताता । होइहहिं निरखि स्याम मृदु गाता॥**
**बचनु न आव नयन भरे बारी । अहह नाथ हौं निपट बिसारी॥**

यस प्रकार सीतालाई विरह–व्याकुल देखेर हनुमान् भन्नुहुन्छ—

**मातु कुसल प्रभु अनुज समेता । तव दुख दुखी सुकृपा निकेता॥**
**जनि जननी मानहु जियँ ऊना । तुम्ह ते प्रेमु राम कें दूना॥**
**रघुपति कर संदेसु अब सुनु जननी धरि धीर।**
**अस कहि कपि गदगद भयउ भरे बिलोचन नीर॥**

यसपछि बड़ा बुद्धिमानीको साथ श्रीरामको प्रेम र विरहव्याकुलताको कुरा श्रीहनुमान्‌जीले माता सीतालाई सुनाउनुभयो। अन्तमा भन्नुभयो कि श्रीरामचन्द्रजीले भन्नुभएको छ—

**तत्व प्रेम कर मम अरु तोरा । जानत प्रिया एकु मनु मोरा॥**
**सो मनु सदा रहत तोहि पाहीं । जानु प्रीति रसु एतनेहि माहीं॥**

यसप्रकार श्रीरामको प्रेमपूर्ण सन्देश सुनेर सीता प्रेममा मग्न हुनुभयो, वहाँलाई आफ्नो शरीरको पनि भान भएन। तब हनुमान्‌जी फेरि भन्नुहुन्छ—

**उर आनहु रघुपति प्रभुताई । सुनि मम बचन तजहु कदराई॥**
**निसिचर निकर पतंग सम रघुपति बान कृसानु।**
**जननी हृदयँ धीर धरु जरे निसाचर जानु॥**

यी सबै कुराहरू सुनेर जब जानकीजीले यो भन्नुभयो कि सबै बाँदरहरू त तिमीजस्तै होलान्। राक्षसगण बड़ा भयानक र विकराल छन्। यी सबैलाई तिमीहरू कसरी जित्न सक्छौ, मेरो मनमा यो सन्देह

भइरहेको छ।' यो सुनेर हनुमान्‌जीले आफ्नो भयानक पर्वताकार रूप सीताजीलाई देखाएर आफ्नो लुकेको प्रभाव प्रकट गरिदिनुभयो। त्यसलाई देख्दा नै सीताको मनमा विश्वास भयो। सीताले प्रसन्न भएर हनुमान्‌जीलाई धेरै वरदान दिनुभयो, साथै यो पनि भन्नुभयो कि भगवान् श्रीरामले तिमीमाथि कृपा गर्नुहुनेछ। यो कुरा सुन्दा नै हनुमान्‌जी प्रेममा मग्न हुनुभयो र बारम्बार चरणहरूमा प्रणाम गरेर हात जोड्दै भन्नुभयो–

**अब कृतकृत्य भयउँ मैं माता। आसिष तव अमोघ बिख्याता॥**

यसबाट यो प्रकट हुन्छ कि हनुमान्‌जीको श्रीरघुनाथजीका चरणहरूमा कति गूढ प्रेम छ।

अध्यात्मरामायणमा लेखिएको छ कि कुरै कुरामा सीताजीले जब यो सोध्नुभयो कि वानर सेनासहित, श्रीराम यस विशाल समुद्रलाई पार गरेर यहाँ कसरी आउन सक्नुहुन्छ? तब–

**हनूमानाह मे स्कन्धावारुह्य पुरुषर्षभौ॥**
**आयास्यतः ससैन्यश्च सुग्रीवो वानरेश्वरः।**
**विहायसा क्षणेनैव तीर्त्वा वारिधिमाततम्॥**

(सुन्दर० ३।४७-४८)

हनुमान्‌ले भन्नुभयो—वहाँ दुवै नरश्रेष्ठहरू मेरा काँधहरूमा चढेर आउनुहुनेछ र सम्पूर्ण सेनासहित वानरराज सुग्रीव पनि आकाशमार्ग-बाट क्षणमात्रमा नै यस महासमुद्रलाई पार गर्दै आउनुहुनेछ। यस प्रसंगबाट पनि श्रीहनुमान्‌का बल, वीर्य र साहसको परिचय पाइन्छ। यसपछि माता सीताबाट आज्ञा लिएर अशोकवाटिकाको फल खाएर श्रीहनुमान्‌जीले आफ्नो स्वामी श्रीरामको विशेष कार्य गर्ने इच्छाले अशोकवाटिकाका वृक्षहरूलाई तहस-नहस गरेर सम्पूर्ण वाटिकालाई

विध्वंस गरिदिनुभयो। यो समाचार पाएर रावणले आफ्नो धेरै ठूलो सेना र अक्षयकुमारलाई पठाए। ती सबैसंग हनुमान्जीको बड़ा भयंकर संग्राम भयो। ठूलो वीरता र युद्ध-कौशलबाट वहाँले अनायास नै जाम्बुमाली मन्त्रीका सात पुत्रहरू, पाँच सेनापतिहरू र अक्षयकुमारलाई मारिदिनुभयो। यस युद्धको प्रसंगबाट श्रीहनुमान्जीको अतुलित बल-पौरुष र युद्धकौशल स्पष्ट व्यक्त हुन्छ। श्रीवाल्मीकीयरामायणमा यसको बड़ा सुन्दर वर्णन छ। श्रीहनुमान्जीको अतुलित पराक्रमको चित्र खिच्दै त्यहाँ लेखिएको छ-

**तलेनाभिहनत् कांश्चित् पादैः कांश्चित्परंतपः।**
**मुष्टिभिश्चाहनत्कांश्चिन्नखैः कांश्चिद् व्यदारयत्॥**
**प्रममाथोरसा कांश्चिदूरुभ्यामपरानपि।**
**केचित्तस्यैव नादेन तत्रैव पतिता भुवि॥**

(सुन्दर० ४५।१२-१३)

हनुमान्जीले ती राक्षसहरूमध्येबाट कसैलाई थप्पड़ले हिर्काएर खसालिदिनुभयो, कतिलाई गोडाले कुल्चिनुभयो, कतिलाई मुड्कीले ठीक पारिदिनुभयो र धेरैलाई नङ्हरूले चिरिदिनुभयो। कतिलाई छातीले रगडेर उनको विजोग गरिदिनुभयो भने कसैलाई दुवै तिघ्राहरूले दबाएर पिसिदिनुभयो। कति राक्षस त वहाँको भयानक गर्जनाले नै त्यहाँ पृथ्वीमा लड्न गए—इत्यादि।

जब बचेकुचेका राक्षसहरूबाट रावणलाई यो खबर मिल्यो कि मन्त्रीका सातै पुत्र र प्रधान-प्रधान प्रायः सबै राक्षस मारिए, पाँचै सेनापति र अक्षयकुमार मारिए, तब उनले इन्द्रजित्लाई उत्साहित गरेर हनुमान्जीलाई समातेर ल्याउन पठाए। मेघनाद र हनुमान्जीको बड़ा भयंकर युद्ध भयो। अन्तमा जब उसले श्रीहनुमान्जीलाई बाँध्नको लागि

ब्रह्मास्त्र छोड्यो, तब ब्रह्माजीको सम्मान गर्नका लागि वहाँ त्यसमा बाँधिनुभयो। वहाँले सोच्नुभयो कि राक्षसहरूद्वारा समातिए छँदामा पनि मलाई लाभ नै हुन्छ, किनभने यसबाट मलाई राक्षसराज रावणको साथमा कुराकानी गर्ने अवसर मिल्नेछ। यो सोचेर वहाँ निश्चेष्ट हुनुभयो। तब राक्षसहरूले अनेक प्रकारका डोरीहरूले हनुमान्जीलाई राम्ररी बाँधे। यस्तो गर्नाले ब्रह्मास्त्रको प्रभाव परेन। यसप्रकार ब्रह्मास्त्रबाट मुक्त भएपनि परमचतुर हनुमान्जीले यस्तो व्यवहार गर्नुभयो मानौं यस कुरालाई वहाँ जान्नुहुन्नथ्यो। अध्यात्मरामायणमा लेखिएको छ कि यसपछि हनुमान्जी रावणको सभामा ल्याइनुभयो। त्यहाँ पुगेर वहाँले सम्पूर्ण सभाको बीचमा बडा शृङ्गारका साथ राजसिंहासनमा बसेका रावणलाई देख्नुभयो। हनुमान्जीलाई देखेर रावणलाई मनमनै ठूलो चिन्ता भयो। उनी सोच्न थाले कि यो भयंकर वानर को हो, के साक्षात् शिवजीका गण भगवान् नन्दीश्वर नै बाँदरको रूप धारण गरेर आएका त होइनन्? यसप्रकार धेरैथरी तर्क गरेपछि रावणले प्रहस्तसित भने–

**प्रहस्त पृच्छैनमसौ किमागतः**
**किमत्र कार्यं कुत एव वानरः।**
**वनं किमर्थं सकलं विनाशितं**
**हताः किमर्थं मम राक्षसा बलात्॥**

(५। ४। ५)

'प्रहस्त! यो बाँदरसंग सोध, यो यहाँ किन आएको हो? यहाँ यसको के काम छ? यो कहाँबाट आएको हो? अनि यसले मेरो सम्पूर्ण बगैंचा किन नष्ट गऱ्यो? र मेरा राक्षस वीरहरूलाई जबर्जस्ती किन मारिदियो?

प्रहस्तले हनुमान्‌जीसंग सारा कुरा सत्य-सत्य भन्नको लागि अनुरोध गरे। त्यतिखेर वहाँले ठूलो राजनीतिका साथ उत्तर दिनुभयो। मनमा भगवान्‌को संझना गरेर वहाँ भन्न थाल्नुभयो-

**शृणु स्फुटं देवगणाद्यमित्र हे**
**रामस्य दूतोऽहमशेषहृत्स्थितेः।**
**यस्याखिलेशस्य हृताधुना त्वया**
**भार्या स्वनाशाय शुनेव सद्धविः॥**

(५। ४। ८)

'देवताहरूका शत्रु रावण! तिमी राम्ररी सुन-कुकुरले जसरी विशुद्ध हविलाई चोरेर लैजान्छ, त्यसरी तिमीले आफ्नो नाश गराउनको लागि जुन परमेश्वरकी पतिव्रता पत्नीलाई हरण गर्‍यौ, म उनै सर्वान्तर्यामी भगवान् रामको दूत हुँ।' वाल्मीकीय रामायणमा यस प्रसंगको विस्तृत वर्णन छ। त्यहाँ हनुमान्‌जी भन्नुहुन्छ—

**अब्रवीन्नास्मि शक्रस्य यमस्य वरुणस्य च।**
**धनदेन न मे सख्यं .... .... ॥**
**जातिरेव मम त्वेषा वानरोऽहमिहागतः।**
**दर्शने राक्षसेन्द्रस्य तदिदं दुर्लभं मया॥**
**वनं राक्षसराजस्य दर्शनार्थे विनाशितम्।**
**ततस्ते राक्षसाः प्राप्ता बलिनो युद्धकाङ्क्षिणः॥**
**रक्षणार्थं च देहस्य प्रतियुद्धा मया रणे।**
**अस्त्रपाशैर्न शक्योऽहं बद्धुं देवासुरैरपि॥**

.... .... ....

**राजानं द्रष्टुकामेन मयास्त्रमनुवर्तितम्॥**

(सुन्दर० ५०। १३—१७)

'म इन्द्र, वरुण, यम आदि अन्य कुनै देवताद्वारा पठाइएको हुइनँ, न मेरो कुबेरको साथ मित्रता छ। मेरो त यो जाति नै हो अर्थात् म जन्मदेखि नै बाँदर हुँ, राक्षसराज रावणलाई हेर्नको लागि नै म यहाँ आएको हुँ तथा रावणसंग भेट गर्ने उद्देश्यले नै मैंले यस्तो यो दुर्लभ बगैंचा उजाड पारेको हुँ। तिम्रा बलिया राक्षसहरू मसंग लड्नको लागि गए, तब आफ्नो शरीरको रक्षाको लागि मैंले उनीहरूको सामना गरें। देवता अथवा असुर कुनै पनि कुनै प्रकारले मलाई अस्त्रहरूद्वारा बाँध्न सक्दैनन्। राक्षसराजलाई हेर्नको लागि नै मैंले यो बन्धन स्वीकार गरेको हुँ।'

यसपछि संक्षेपमा श्रीरामको सम्पूर्ण कथाको वर्णन गर्दै, वहाँको सुग्रीवको साथ मित्रता हुनु र बाली मारिनु आदि सबै कुराहरू भनेर यो भन्नुभयो कि 'म सीताको खबर लिनको लागि आएको हुँ।'

यसपछि वहाँले ठूला युक्तिहरूले रावणलाई भगवान् श्रीरामका बल, पराक्रम, प्रभाव र ऐश्वर्यका कुराहरू सुनाएर धेरै कुरा सम्झाउने चेष्टा गर्नुभयो। रामचरितमानसमा श्रीहनुमान्‌जी भन्नुहुन्छ—

**बिनती करउँ जोरि कर रावन। सुनहु मान तजि मोर सिखावन॥**

× × × ×

**जाकें डर अति काल डेराई। जो सुर असुर चराचर खाई॥**
**तासों बयरु कबहुँ नहिं कीजै। मोरे कहें जानकी दीजै॥**
**प्रनतपाल रघुनायक करुना सिंधु खरारि।**
**गएँ सरन प्रभु राखिहैं तव अपराध बिसारि॥**
**राम चरन पंकज उर धरहू। लंका अचल राज तुम्ह करहू॥**

× × × ×

**सुनु दसकंठ कहउँ पन रोपी । बिमुख राम त्राता नहिं कोपी॥**

× × × ×

**मोहमूल बहु सूल प्रद त्यागहु तम अभिमान।**
**भजहु राम रघुनायक कृपा सिंधु भगवान॥**

भगवान् श्रीरामको प्रभाव देखाएर धेरै कुरा सम्झाएपछि अध्यात्मरामायणमा पनि यही भनिएको छ—

**विसृज्य मौर्ख्यं हृदि शत्रुभावनां**
**भजस्व रामं शरणागतप्रियम्।**
**सीतां पुरस्कृत्य सपुत्रबान्धवो**
**रामं नमस्कृत्य विमुच्यसे भयात्॥**

(५। ४। २३)

'रावण! तिमी हृदयमा रहेको शत्रुभावनारूप मूर्खताको त्याग गरेर शरणागतप्रिय श्रीरामको भजन गर। श्रीसीताजीलाई अघि लगाएर आफ्ना पुत्र र बन्धु-बान्धवसहित (भगवान् श्रीरामको शरणमा पर) वहाँलाई नमस्कार गर। यस्तो गरेर तिमी भयबाट मुक्त हुनेछौ।'

यसप्रकार श्रीहनुमान्‌जीले रावणलाई उनको हितका धेरै कुराहरू बताउनुभयो, तर उनलाई ती कुराहरू धेरै नराम्रा लागे। उनी हनुमान्‌जीमाथि क्रोध गर्न लागे 'ए बाँदर! तिमी निर्भय झैं भई कसरी मेरो सामुन्ने बोलिरहेका छौ? तिमी बाँदरहरूमा नीच हौ। म अहिले तिमीलाई मार्नेछु।' यसरी उनले श्रीहनुमान्‌जीलाई धेरै नराम्रा कुराहरू भनेर राक्षसहरूलाई आदेश दिए कि 'यसलाई मार'। यो सुन्दा नै धेरैजसो राक्षसहरू श्रीहनुमान्‌जीलाई मार्नको लागि तत्पर भए। त्यसबेला विभीषणले रावणलाई सम्झाए। रामचरितमानसमा यसको यस्तो वर्णन आउँछ—

**नाइ सीस करि बिनय बहूता । नीति बिरोध न मारिअ दूता॥**

**आन दंड कछु करिअ गोसाँई। सबहीं कहा मंत्र भल भाई॥**

यो सुनेर रावणले भने—

**कपि कें ममता पूँछ पर सबहि कहउँ समुझाइ।**
**तेल बोरि पट बाँधि पुनि पावक देहु लगाइ॥**

**पूँछहीन बानर तहँ जाइहि। तब सठ निज नाथहि लइ आइहि॥**
**जिन्ह कै कीन्हिसि बहुत बड़ाई। देखउँ मैं तिन्ह कै प्रभुताई॥**

अध्यात्मरामायणमा लेखिएको छ—

यो सुनेर श्रीहनुमान्‌जीले मन-मनै सोच्नुभयो कि अब काम बन्यो। उता राक्षसहरूले रावणको आज्ञा पाएर तुरुन्त नै हनुमान्‌जीको पुच्छरमा धेरै वस्त्र घिउ र तेलमा भिजाएर बाँधिदिए। पुच्छरको अगाडिको भागमा थोरै आगो लगाइदिए र शहरमा घुमाएर अनि ढोल पिटेर मान्छेहरूलाई सुनाउनलागे कि 'यो चोर हो यही कारणले यसलाई यो दण्ड दिइएको छ।' केही टाढा गएपछि हनुमान्‌जीले आफ्नो शरीरलाई सानो पारेर तुरुन्त नै सबै बन्धनहरुबाट मुक्त भएर पर्वत आकार रूप धारण गर्नुभयो र समस्त लंका जलाइदिनुभयो।

**उत्प्लुत्योत्प्लुत्य सन्दीप्तपुच्छेन महता कपिः।**
**ददाह लङ्कामखिलां साट्टप्रासादतोरणाम्॥**
**हा तात पुत्र नाथेति क्रन्दमानाः समन्ततः।**
**व्याप्ताः प्रासादशिखरेऽप्यारूढा दैत्ययोषितः॥**

(५। ४। ४२-४३)

एउटा घरबाट अर्को घरमा हाम फाल्दै श्रीहनुमान्‌जीले आफ्नो जलिरहेको ठूलो पुच्छरले अटाली, घर र तोरणहरू सहित सबै लंकालाई जलाइदिनुभयो। त्यतिखेर हे पिता! हे पुत्र! हे स्वामी! —यसप्रकार कराउँदै राक्षसका स्त्रीहरू चारैतिर फिंजिइए र महलहरूको टुप्पामा पनि चढे।

रामचरितमानसमा लेखिएको छ—

**निबुकि चढ़ेउ कपि कनकअटारीं। भईं सभीत निसाचर नारीं॥**

× × × ×

**जारा नगरु निमिष एक माहीं। एक बिभीषन कर गृह नाहीं॥**

× × × ×

**उलटि पलटि लंका सब जारी। कूदि परा पुनि सिंधु मझारी॥**
**पूँछ बुझाइ खोइ श्रम धरि लघु रूप बहोरि।**
**जनकसुता कें आगें ठाढ़ भयउ कर जोरि॥**

यसप्रकार श्रीजानकीजीको नजिकै पुगेर श्रीहनुमान्‌जीले वहाँलाई प्रणाम गर्नुभयो र फर्किएर श्रीरामको नजिकै जानको लागि आज्ञा माँग्नु भयो। तब माता सीताले भन्नुभयो कि 'हनुमान्! तिमीलाई देखेर मैले आफ्नो दुःखलाई केही बिर्सिएकी थिएँ, अब तिमी पनि गइरहेका छौ भने भन, अब म भगवान् श्रीरामको कथा न सुनी कसरी बस्न सक्नेछु?' अध्यात्मरामायणमा त्यससमय श्रीहनुमान्‌जीका वचनहरू यसप्रकार छन्—

**यद्येवं देवि मे स्कन्धमारोह क्षणमात्रतः।**
**रामेण योजयिष्यामि मन्यसे यदि जानकि॥**

(५। ५। ६)

'देवि जानकी! यदि यस्तो कुरो हो र तपाईं स्वीकार गर्नुहुन्छ भने त मेरा काँधहरूमा चढ्नुहोस्, म एक क्षणमा नै तपाईंलाई श्रीरामसंग भेट गराइदिनेछु।'

वाल्मीकीय रामायणमा अरु पनि विस्तृत वर्णन छ। त्यहाँ हनुमान्‌जीको यस प्रस्तावमा श्रीजनकनन्दिनी भन्नुहुन्छ—'हनुमान्! म स्वेच्छाले कुनै पुरुषको कसरी स्पर्श गर्न सक्छु र? श्रीरामज़ी

बाँदरहरूको साथ यहाँ आएर रावणलाई युद्धमा मारेर मलाई लग्नुहुनेछ भने यसैमा वहाँको शोभा छ। यसकारण तिमी जाऊ, म कुनै प्रकारले केही दिन प्राण धारण गर्नेछु।' यसपछि रामचरितमानसमा हनुमान्जीका वचन यस प्रकार छन्—

**मातु मोहि दीजे कछु चीन्हा। जैसें रघुनायक मोहि दीन्हा॥**

तब सीताले आफ्नो चूड़ामणि हनुमान्लाई दिनुभयो, त्यो पाएर हनुमान्जी बड़ा प्रसन्न हुनुभयो। त्यसपछि सीताले त्यो सबै प्रसङ्ग पनि हनुमान्जीलाई सुनाउनुभयो, जसरी जयन्तले कागको रूप धारण गरेर चुच्चोले हिर्काएको थियो र भगवान् श्रीरामले त्यसमाथि क्रोध गर्नु भएको थियो।

यसप्रकार हनुमान्जी सीताको सन्देश लिएर वहाँलाई प्रणाम गरेर त्यहाँबाट फर्किनुभयो। वहाँको मनमा श्रीरामचन्द्रजीका दर्शनहरूको ठूलो उत्सुकता भइहेको थियो। यसकारण वहाँ ठूलो वेगले पहाड़मा चढिरहनुभएको थियो। त्यसबेला वहाँका चरणहरूको प्रहारले पर्वतका शिलाहरू चूर–चूर (धूलो) भइरहेका थिए। सबैभन्दा अग्लो शिखरमा चढेर श्रीहनुमान्जीले आफ्नो शरीर बढाउनुभयो र समुद्रको पारि हुँदै उत्तरी किनारमा जाने विचार गर्नुभयो। पर्वतबाट उफ्रिएर वहाँ वायु झैं आकाशमा पुग्नुभयो। त्यो पर्वत हनुमान्जीका गोड़ाहरूले दबाइएको कारणले ठूलो आवाज गर्दै आफूमाथि रहने वृक्षहरू र प्राणीहरूसहित भुईंमा धसियो।

श्रीहनुमान्जी आकाशमार्गबाट अघि बढ्दै उत्तर–तटको नजिकै पुगेर बड़ा जोरले गर्जिनुभयो, जसबाट सबै दिशाहरू गुञ्जिए। त्यो सुनेर सबै बाँदरहरू हनुमान्जीसंग भेट गर्न उत्साहित भए। जाम्बवान्को हृदयमा बड़ा प्रसन्नता भयो, उनी सबैसंग भन्न थाले—

हनुमान्‌जी सब प्रकारले आफ्नो कार्य सिद्धि गरेर आउँदै हुनुहुन्छ, नत्र भने यहाँको यस्तो गर्जना हुन सक्दैनथ्यो, यत्तिकैमा नै अत्यन्त वेगशाली पर्वताकार श्रीहनुमान्‌जी महेन्द्र पर्वतको शिखरमा उफ्रिनुभयो। त्यतिखेर सबै बाँदर बड़ा प्रसन्न भएर महात्मा हनुमान्‌जीलाई चारैतिरबाट घेरेर उभिए। हनुमान्‌जीले जाम्बवान् आदि वृद्धजनहरूलाई प्रणाम गर्नुभयो र अन्य बाँदरहरूसंग प्रेमपूर्वक भेट गर्नुभयो। संक्षेपमा नै सीताजीसंगको भेट र लंका जलाएको सारा प्रसंग ती व्यक्तिहरूलाई भनेर सुनाउनुभयो। वाल्मीकीय रामायणमा यस प्रसंगको पनि बड़ो विस्तारले वर्णन भएको छ।

सम्पूर्ण वानरहरूसहित श्रीहनुमान्‌जी त्यहाँबाट हिंडेर किष्किन्धा पुग्नुभयो। त्यहाँ सुग्रीवको मधुवनमा आनन्दपूर्वक सबै बाँदरहरूले अंगदको आज्ञा लिएर मधुपान गरे। रक्षकहरूले आएर वानरराज सुग्रीवकहाँ यसको पोल लगाए, त्यसवेला लक्ष्मणले सोद्धा सुग्रीवले भने—'भाइ लक्ष्मण! यी सबै कुराहरूबाट मलाई अलिकति पनि सन्देह रहेन कि हनुमान्‌ले नै भगवती सीताको दर्शन गरेका छन्। वानरश्रेष्ठ हनुमान्‌मा कार्य सिद्ध गर्ने शक्ति, बुद्धि, उद्योग, पराक्रम र शास्त्रीय ज्ञान-सबै कुरा छन्।' यसको अतिरिक्त वहाँले अरु पनि धेरै यस्ता कुरा भन्नुभयो, जसबाट श्रीहनुमान्‌को प्रभाव स्पष्ट व्यक्त हुन्छ। फेरि सुग्रीवले तुरुन्त नै सबै वानरहरूको साथमा हनुमान्‌जीलाई आफूनिर बोलाए र उनी उनीहरूको कुशल-समाचार जानेर निकै प्रसन्न भए। सबै मिलेर श्रीरामजीको नजिकै आए। त्यसबेला श्रीरामचरितमानसमा हनुमान्‌जीका महत्त्वको वर्णन गर्दै जाम्बवान्‌ले भनेका छन्-

**नाथ पवनसुत कीन्हि जो करनी। सहसहुँ मुख न जाइ सो बरनी॥**

यसपछि श्रीहनुमान्जीले भगवान्का चरणहरूमा प्रणाम गर्नुभयो र श्रीरामले हनुमान्लाई हृदयमा लगाउनुभयो। तब हनुमान्जीले भन्नुभयो–देवी सीता पातिव्रत्यको कठोर नियमहरूको पालन गर्दै शरीरले कुशल हुनुहुन्छ। म वहाँको दर्शन गरेर आएको हुँ। हनुमान्जीका यी अमृतसमान वचन सुनेर श्रीराम र लक्ष्मणलाई बड़ा हर्ष भयो। भगवान्को मनको भाव जानेर हनुमान्जीले वहाँलाई जसरी श्रीजानकीजीको दर्शन भएको थियो, त्यो सम्पूर्ण प्रसंग सुनाएर वहाँले दिएको चूडामणि भगवान्लाई अर्पण गर्नुभयो। त्यो मणिलाई लिएर भगवान् श्रीरामले हृदयमा लगाउनुभयो र त्यसलाई देखेर विरहमा व्याकुल हुन लाग्नु भयो। रामचरितमानसमा सीताको सन्देश दिंदै हनुमान्जीले सीताजीको प्रेमको कुरा यसप्रकार भन्नुभएको छ—

**नाम पाहरू दिवस निसि ध्यान तुम्हार कपाट।**
**लोचन निज पद जंत्रित जाहिं प्रान केहिं बाट॥**

अन्तमा यहाँसम्म भनिदिनुभयो—

**सीता कै अति बिपति बिसाला। बिनहिं कहें भलि दीनदयाला॥**

अध्यात्मरामायणमा यसको वर्णन यसप्रकार छ। सीताको समाचार सुनाउँदै हनुमान्जी भन्नुहुन्छ-

**अभिज्ञां देहि मे देवि यथा मां विश्वसेद्विभुः॥**
**इत्युक्ता सा शिरोरत्नं चूडापाशे स्थितं प्रियम्।**
**दत्त्वा काकेन यद्वृत्तं चित्रकूटगिरौ पुरा॥**
**तदप्याहाश्रुपूर्णाक्षी कुशलं ब्रूहि राघवम्।**
**लक्ष्मणं ब्रूहि मे किञ्चिद् दुरुक्तं भाषितं पुरा॥**
**तत्क्षमस्वाज्ञभावेन भाषितं कुलनन्दन।**
**तारयेन्मां यथा रामस्तथा कुरु कृपान्वितः॥**

× × × ×

**ततः प्रस्थापितो राम त्वत्समीपमिहागतः।**
**तदागमनवेलायामशोकवनिकां प्रियाम्॥**
**उत्पाट्य राक्षसांस्तत्र बहून्हत्वा क्षणादहम्।**
**रावणस्य सुतं हत्वा रावणेनाभिभाष्य च॥**
**लङ्कामशेषतो दग्ध्वा पुनरप्यागमं क्षणात्।**

(५। ५। ५२—५५, ५७—५९)

'आउँदाखेरि मैले सीतासंग भनें कि-'देवि! मलाई कुनै यस्तो चिनारी दिनुहोस्, जसबाट श्रीरघुनाथजी मेरो विश्वास गर्नुहोला।' मैंले यसप्रकार भन्दा वहाँले अफ्ना केशपाशमा रहेको आफ्नो प्यारो चूड़ामणि मलाई दिनुभयो। पहिले चित्रकूटमा कागको साथमा जो घटना भएको थियो, त्यो सबै सुनाउनुभयो र आँखाहरूमा आँशू भरेर भन्नुभयो कि श्रीरघुनाथजीसंग मेरो कुशल समाचार भन्नू र लक्ष्मणसंग भन्नू—'कुलनन्दन! मैंले पहिले तपाईंसंग जुन कुनै कठोर वचन भनेकी थिएँ, ती अज्ञानवश भनिएका वचनहरूको लागि मलाई क्षमा गर्नुहोला तथा जसरी श्रीरघुनाथजी कृपा गरेर मेरो उद्धार गर्नुहुनेछ, त्यस्तो चेष्टा गर्नू।' वहाँको यस्तो सन्देश लिएर वहाँले पठाएको म तपाईंकहाँ आइपुगें। आउँदाखेरि मैंले रावणको प्यारो अशोकवाटिका ध्वस्त गरिदिएँ तथा एक-क्षणमा नै धेरै राक्षसहरूलाई मारिदिएँ। रावणको पुत्र अक्षयकुमारलाई पनि मारें र रावणसंग वार्तालाप गरेर लंकालाई सबैतिरबाट जलाएर फेरि तुरुन्त नै यहाँ आएँ।'

श्रीहनुमान्जीबाट सीताको सबै समाचार सुनेर श्रीराम बड़ा प्रसन्न हुनुभयो र भन्न लाग्नुभयो-

**हनूमंस्ते कृतं कार्यं देवैरपि सुदुष्करम्।**
**उपकारं न पश्यामि तव प्रत्युपकारिणः॥**

**इदानीं ते प्रयच्छामि सर्वस्वं मम मारुते।**
**इत्यालिङ्ग्य समाकृष्य गाढं वानरपुङ्गवम्॥**
**सार्द्रनेत्रो रघुश्रेष्ठः परां प्रीतिमवाप सः।**

(५। ५। ६०—६२)

'वायुनन्दन हनुमान्! तिमीले जो कार्य गरेका छौ, त्यो देवताहरूबाट पनि हुन कठिन छ। म यसको बदलामा तिम्रो के उपकार गरूँ? यो जान्दिनँ। म अहिले तिमीलाई आफ्नो सर्वस्व दिन्छु, यसो भनेर रघुश्रेष्ठ श्रीरामले वानरश्रेष्ठ हनुमान्लाई तानेर गाढ़ आलिङ्गन गर्नुभयो। वहाँका नेत्रहरूमा प्रेमाश्रु भरिएर आए र वहाँ प्रेममा मग्न हुनुभयो।'

श्रीहनुमान्जीका बल, पराक्रम, कार्यकौशल, साहस र पवित्र प्रेमको यस प्रकरणमा सबै रामायणहरूमा निकै नै सुन्दर वर्णन पाइन्छ। वाल्मीकीय रामायणको युद्धकाण्डमा पनि श्रीहनुमान्जीको प्रभावको बड़ा सुन्दर वर्णन छ, यहाँ त्यसको दिग्दर्शनमात्र गराइन्छ।

एक दिन भयानक युद्धमा रावणका प्रधान-प्रधान सेनापति मारिए, राक्षसहरू हताश भए। पुत्र र भाइहरू मारिएको समाचार सुनेर रावणलाई ठूलो चिन्ता भयो। यो देखेर मेघनादलाई ठूलो क्रोध आयो। ऊ पिताको सामुन्ने आफ्नो बल-पौरुषको वर्णन गरेर उनलाई धैर्य प्रदान गरेर युद्ध गर्नको लागि युद्धक्षेत्रमा आयो। त्यहाँ पुगेर उसले बड़ो घमासान युद्ध गर्‍यो तथा धेरैजसो बाँदरहरूलाई प्राणहीन गरिदियो। [redacted]

पीडाको वर्णन गर्दै भन्नलागे कि 'मैंले तिमीलाई केवल आवाजले नै चिन्न सकेको हुँ, हेर्ने शक्ति ममा छैन। तिमी सबभन्दा पहिले मलाई यो भन कि वानरश्रेष्ठ हनुमान्का प्राण बचेका छन् कि छैनन्?' यसमा विभीषणले भने 'ऋक्षराज! तपाईंले श्रीराम र लक्ष्मणलाई छोडेर पहिले केवल हनुमान्जीको कुशल कसरी सोध्नुभयो? राजा सुग्रीव, अंगद र श्रीराम तथा लक्ष्मणमाथि तपाईंले त्यति पनि स्नेह प्रकट गर्नुभएन जति गाढा प्रेम तपाईंको पवनकुमार प्रति लक्षित भइरहेको छ। यसको के कारण हो?'

तब जाम्बवान्ले भने—

**श्रृणु नैर्ऋतशार्दूल यस्मात्पृच्छामि मारुतिम्॥**
**अस्मिञ्जीवति वीरे तु हतमप्यहतं बलम्।**
**हनूमत्युज्झितप्राणे जीवन्तोऽपि मृता वयम्॥**

(६।७४।२१-२२)

'राक्षसराज! सुन, म हनुमान्जीको लागि यसकारण सोधिरहेको छु कि यदि यतिखेर वीरवर हनुमान् जीवित होलान् त यो मरेको सेना पनि बाँच्न सक्छ र यदि उनका प्राण निस्किएर गएको भए त हामी बाँचेकै भए पनि मृतकतुल्य नै छौं।

यसपछि श्रीहनुमान्जीले उनलाई प्रणाम गर्नुभयो। हनुमान्को आवाज सुनेर जाम्बवान्मा नयाँ जीवन आयो। उनले हनुमान्लाई संजीवनी औषधिको लक्षण बताएर हिमालयमा पठाए। उनको आज्ञानुसार हनुमान्जीले त्यहाँ गएर औषधिको खोजी गर्नुभयो, तर औषधि लुप्त भएको कारणले भेटिएन। तब वहाँ त्यस पर्वतलाई नै उखेलेर लिएर आउनुभयो र सम्पूर्ण वानर-सेनालाई फेरि प्राणदान दिनुभयो तथा श्रीराम र लक्ष्मण पनि स्वस्थ हुनुभयो। इत्यादि। जब रावणद्वारा छोडिएको अमोघ शक्ति श्रीलक्ष्मणजीले विभीषणको रक्षाको लागि

आफूमथि लिनुभयो र मानुषी लीला गर्नको लागि वहाँ मूर्च्छित हुनुभयो, तब रावण श्रीलक्ष्मणकहाँ गएर वहाँलाई उठाउन लागे तर समस्त जगत्को आधारभूत लक्ष्मणलाई उनी कसरी उठाउन सक्थे ? अध्यात्म-रामायणमा लेखिएको छ—

**ग्रहीतुकामं सौमित्रिं रावणं वीक्ष्य मारुतिः ॥**
**आजघानोरसि क्रुद्धो वज्रकल्पेन मुष्टिना।**
**तेन मुष्टिप्रहारेण जानुभ्यामपतद्भुवि ॥**

(६। ६। १२-१३)

'त्यसबेला हनुमान्जीले देख्नुभयो कि रावण लक्ष्मणजीलाई उठाएर लैजान चाहन्छन् त वहाँ कुपित हुनुभयो र आफ्नो वज्रसमान मुट्ठीले उनको छातीमा प्रहार गर्नुभयो। त्यस मुष्टिप्रहारले रावण घुँडाहरूको बलले पृथ्वीमा पछारिए।' यता हनुमान्जीले लक्ष्मणलाई उठाएर भगवान् श्रीरामको नजिकै लैजानुभयो।

यतिखेर पनि श्रीहनुमान्जी द्रोणपर्वतमा औषधि ल्याउनको लागि जानुभयो र त्यसैप्रकार पर्वतलाई उखालेर ल्याउनुभएको थियो। यस प्रसंगको वर्णन गर्दै सबै रामायणहरूमा श्रीहनुमान्जीको अद्भुत बल, पौरुष, बुद्धि, कौशल र प्रभाव देखाइएको छ।

रामचरितमानसमा मेघनादको शक्तिबाट श्रीलक्ष्मणजी मूर्च्छित भएको कुरा आउँछ। त्यहाँ हनुमान्जीले जाम्बवान्को भनाइले पहिले घरसहित सुषेणलाई उठाएर ल्याउनुभएको छ, फेरि सुषेणको भनाइले संजीवनी ल्याउन जानुभयो र पर्वतलाई उखालेर ल्याउनुभएको छ। श्रीहनुमान्जीको सेवाभाव निकै नै विचित्र थियो। यहाँको सेवाको कारणले भगवान् श्रीरामले आफूलाई ऋणी मान्नुभयो। माता सीताले पनि त्यही कुरा भन्नुभयो। लक्ष्मण र समस्त बाँदरहरूका प्राण बचे। यस प्रकार विरह-व्याकुल भरतलाई श्रीरामचन्द्रजीको आगमनको सूचना दिएर वहाँको प्राण बचाउने काम पनि हनुमान्जीले नै

गर्नुभयो। रामचरितमानसमा वर्णन छ—

**राम बिरह सागर महँ भरत मगन मन होत।**
**बिप्र रूप धरि पवनसुत आइ गयउ जनु पोत॥**

त्यहाँ श्रीहनुमान्‌जी भरतको प्रेमदशा देखेर भन्नुहुन्छ—

**जासु बिरहँ सोचहु दिन राती। रटहु निरंतर गुन गन पाँती॥**
**रघुकुल तिलक सुजन सुखदाता। आयउ कुसल देव मुनि त्राता॥**

यसप्रकार श्रीरामको आगमनको कुशल-समाचार सुन्दा नै श्रीभरतजीमा जीवनको संचार भएर आयो। वहाँले सोद्धा आफ्नो परिचय दिंदै हनुमान्‌जी भन्नुहुन्छ—

**मारुत सुत मैं कपि हनुमाना। नामु मोर सुनु कृपानिधाना॥**
**दीनबंधु रघुपति कर किंकर। × × × ×॥**

कति विनयभाव छ। यो कुरा सुन्दा नै भरतजीले उठेर बड़ा हर्ष र आदरको साथ वहाँसंग भेट गर्नुभयो। आफ्नो आनन्दको वर्णन गर्दै अन्तमा यहाँसम्म भनिदिनुभयो—

**नाहिन तात उरिन मैं तोही। अब प्रभु चरित सुनावहु मोही॥**

यसप्रकार श्रीहनुमान्‌जीले सबैको सेवा गर्नुभयो, जसको कारणले सबैले आफूलाई वहाँको ऋणी माने। भगवान् श्रीराम राज्यसिंहासनमा आरूढ भैसकेपछि पनि वहाँ सधैं भगवान्‌को सेवामा नै रहनुभयो। अन्य सबै बाँदर र राक्षस आफ्ना-आफ्ना घर फर्किए, तर हनुमान्‌जी जानुभएन। भगवान् श्रीरामचन्द्रजीले जब अश्वमेधयज्ञ गर्नुभएको थियो, त्यससमय श्रीहनुमान्‌जी पनि घोड़ाको रक्षाको लागि शत्रुघ्नको साथमा जानुभएको थियो।

पद्मपुराणको पातालखण्डमा रामाश्वमेधयज्ञको कथाको विस्तृत वर्णन छ। त्यहाँ पनि श्रीहनुमान्‌जीको महत्त्वको बड़ो सुन्दर वर्णन आउँछ। जब रामाश्वमेधको घोड़ा अनेक देशहरूमा भ्रमण गर्दै राजा

सुबाहुको राजधानी चक्रांका नगरीको नजिकै पुग्यो, तब राजाको पुत्र दमनले त्यस घोड़ालाई समात्यो। त्यस राजाका अरू पनि थुप्रै छोरा र भाइहरू निकै शूरवीर थिए तथा ऊ स्वयं पनि निकै नै वीर योद्धा थियो। त्यहाँ दुवैतिरबाट निकै भयानक युद्ध भयो। अन्तमा राजा सुबाहुको साथमा श्रीहनुमान्जीको भयानक युद्ध भयो। त्यसमा कपिवर हनुमान्जीले बार-बार राजालाई व्यथित गर्नुभयो, उसको रथलाई घोड़ाहरूसहित चूर्ण पारिदिनुभयो र निकै जोरले राजाको छातीमा एक लात्ती हिर्काउनुभयो। लात्ती लाग्दा नै राजा सुबाहु मूर्च्छित भएर पृथ्वीमा पछारियो। श्रीहनुमान्जीको पाउको प्रहारले उसको मोह नष्ट भयो। उसको मनमा श्रीरामको भक्ति प्रकट भयो। ऊ सपनामा देख्दछ—

**रामचन्द्रस्त्वयोध्यायां सरयूतीरमण्डपे।**
**ब्राह्मणैर्याज्ञिकश्रेष्ठैर्बहुभिः परिवारितः॥**
**तत्र ब्रह्मादयो देवास्तत्र ब्रह्माण्डकोटयः।**
**कृतप्राञ्जलयस्तं वै स्तुवन्ति स्तुतिभिर्मुहुः॥**

(२८। ४९-५०)

'अयोध्यापुरीमा सरयू नदीको तीरमा श्रीरामचन्द्रजी यज्ञमण्डपको भित्र विराजमान हुनुहुन्छ। यज्ञ गराउनेवालाहरूमा श्रेष्ठ अनेकौं ब्राह्मणहरू वहाँलाई घेरेर बसेका छन्। करोड़ौं ब्रह्माण्डहरूका ब्रह्मादि देवता हात जोडेर उभिनुभएको छ र बारम्बार श्रीरामको स्तुति गरिरहनुभएको छ'-इत्यादि।

यस प्रकारको अद्भुत सपना देख्दा नै राजालाई श्रीरामतत्त्वको ज्ञान भयो। ऊ तुरुन्त नै मूर्च्छाबाट उठ्यो र शत्रुघ्नका चरणहरूतिर पैदल नै हिंड्यो। युद्ध बन्द गर्ने घोषणा गर्दै उसले आफ्ना पुत्र र बन्धु-बान्धवहरूसंग भन्यो—

**एष रामः परं ब्रह्म कार्यकारणतः परम्।**
**चराचरजगत्स्वामी न मानुषवपुर्धरः॥**
**एतद्धि ब्रह्मविज्ञानमधुना ज्ञातवानहम्।**

(२८। ५९-६०)

'यहाँ श्रीरामचन्द्रजी कार्य र कारणभन्दा पर रहने साक्षात् परब्रह्म हुनुहुन्छ। यहाँ चराचर जगत्का स्वामी हुनुहुन्छ। मानव-शरीर धारण गरेर पनि यहाँ वास्तवमा मनुष्य हुनुहुन्न। यहाँलाई यसरूपमा जान्नु नै ब्रह्मज्ञान हो। यस तत्त्वलाई मैंले अब सम्झिसकेको छु।' यति भनेर उसले आफ्ना पुत्रहरूसंग असिताङ्गमुनिद्वारा आफूलाई शाप प्राप्त भएको सबै कथा भनेर सुनायो र घोडालाई लिएर आफ्ना बन्धु-बान्धव सहित शत्रुघ्नजीको शरणमा गयो। त्यहाँ उसले कृतज्ञता प्रकट गर्दै श्रीहनुमान्जीको विषयमा भनेको छ-

**क्वासौ हनूमान् रामस्य चरणाम्भोजषट्पदः।**
**यत्प्रसादादहं प्राप्स्ये राजराजस्य दर्शनम्॥**
**साधूनां सङ्गमे किं किं प्राप्यते न महीतले।**
**यत्प्रसादादहं मूढो ब्रह्मशापमतीतरम्॥**

(२९। ३२-३३)

'श्रीरामका चरण-कमलहरूका भ्रमर भएका ती हनुमान् कहाँ छन्? उनकै कृपाले म राजाधिराज श्रीरामचन्द्रजीको दर्शन गर्नेछु। साधुको संग मिले छँदामा यस पृथ्वीमा मनुष्यलाई के के मिल्दैन र? म महामूर्ख थिएँ, तर सत्संगको प्रभावले आज घोर ब्रह्मशापबाट मेरो उद्धार हुनगयो।'

त्यसपछि अनेक देशहरूलाई जित्दै (विजय प्राप्त गर्दै) जब यज्ञको घोड़ा राजा सत्यवान्को नगरबाट अगाडि गइरहेको थियो, त्यतिखेर विद्युन्माली नामको राक्षसले बाटामा त्यस घोडालाई चोर्‍यो

र आफ्ना सैनिक राक्षसहरू सहित विमानमा बसेर आकाशमा गएर प्रकट भयो। त्यहाँ त्यस राक्षससंग शत्रुघ्नजीका सेनाको बडो भयंकर युद्ध भयो। त्यसबेला श्रीहनुमान्जीले त्यस राक्षससंग युद्धमा आफ्नो पराक्रम देखाउने जो प्रतिज्ञा गर्नुभयो, त्यसबाट यस कुराको पत्तो लाग्दछ कि श्रीहनुमान्जी भगवान् राममा कति भरोसा राख्नुहुन्थ्यो। वहाँ भगवान् श्रीरामको कृपाको भरोसामा आफ्नो अद्‌भुत शक्ति मान्नुहुन्थ्यो। वहाँले पहिले जस्तो प्रतिज्ञा गर्नुभयो, त्यसैगरी युद्धमा पनि आफ्नो अद्‌भुत पराक्रम देखाउनुभयो। वहाँ आकाशमा गएर विमानमा शत्रुपक्षका महान् दैत्यहरूलाई नङ्हरूले विदीर्ण गरेर मृत्युको घाटमा उतार्न थाल्नुभयो। कसैलाई पुच्छरले हिर्काउनुभयो, कसैलाई गोडाले कुल्चिनुभयो र कसैलाई हातहरूले चिर्नुभयो। जब क्रोधमा भरिएर राक्षसराज विद्युन्मालीले अत्यन्त तेजस्वी भयानक त्रिशूलको प्रहार गर्‍यो, तब त्यसलाई हनुमान्जीले आफ्नो मुखमा समात्नुभयो र दाँतहरूले चबाएर चूर–चूर गरिदिनुभयो तथा त्यस दैत्यराजलाई थप्पडहरूको प्रहारले व्याकुल पारिदिनुभयो। यसपछि श्रीशत्रुघ्नजीले विद्युन्माली र वज्रदंष्ट्रलाई पिटेर खसाल्नुभयो। बचेका राक्षस वहाँको शरणमा आइपुगे।

त्यहाँबाट गएर वहाँले आरण्यक मुनिसंग भेट गर्नुभयो। यसपछि त्यो घोडा देवपुरको नजिकै पुग्यो, त्यहाँ राजा वीरमणि र उसका पुत्रहरूसंग शत्रुघ्नको सेनाको बड़ा भयङ्कर युद्ध भयो। राजा वीरमणि भगवान् शंकरको परम भक्त थियो। यसकारण त्यहाँ उसको सहायताको लागि स्वयं भगवान् शंकर पनि आफ्ना गणहरूसहित रणक्षेत्रमा युद्ध गर्नको लागि जानुभएको थियो। त्यस भयानक युद्धमा जब राजकुमार पुष्कल मारिए र शत्रुघ्न पनि मूर्च्छित हुनुभयो, त्यसबेला श्रीहनुमान्जीले अद्‌भुत पराक्रम देखाउनुभयो। साक्षात् भगवान् शङ्करसंग उनीहरूले

घोर युद्ध गरे तथा सारथि र घोडाहरूसहित शिवजीको रथलाई चूर-चूर गरिदिए। जब भगवान् शिवजी नन्दीमा सवार भएर युद्ध गर्न लाग्नुभयो, तब श्रीहनुमान्जीले शालवृक्षको प्रहार गरेर शिवजीलाई व्याकुल बनाइदिनुभयो। अब भगवान् शंकरले वहाँमाथि आफ्नो त्रिशूल चलाउनुभयो। हनुमान्जीले त्यसलाई समात्नुभयो र क्षणभरमा भाँचेर टुक्रा-टुक्रा पार्नुभयो। अनेक प्रकारका प्रहारहरूले शिवजीलाई व्यथित गरेर अन्तमा भूतनाथ भगवान् शिवलाई आफ्नो पुच्छरमा बेर्नुभयो। यो देखेर नन्दी भयभीत भए। यसप्रकार जब हनुमान्जीले शिवजीलाई अत्यन्त व्याकुल पारिदिनुभयो, तब हनुमान्जीको युद्धबाट प्रसन्न भएर शंकर भन्नलाग्नुभयो—'श्रीरघुनाथजीका सेवक हनुमान्! तिमी धन्य छौ। आज तिमीले महान् पराक्रम गरेर देखायौ। यसबाट मलाई बड़ा सन्तोष भयो। यसकारण तिमी मबाट वर माँग।'

यसमा हनुमान्जीले हाँसेर निर्भय वाणीले भन्नुभयो—'महेश्वर! रघुनाथजीको कृपाले मलाई सबैकुरा प्राप्त छ, तैपनि तपाईंको प्रसन्नताको लागि म यही वर माँग्छु कि जबसम्म म द्रोण-पर्वतमा गएर औषधि लिएर आऊँ, तबसम्म तपाईं आफ्ना गणहरूसहित हाम्रा पक्षका मरेका वीरहरूका शरीरहरूको रक्षा गर्दै रहनुहोस्। उनीहरूलाई कसैले टुक्रा-टुक्रा गर्न न सकोस्।' शिवजीले वहाँको माँग स्वीकार गर्नुभयो। त्यसपछि हनुमान्जीले जसरी लंकापुरीमा संजीवनी बुटी ल्याउनुभएको थियो, त्यसैगरी तुरून्त नै संजीवनी बुटी ल्याउनुभयो। पहिले राजकुमार पुष्कललाई जीवित पार्नुभयो, त्यसपछि शत्रुघ्नको मूर्च्छा हटाउनुभयो र सम्पूर्ण बाँदरहरूलाई जीवन दान दिनुभयो। यसप्रकार त्यस भयानक युद्धमा श्रीहनुमान्जीको नै पराक्रमबाट सबैको प्राण बच्यो। अन्तमा त्यहाँ भगवान् श्रीराम स्वयं आउनुभयो। भगवान् शिवजीले राजा वीरमणिलाई सम्झाएर श्रीरामको भक्त बनाइदिनुभयो।

यसपछि त्यो घोड़ा अनेक देश–देशान्तरहरूमा घुम्दै राजा सुरथबाट रक्षित कुण्डलनगरको नजिकै पुग्यो। राजा सुरथ भगवान् रामको परम भक्त थियो। उसले भगवान् श्रीरामको दर्शनको लागि वहाँका घोडाहरूलाई समात्यो। त्यहाँ राजा सुरथसंग शत्रुघ्नको निकै नै भयंकर युद्ध भयो। त्यस युद्धमा जब राजा सुरथको पुत्र चम्पक राजकुमार पुष्कललाई बाँधेर नगरमा लैजानलाग्यो, त्यसबेला शत्रुघ्नको प्रेरणाले श्रीहनुमान्जी त्यहाँ जानुभयो। जाँदा नै उनीहरूले रथबाट चम्पकलाई उठाए र उनीहरू उसलाई लिएर आकाशमा गए। त्यो आकाशमा नै हनुमान्जीसंग बाहुयुद्ध गर्नथाल्यो। राजकुमार चम्पकको अद्भुत पराक्रम देखेर हाँस्दै–हाँस्दै हनुमान्जीले उसको गोड़ा समात्नुभयो र उसलाई सयपल्ट घुमाएर हात्तीको पीठ्यूँमा पछार्नुभयो, राजकुमार लड्दा नै मूर्च्छित भइहाल्यो।'

आफ्नो छोरालाई मूर्च्छित भएको देखेर राजा सुरथ स्वयं हनुमान्जीसंग युद्ध गर्नको लागि आयो। उसले हनुमान्जीका बल र पराक्रमको तथा रामभक्तिको साँचो हृदयले प्रशंसा गर्‍यो र साथै यो प्रतिज्ञा पनि गर्‍यो कि 'म तिमीलाई बाँधेर आफ्नो नगरमा लैजाने छु।' उसको कुराको उत्तर दिंदै श्रीहनुमान्जीले भन्नुभयो कि 'राजन्! तपाईं श्रीरघुनाथजीका चरणहरूको चिन्तन गर्नेवाला हुनुहुन्छ र म पनि वहाँकै सेवक हूँ। यदि तपाईं मलाई बाँध्नुहुन्छ भने मेरा स्वामीले मलाई बलपूर्वक छुटाउनुहुन्छ। वीर! तपाईं आफ्नो प्रतिज्ञा पूरा गर्नुहोस्। जो श्रीरामचन्द्रजीको स्मरण गर्दछन्, उनीहरूलाई कहिल्यै दुःख हुँदैन।'

यसप्रकार कुराकानी भएपछि राजा सुरथसंग हनुमान्जीको भयंकर युद्ध भयो। हनुमान्जीले त्यस युद्धमा राजा सुरथका एक–एक गरेर उनन्चास रथहरू भाँचिदिनुभयो। राजाको सम्पूर्ण सेना व्याकुल भयो र स्वयं राजालाई पनि ठूलो आश्चर्य भयो। राजाले श्रीहनुमान्जीको

बलको धेरै धेरै प्रशंसा गऱ्यो। राजाले पाशुपतास्त्रले हनुमान्जीलाई बाँध्ने चेष्टा गऱ्यो। एकपटक मान्छेहरूले सम्झे कि हनुमान् बाँधिनुभयो। तर श्रीहनुमान्ले आफ्नो मनमा भगवान् श्रीरामको स्मरण गरेर क्षणमात्रमा त्यस शस्त्रको बन्धनलाई चुँडाउनुभयो। राजाले ब्रह्मास्त्र चलायो त त्यसलाई पनि श्रीहनुमान्जीले निल्नुभयो। अन्तमा भगवान् रामको स्मरण गरेर श्रीरामास्त्रलाई आफ्नो धनुषमा चढायो र त्यसको प्रयोग गरेर श्रीहनुमान्जीसंग भन्यो कि 'कपिश्रेष्ठ! अब तिमी बाँधियौ। हनुमान्जीले भन्नुभयो–राजन्! तिमीले मेरा स्वामी श्रीरामका नै अस्त्रले बाँधेका छौ, अर्को कुनै प्राकृत अस्त्रले होइन। यसकारण म उसको आदर गर्दछु। अब तिमी मलाई आफ्नो नगरमा लैजान सक्दछौ।

राजा सुरथसंग हनुमान्जीका जुन कुराकानीहरू भए, तिनीहरूमा अद्भुत प्रेम भरिएको छ। श्रीहनुमान्जीलाई कसले बाँध्न सक्छ र? वहाँ त स्वयं आफ्नो इच्छाले नै भगवान्का परम भक्त सुरथको प्रतिज्ञा सत्य गर्नकोलागि र आफ्ना स्वामीका अस्त्रको सम्मान गर्नको लागि बाँधिनुभयो।

यसपछि त्यहाँ श्रीहनुमान्जीको आह्वानमा स्वयं भगवान् श्रीरामचन्द्रजी पाल्नुभयो र वहाँले राजा सुरथलाई दर्शन दिएर उसलाई कृतार्थ गर्नुभयो। यसप्रकार पद्मपुराणको पातालखण्डमा श्रीहनुमान्जीको महत्त्वको निकै नै सुन्दर वर्णन छ। यहाँ त्यो निकै नै संक्षेपमा लेखिएको छ।

परमधाम जाने बेलामा भगवान् श्रीरामचन्द्रजी कपिवर श्रीहनुमान्जीलाई जगत्को कल्याण गर्नको लागि यहीं रहने आज्ञा दिएर जानुभयो। वाल्मीकीयरामायणमा श्रीरामजी परमधाम जाने बेलामा हनुमान्जीसंग भन्नुहुन्छ—

**मत्कथाः प्रचरिष्यन्ति यावल्लोके हरीश्वर॥**

**तावद् रमस्व सुप्रीतो मद्वाक्यमनुपालयन्।**

(उत्तर० १०८। ३३-३४)

'वानरश्रेष्ठ! संसारमा जबसम्म मेरा कथाहरूको प्रचार रहन्छ, तबसम्म तिमी पनि मेरो आज्ञाको पालन गर्दै प्रसन्नतापूर्वक घुम्दै गर।' महात्मा रामचन्द्रजीको कथनमा हनुमान्जीलाई बड़ा हर्ष भयो र वहाँले भन्नुभयो—

**यावत्तव कथा लोके विचरिष्यति पावनी॥**
**तावत्स्थास्यामि मेदिन्यां तवाज्ञामनुपालयन्।**

(उत्तर० १०८। ३५-३६)

'प्रभो! संसारमा जबसम्म तपाईंको पावन कथाको प्रचार हुनेछ, तबसम्म तपाईंको आदेशको पालन गर्दै म यस पृथ्वीमा नै रहनेछु।'

द्वापर युगमा श्रीहनुमान्जीले भीमसेन र अर्जुनलाई पनि दर्शन दिनु भएको थियो। कलियुगमा पनि वहाँ प्रकट भएका थुप्रै कथाहरू पाइन्छन्। वहाँका गुण, प्रभाव र माहात्म्यको बड़ो विस्तार छ। यहाँ धेरै नै संक्षेपमा त्यसको दिग्दर्शनमात्र गराइएको छ। यस लेखबाट श्रीहनुमान्जीका अतुलित गुणहरूको चिन्तन गरेर लाभ उठाउनुपर्दछ। वहाँलाई आदर्श बनाएर अखण्ड ब्रह्मचर्य, अटल भगवद्भक्ति, वीरता, धीरता, बल, पौरुष, विद्या, साहस र बुद्धिमानी आदि गुण धारण गर्ने चेष्टा गर्नुपर्दछ।



# श्रीराम-स्तुति

श्रीरामचन्द्र कृपालु भजु मन हरण भवभय दारुणं।
नवकंज-लोचन, कंज-मुख, कर-कंज पद कंजारुणं॥
कंदर्प अगणित अमित छबि, नवनील-नीरद सुंदरं।
पट पीत मानहु तड़ित रुचि शुचि नौमि जनक सुतावरं॥
भजु दीनबंधु दिनेश दानव-दैत्यवंश-निकंदनं।
रघुनंद आनँदकंद कोशलचंद दशरथ-नंदनं॥
सिर मुकुट कुंडल तिलक चारु उदारु अंग बिभूषणं।
आजानुभुज शर-चाप-धर, संग्राम-जित-खरदूषणं॥
इति वदति तुलसीदास शंकर-शेष-मुनि-मन-रंजनं।
मम हृदय-कंज निवास कुरु, कामादि खल-दल-गंजनं॥
मनु जाहिं राचेउ मिलिहि सो बरु सहज सुंदर साँवरो।
करुना निधान सुजान सीलु सनेहु जानत रावरो॥
एहि भाँति गौरि असीस सुनि सिय सहित हियँ हरषीं अली।
तुलसी भवानिहि पूजि पुनि पुनि मुदित मन मंदिर चली॥

*सो०— जानि गौरि अनुकूल सिय हिय हरषु न जाइ कहि।*
*मंजुल मंगल मूल बाम अंग फरकन लगे॥*

*॥ सियावर रामचन्द्रकी जय॥*

# श्रीरामावतार

भए प्रगट कृपाला दीनदयाला कौसल्या हितकारी।
हरषित महतारी मुनि मन हारी अद्भुत रूप बिचारी॥
लोचन अभिरामा तनु घनस्यामा निज आयुध भुज चारी।
भूषन बनमाला नयन बिसाला सोभासिंधु खरारी॥
कह दुइ कर जोरी अस्तुति तोरी केहि बिधि करौं अनंता।
माया गुन ग्यानातीत अमाना बेद पुरान भनंता॥
करुना सुखसागर सब गुन आगर जेहि गावहिं श्रुति संता।
सो मम हित लागी जन अनुरागी भयउ प्रगट श्रीकंता॥
ब्रह्मांड निकाया निर्मित माया रोम रोम प्रति बेद कहै।
मम उर सो बासी यह उपहासी सुनत धीर मति थिर न रहै॥
उपजा जब ग्याना प्रभु मुसुकाना चरित बहुत बिधि कीन्ह चहै।
कहि कथा सुहाई मातु बुझाई जेहि प्रकार सुत प्रेम लहै॥
माता पुनि बोली सो मति डोली तजहु तात यह रूपा।
कीजै सिसुलीला अति प्रियसीला यह सुख परम अनूपा॥
सुनि बचन सुजाना रोदन ठाना होइ बालक सुरभूपा।
यह चरित जे गावहिं हरिपद पावहिं ते न परहिं भवकूपा॥

# श्रीशिव-स्तुति

नमामीशमीशान निर्वाणरूपं। विभुं व्यापकं ब्रह्म वेदस्वरूपं॥
निजं निर्गुणं निर्विकल्पं निरीहं। चिदाकाशमाकाशवासं भजेऽहं॥ १॥
निराकारमोंकारमूलं तुरीयं। गिरा ग्यान गोतीतमीशं गिरीशं॥
करालं महाकाल कालं कृपालं। गुणागार संसारपारं नतोऽहं॥ २॥
तुषाराद्रि संकाश गौरं गभीरं। मनोभूत कोटि प्रभा श्री शरीरं॥
स्फुरन्मौलि कल्लोलिनीचारु गंगा। लसद्भालबालेन्दु कंठे भुजंगा॥ ३॥
चलत्कुंडलं भ्रू सुनेत्रं विशालं। प्रसन्नाननं नीलकंठं दयालं॥
मृगाधीशचर्माम्बरं मुण्डमालं। प्रियं शंकरं सर्वनाथं भजामि॥ ४॥
प्रचंडं प्रकृष्टं प्रगल्भं परेशं। अखंडं अजं भानुकोटिप्रकाशं॥
त्रयः शूल निर्मूलनं शूलपाणिं। भजेऽहं भवानीपतिं भावगम्यं॥ ५॥
कलातीत कल्याण कल्पान्तकारी। सदा सज्जनानन्ददाता पुरारी॥
चिदानंद संदोह मोहापहारी। प्रसीद प्रसीद प्रभो मन्मथारी॥ ६॥
न यावद् उमानाथ पादारविन्दं। भजंतीह लोके परे वा नराणां॥
न तावत्सुखं शान्ति सन्तापनाशं। प्रसीद प्रभो सर्वभूताधिवासं॥ ७॥
न जानामि योगं जपं नैव पूजां। नतोऽहं सदा सर्वदा शंभु तुभ्यं॥
जरा जन्म दुःखौघ तातप्यमानं। प्रभो पाहि आपन्नमामीश शंभो॥ ८॥
श्लोक—रुद्राष्टकमिदं प्रोक्तं विप्रेण हरतोषये।
ये पठन्ति नरा भक्त्या तेषां शम्भुः प्रसीदति॥ ९॥

# 'गीताप्रेस' गोरखपुरकी निजी दूकानें तथा स्टेशन-स्टाल

**डाकद्वारा एवं विदेशोंमें पुस्तकें भेजनेकी व्यवस्था केवल गोरखपुरमें है।**

**gitapressbookshop.in से गीताप्रेस प्रकाशन online खरीदें।**

| | | |
|---|---|---|
| इन्दौर-452001 | जी० 5, श्रीवर्धन, 4 आर. एन. टी. मार्ग | (0731) 2526516, 2511977 |
| ऋषिकेश-249304 | गीताभवन, पो० स्वर्गाश्रम | (0135) 2430122, 2432792 |
| कटक-753009 | भरतिया टावर्स, बादाम बाड़ी | (0671) 2335481 |
| कानपुर-208001 | 24/55, बिरहाना रोड | फोन/फैक्स (0512) 2352351 |
| कोयम्बटूर-641018 | गीताप्रेस मेंशन, 8/1 एम, रेसकोर्स | (0422) 3202521 |
| कोलकाता-700007 | गोबिन्दभवन; 151, महात्मा गाँधी रोड | (033) 22686894, |
| गोरखपुर-273005 | गीताप्रेस—पो० गीताप्रेस | (0551) 2334721, 2331250, फैक्स 2336997 |
| | website:www.gitapress.org / e-mail: booksales@gitapress.org | |
| चेन्नई-600010 | इलेक्ट्रो हाउस नं० 23, रामनाथन स्ट्रीट किलपौक | (044) 26615959 ; फैक्स 26615909 |
| जलगाँव-425001 | 7, भीमसिंह मार्केट, रेलवे स्टेशनके पास | (0257) 2226393 ; फैक्स 2220320 |
| दिल्ली-110006 | 2609, नयी सड़क | (011) 23269678; फैक्स 23259140 |
| नागपुर-440002 | श्रीजी कृपा कॉम्प्लेक्स, 851, न्यू इतवारी रोड | (0712) 2734354 |
| पटना-800004 | अशोकराजपथ, महिला अस्पतालके सामने | (0612) 2300325 |
| बेंगलुरु-560027 | 7/3, सेकेण्ड क्रास, लालबाग रोड | (080) 65636566 |
| भीलवाड़ा-311001 | जी 7, आकार टावर, सी ब्लाक, गान्धीनगर | (01482) 248330 |
| मुम्बई-400002 | 282, सामलदास गाँधी मार्ग (प्रिन्सेस स्ट्रीट) | (022) 22030717 |
| राँची-834001 | कार्ट सराय रोड, अपर बाजार, बिड़ला गद्दीके प्रथम तलपर | (0651) 2210685 |
| रायपुर-492009 | मित्तल कॉम्प्लेक्स, गंजपारा, तेलघानी चौक (छत्तीसगढ़) | (0771) 4034430 |
| वाराणसी-221001 | 59/9, नीचीबाग | (0542) 2413551 |
| सूरत-395001 | 2016 वैभव एपार्टमेन्ट, भटार रोड | (0261) 2237362, 2238065 |
| हरिद्वार-249401 | सब्जीमण्डी, मोतीबाजार | (01334) 222657 |
| हैदराबाद-500095 | 41, 4-4-1, दिलशाद प्लाज़ा, सुल्तान बाजार | (040) 24758311, 66758311 |

**स्टेशन-स्टाल—** **दिल्ली** (प्लेटफार्म नं० 5-6); **नयी दिल्ली** (नं० 14-15); **हजरत निजामुद्दीन** [दिल्ली] (नं० 4-5); **कोटा** [राजस्थान] (नं० 1); **बीकानेर** (नं० 1); **गोरखपुर** (नं० 1); **गोण्डा** (नं० 1); **लखनऊ** [एन० ई० रेलवे]; **कानपुर** (नं० 1); **वाराणसी** (नं० 4-5); **मुगलसराय** (नं० 3-4); **हरिद्वार** (नं० 1); **पटना** (मुख्य प्रवेशद्वार); **राँची** (नं० 1); **धनबाद** (नं० 2-3); **मुजफ्फरपुर** (नं० 1); **समस्तीपुर** (नं० 2); **छपरा** (नं० 1); **सीवान** (नं० 1); **हावड़ा** (नं० 5 तथा 18 दोनोंपर); **कोलकाता** (नं० 1); **सियालदा मेन** (नं० 8); **आसनसोल** (नं० 5); **कटक** (नं० 1); **भुवनेश्वर** (नं० 1); **अहमदाबाद** (नं० 2-3); **राजकोट** (नं० 1); **जामनगर** (नं० 1); **भरुच** (नं० 4-5); **वडोदरा** (नं० 4-5); **इन्दौर** (नं० 5); **जबलपुर** (नं० 6); **औरंगाबाद** [महाराष्ट्र] (नं० 1); **गोंदिया** [महाराष्ट्र] (नं० 1); **सिकन्दराबाद** [आं० प्र०] (नं० 1); **विजयवाड़ा** (नं० 6); **गुवाहाटी** (नं० 1); **खड़गपुर** (नं० 1-2); **रायपुर** [छत्तीसगढ़] (नं० 1); **बेंगलुरु** (नं० 1); **यशवन्तपुर** (नं० 6); **हुबली** (नं० 1-2); **श्री सत्यसाईं प्रशान्ति निलयम्** [दक्षिण-मध्य रेलवे] (नं० 1)।

**फुटकर पुस्तक-दूकानें—** **चूरू**-ऋषिकुल ब्रह्मचर्याश्रम, पुरानी सड़क, **ऋषिकेश**-मुनिकी रेती; **बेरहामपुर**-म्युनिसिपल मार्केट काम्प्लेक्स, के० एन० रोड, **नडियाद** (गुजरात) संतराम मन्दिर; **चेन्नई**-12, अभिरामी माल, पुरासावलकम, निकट किलपौक/वेपेरी।

Code 2055▲